तर हे परीक्षित् !

न तथा ह्यघवान् राजन्, पूयेत तप आदिभिः।
यथा कृष्णार्पित प्राणस्तत्पूरुषनिषेवया॥
( भा० ६-१-१६ )

भगवान्लाई आत्मसमर्पण गर्नाले र भगवद्भक्तहरूको सेवा गर्नाले पापी जनहरू तपश्चर्यादिद्वाराभन्दा पनि बढ़ी शुद्ध हुन्छन्।

पापी मानिस भक्तिबाट जत्तिको पवित्र हुन सक्छ त्यस्तो शम, दम, तप आदिबाट हुन सक्दैन। राजन्, तिमी आफ्नो प्राण भगवान्लाई अर्पण गरिदेऊ। पापको वासना हट्ने छ। भगवान् नारायणलाई जसले आफ्नो प्राण अर्पित गर्छ र जो प्रतिश्वास नारायण मन्त्रको जप गर्छ, त्यसलाई पापले कहिल्यै पनि छुनसम्म छुँदैन। जसले आफ्नो प्राण श्रीकृष्णलाई अर्पित गर्दछ, त्यसलाई पाप गर्ने इच्छा कहिले पनि हुँदैन। प्राणार्पणको अर्थ हो प्राण-प्राणबाट, श्वास-श्वासबाट ईश्वरको नाउँ जप गर्नु। प्रत्येक काममा ईश्वरसँग सम्बन्ध बनाइराख। सतत, प्रतिश्वास भागवत स्मरण गर्दै रह्यौ भने पापले छुने छैन र पापमा प्रवृत्ति पनि हुने छैन। गीतामा भनेको छ—'मामनुस्मर युध्य च।' प्रथम भगवान्लाई स्मरण गर अनि फेरि सारा सांसारिक कार्य आरम्भ गर।

जबसम्म परमात्माको ज्ञान हुँदैन, तबसम्म वासना नष्ट हुन सक्दैन। अज्ञानमा वासनाको जन्म हुन्छ। ईश्वर र जगत्का स्वरूपको ज्ञान भएपछि वासना विनष्ट हुन्छ। ईश्वर आनन्दरूप हुन् र संसार दुःखरूप, यस्तो अनुभव भएपछि वासना नष्ट हुन्छ।

वासनाको मूल अज्ञान हो। अज्ञानको नाश हुनाले ज्ञान हुन्छ। ज्ञानद्वारा अज्ञानको नाश हुन्छ। ज्ञानलाई सदा कायम राख्नका निमित्त प्राण कृष्णलाई अर्पित गरिदेऊ। जबसम्म अज्ञानको नाश हुँदैन, तबसम्म वासनाको पनि नाश हुँदैन र जबसम्म वासना नष्ट हुन पाउँदैन, तबसम्म पाप हुन पनि रोकिन सक्दैन।

ज्ञानीले केवल इन्द्रियहरूलाई मात्र विषयहरूतर्फ जानबाट रोक्छ, तर यसबाट वासनाको नाश हुन पाउँदैन। इन्द्रियलाई रोकेर होइन बरु तिनलाई प्रभुका तर्फ फर्काइदिनाले मात्र वासनाको नाश हुन्छ। प्रत्येक इन्द्रियलाई परमात्मातर्फ फर्काइदिनाले वासनाको नाश हुन्छ। मनलाई पवित्र गरी आँखालाई भगवद्रूपमा स्थिर गर।

प्रस्तुत स्कन्धमा तीन प्रकरण छन्—

( १ ) ध्यान प्रकरण—चौध अध्यायहरूमा यस प्रकरणको वर्णन गरिएको छ। चौध अध्यायहरूको अर्थ छ—५ कर्मेन्द्रिय, ५ ज्ञानेन्द्रिय, मन, बुद्धि, चित्त र अहङ्कार। यी सबैलाई परमात्माको ध्यानमा मग्न राखियो भने ध्यान सिद्ध हुन्छ।

( २ ) अर्चन प्रकरण—दुइ अध्यायमा सूक्ष्म अर्चन र स्थूल अर्चनको वर्णन भएको छ।

( ३ ) नाम प्रकरण—गुणसंकीर्तन र नामसंकीर्तनको तीन अध्यायमा वर्णन भएको छ।

परमात्माको मङ्गलमय नाउँको जप गर। ज्ञानमार्गी होस् या भक्तिमार्गी, जो भए पनि ईश्वरको साधना र ध्यान नगरी काम बन्दैन। कुनै एकमा मन स्थिर भएपछि मनको शक्ति बढ्दछ। यसप्रकार तीन साधन बताइएका छन्—ध्यान, अर्चन, नाम यी तीन साधनहरूका सहाराले पाप नाश हुन्छ र नरकमा जानबाट पनि बच्न सकिन्छ। प्रभुको मङ्गलमय स्वरूपको ध्यान, जप गर्ने बानी बसाल र नियमित सेवा गर। नरकमा जान नपरोस् भन्नलाई यी साधनहरूको उपयोग गर।

प्रतिदिन भगवान्‌जीको सेवा गर। उनको नाउँको जप गर। उनको ध्यान गर।

इन्द्रियहरूलाई भक्तिरसमा नडुबाई वासना नष्ट हुने छैन। भक्तिका सहाराले जीव भगवान्‌का नजिक जान्छ। महारानी यमुना भक्तिकी रूप हुन्। उनले जीवको ईश्वरसँग सम्बन्ध जोड़िदिन्छिन्। भक्तिद्वारा जीवको ब्रह्मसम्बन्ध।

ध्यान, अर्चन र नामस्मरण यी तीन साधनहरूद्वारा भक्ति दृढ़ हुन्छ। परमात्माको ध्यान नगरेसम्म मन शुद्ध हुँदैन। व्रतबाट द्रव्यशुद्धि हुन्छ तर मनशुद्धि हुँदैन।

दान गर्नाले भगवान्‌को प्राप्ति हुँदैन। दानको फल हो लक्ष्मी। गीतामा पनि भनेको छ—

**नाहं वेदैर्न तपसा न दानेन न चेज्यया।**

वेद, तप, दान र यज्ञबाट मेरो ( प्रभुको ) प्राप्ति हुन सक्दैन।

परमात्माको ध्यान गर्नाले मनको शुद्धि हुन्छ। अतः प्रतिदिन ध्यान गर्नु जरूरी छ। ध्यानमा एकाग्रता हुन सकेन भने नाम स्मरणको आवश्यकता पर्छ।

यी तीनै एकै साथ हुन सकेनन् भने केही कुरा छैन तर कुनै पनि एकलाई चाहीं समात्नै पर्छ। साधनविना सिद्धि प्राप्ति हुन सक्दैन।

मानिसलाई आफ्नो जीवनलक्ष्य निश्चित गर्नु आवश्यक छ। एउटै ध्येयका विना जीवन, बिनामाझीको डुङ्गा जस्तो हो। ध्येय निश्चित गरेर त्यसलाई सिद्ध गर्नका निमित्त साधनको साधना गर। यस कलिकालमा अरूले केही हुँदैन, त्यसकारण नामस्मरणकै भर पर्नु जरूरी छ। कलिकालमा नामसेवा प्रधान मानिएको छ।

कलियुगमा स्वरूपसेवा छिट्टै फलदायी हुँदैन। स्वरूपसेवा हुन चाहीं उत्तम हो, तर त्यसमा पवित्रताको बड़ो आवश्यकता छ। कलियुगमा मानव यस्तो पवित्र रहन सक्दैन। त्यसकारण कलियुगमा नामसेवा नै मुख्य हो भनेको छ।

अदृश्य वस्तुको नाउँ जप्नाले त्यस नाउँको स्वरूप प्रकट होला। प्रत्यक्ष साक्षात्कार हुने बेलासम्म प्रभुको नामाश्रय लिनेले एक न एकदिन प्रभुको साक्षात्कार गर्न निश्चयै पाउने छ।

सीताजी ध्यानपूर्वक यस्ता प्रकारले नाम स्मरण गर्थिन् जो रूखहरूका पात-पातबाट रामध्वनि प्रतिध्वनित हुन्थ्यो।

परमात्माको नाउँमा निष्ठा हुनु बड़ो कठिन छ। नामस्मरण गर्दा जिब्रो थामिन्छ। पापले जिब्रोलाई समातिराखेको हुन्छ। घरमा पाइला-पाइलामा भगवान्‌को नाउँ लियौ भने पाइला-पाइलामा यज्ञको पुण्य प्राप्त हुन्छ। यसो तर यो देखिन्छ अतिशय सजिलो तर छ बड़ो कठिन।

नाउँमा अटल विश्वास ( निष्ठा ) राख। परमात्माको नाउँको सतत जप गर्ने बानी भयो भने मृत्यु पनि उज्यालो हुन्छ। अन्तकालसम्म ब्रह्मनिष्ठा कायम राखिछाड्न सजिलो छैन। नाम-निष्ठाको सिवाय कलिकालमा आफ्नो उद्धारको अरू कुनै उपाय छैन।

रामनामबाट ढुङ्गा पनि उत्रिएको थियो, तर रामद्वारा फालिएको ढुङ्गो भने उत्रिएन।

एक पटक रामचन्द्रजीलाई मनमा बड़ो आश्चर्य उत्पन्न भयो। उहाँले सोच्नुभयो मेरो नाउँले गर्दा ढुङ्गा उत्रिएको थियो र वानरहरूले समुद्रमा पुल बाँधे। म पनि हेरूँ मेरा स्पर्शले ढुङ्गो उत्रने हो वा होइन। यो सोचेर कसैले पनि थाहा नपाउने गरी यसरी उहाँ समुद्रको किनारमा आउनुभयो— र उहाँले समुद्रमा ढुङ्गा फ्याँक्नु भयो तर सबैका सबै ढुङ्गा पानीमा डुबे। रामचन्द्रजीलाई आश्चर्य भयो यस्तो किन भयो ? मेरो नाउँ लेख्नाले ढुङ्गा उत्रिएको थियो।

हनुमानजीले यो लीला त्यहीं कतै लुकेर हेरिरहेका थिए। श्रीरामचन्द्रजीलाई जब निराश भएर फर्किएको देखे तब हनुमानजीले बाटामा रोकेर दर्शन गरे। रामचन्द्रजीले उनलाई सोध्नुभयो— 'मेरा नाउँ मात्रले पहिले ढुङ्गा उत्रिएको थियो। तर जब आज म स्वयं पानीमा ढुङ्गा फ्याँकिरहेछु भने ती किन डुबे ? आखिर यस्तो किन भयो ?'

हनुमानजीले उत्तर दिए—'यो स्वाभाविकै हो। जसलाई रामचन्द्रजीले स्वयं फ्याँकिदिने, तिरस्कृत गरिदिने त्यसलाई भनौं कसैले उतार्न सक्छ ? जसलाई रामचन्द्रजीले स्वयं फ्याँकिदिने, त्याग गरिदिने त्यसले नडुबेर के गरोस्—ती ढुङ्गाहरूलाई तपाईंले त्याग गरिदिनुभयो, त्यसैले डुबे। जसलाई तपाईंले आफ्नो भन्नु हुन्छ, त्यो कहिले पनि डुब्न सक्दैन। जुन पत्थरहरूबाट समुद्रमाथि पुल निर्माण गरिएको थियो तिनमा श्रीराम ( तपाईंको नाउँ ) लेखिएको थियो र ती उत्रिए। जो शक्ति तपाईंको नाउँमा छ, तपाईंको हातमा छैन।

रामनाममा जो शक्ति छ त्यो स्वयं राममा पनि भएन। आफ्नो जीवनमा श्रीरामले केही मानिसको उद्धार गर्नुभएको थियो, तर उहाँको नाउँले भने आजसम्ममा अनेकौंको उद्धार गरिदियो।

नामजपको महिमा अनौठो छ। जप गर्नाले चिनाका ग्रह पनि बदलिन सक्छन्। हामी अरू के भनूँ, तुलसीदासजी स्वयंले भनेको सुनौं—

**मन्त्र महामनि विषय ब्यालके, मेटत कठिन कुअंक भाल के।**
**भाव कुभाव अनख आलसहू, नाम जपत मंगल दिसि दसहू॥**

जप जनाबाईले गरेकी थिइन्। जनाबाई गोबरका गुइँठा बनाउँथिन् तर कसैले चोरेर लगिदिन्थ्यो। जनाबाईले नामदेवसङ्ग यस विषयमा उजुर गरिन्। नामदेवले भने, 'गुइँठा सबैको

एकनासको हुन्छ ती तिम्रा हुन् भनेर कसरी थाहा पाउने?' जनाबाईले भनिन्—'यो त बड़ो सजिलो कुरा छ। गुइँठालाई कानका नजिक लगेपछि त्यसबाट 'विट्ठल, विट्ठल' यस्तो ध्वनि सुनियो भने भन्ठान ती सबै मेरा हुन्। जनाबाईले गुईंठा बनाउँदाखेरि बड़ो ध्यानका साथ विट्ठलको नाउँको जप गर्दथिन्। तब उनले जनाबाईलाई भने—'नामदेव म होइन, तिमी स्वयं हौ।'

गुइँठा बनाउँदाखेरि जनाबाई विट्ठलको नाम-जपमा यस्तो तल्लीन हुन्थिन्—ती जड़ गुइँठाहरूबाट पनि 'विट्ठल-विट्ठल-विट्ठल'-को ध्वनि सुनिन्थ्यो।

जपको संख्या र फलको चर्चा यसभन्दा अगाड़ि गरिएको छ।

दुइ नियमहरूको पालन सधैं गर—ब्रह्मचर्य र अस्तेय। पाँच करोड़ जप गर्ने मानिसलाई ज्ञान प्राप्त हुन्छ। केवल पढ़िरहनाले मात्र ज्ञानको अनुभव हुन सक्दैन। पुराना सन्त महात्माहरूको चरित्रमा यस्तो कहीं पनि छैन जो उनी अमुक स्थानमा पढ्न भनी गएका थिए। भगवद्-भक्तिबाट चित्त शुद्ध भएपछि उनलाई आन्तरिक स्वयं-स्फुरणबाट ज्ञान प्राप्त हुन्थ्यो। पण्डित शास्त्रहरूका पछि दगुर्छन्, उता मीराबाईको वाणीका पछि शास्त्र दगुर्थ्यो।

तेह्र कोटि जप गर्नाले जीव र ईश्वरको मिलन हुन्छ। कलिकालमा यसका सिवाय अन्य कुनै उपाय छैन। अधिकारी गुरुद्वारा मन्त्र सुनेपछि मन्त्रमा दिव्यशक्ति चढ़ेर आउँछ। अजामिल पनि नामस्मरणबाटै तरेको थियो।

वेदान्तको सिद्धान्तलाई संझिन सजिलो छैन र संझिएपछि तिनको अनुभव गर्न अरू कठिन छ। आत्मा केवल द्रष्टा हो र दुःख केवल शरीरलाई मात्र हुने हो। यस्तो कुरा गर्न र संझन कदाचित् सजिलो होला तर ती सिद्धान्तहरूको अनुभव गर्नु बड़ो कठिन छ।

नाम स्मरण बड़ो सजिलो छ। भक्ति सजिलो र सरल छ। यसले मृत्यु उज्ज्वल हुन्छ। जप विना मृत्यु सुध्रिँदैन।

जीवनमा कथा मार्गदर्शिका छ, त्यसले मनुष्यलाई आफ्नो सूक्ष्म दोषहरूको भान गराउँछ तर उसको उद्धार नाम जप र नामस्मरणबाटै हुन्छ।

भगवान्को नाउँ परमात्माको स्वरूप हो। नाउँको आश्रयबाट पापहरूको पनि विनाश हुन्छ।

सिद्धान्त र दृष्टान्तका विना बुद्धिले अँठ्याउन सक्दैन। त्यसकारण यस सिद्धान्तलाई संझाउनका निमित्त अजामिलको दृष्टान्त दिइन्छ। अजामिल जन्मैदेखि अधम थियो, तर प्रभुको नाउँको आश्रय लिएर उ कृतार्थ भयो।

हामी सबै अजामिल हौं। यो जीव मायामा फँसेको छ। जो मायाबाट एकरूप भएको छ त्यही अजामिल हो। जहाँ पनि जाऊ, माया साथसाथै जानेछ। कोइलाको खानीभित्र गएर हात सफा रहोस् भन्नु सम्भव छैन। संसारमा मायाको संसर्गमा आउनैपर्छ। मायाको स्पर्श गर्नै छ, तर

त्यसको स्पर्श आगोलाई छोएजस्तो गर्नुपर्छ। त्यसलाई विवेक रूपी चिम्टाले समाउनुपर्छ। त्यसो तर आगोविना जीवन व्यवहार चल्न सक्दैन, तर पनि त्यसलाई हातमा कसैले लिँदैन।

माया हाम्रापछि लाग्छे। तर त्यसबाट उम्कनु छ र ईश्वरको पछि लाग्नु छ। हामी ईश्वरका पछि लाग्यौं भने माया हाम्रापछि लाग्न छोड्छे। मायालाई छुनुपर्दा बड़ो सावधान हुनुपर्छ। संसारमा बस्दै रहेपछि मायालाई त्याग गर्न सकिँदैन। कनक र कान्ता यी दुवै मायाकै दुइ रूप हुन्। कोशिश यस्तो हुनुपऱ्यो यी दुवैमा मन नफँसोस्। शरीरले पाप गर वा मनले, दण्ड तर भोग्नै पर्छ।

कनक र कान्ता यी दुइ वस्तुहरूमा माया समर्पित छे। यी दुइका तर्फबाट जसको मन हट्दछ, त्यसको मन मायाका तर्फबाट हट्छ।

अजामिलको अर्थ हेर्नुहोस्। अजाको अर्थ हो माया र मायामा फँसेको जीव अजामिल हो।

अजामिलले अनेक प्रकारको पाप गरेर जीवन-यापन गर्थ्यो। यो अजामिल पहिले मन्त्रवेत्ता, सदाचारी र पवित्र व्यक्ति थियो।

अजामिल एक दिन वनमा गएको थियो। बाटामा एउटा शूद्रलाई वेश्याका साथ काम-क्रीड़ा गरिरहेको उसले देख्यो। वेश्याको फरिया खुस्किएको थियो, त्यसकारण उसको स्वरूप प्रष्ट देखिन्थ्यो। यो दृश्य देखेर अजामिल कामवश भएर कामान्ध भयो। वेश्याको त्यस्तो लोभलाग्दो रूप देखेर अजामिलको मन भ्रष्ट भयो।

अजामिलले एकै पटक वेश्यालाई देखेर मन भ्रष्ट गरायो भने प्रतिरविवार फिल्म हेर्ने मानिसको मन तब कस्तो हुँदो होला? कति मानिसले नियमजस्तो बनाएका हुन्छन् जो प्रतिरविवार फिल्म हेर्ने। कति आफ्ना सानासाना केटाकेटीहरूलाई पनि सँगै लिएर जान्छन्। आफ्नो जीवन जब बिग्रेकै छ, अब तिनको पनि किन नबिग्रने।

पाप पहिले आँखाबाट छिर्छ। आँखा बिग्रियो तब मन बिग्रियो र मन बिग्रेपछि जीवन पनि बिग्रने भो र नाउँ पनि। रावणका आँखा दुष्ट थिए, त्यसकारण उसको नाउँ सदाका निमित्त बिग्रियो। जे पनि पाप यस मनमा आउँछ, आँखाद्वारै आउँछ। आँखाहरू बिग्रिएपछि मन बिग्रिनै भयो।

कामलाई आँखाहरूमा आउन नदेऊ, त्यसो भयो भने त्यो मनमा पनि आउन सक्ने छैन। मानिसले शरीरबाट होइन आँखा र मनबाटै ज्यादा पाप गर्छ।

वेश्यालाई देख्नासाथ अजामिल पशु बनिहाल्यो।

प्रयोजनविना कसैलाई पनि आँखा नदेऊ अर्थात् उसलाई नहेर। आँखाहरूमा रामलाई राख्यौ भने त्यहाँ काम आउन पाउँदैन। आँखाद्वारै सबै पाप भित्र पस्छ।

कामान्ध अजामिल वेश्याको घर गयो, उसलाई संझाई-बुझाई आफ्नो घरमा ल्यायो र पापाचार गर्न थाल्यो।

एक पटक केही साधुजन घुम्दै-फिर्दै अजामिलको घर आए। वेश्याले देखी संत आएका छन्। उसले अन्नदान गरी।

त्यसो तर वेश्याले दिएको अन्नग्रहण गर्न शास्त्रले निषेध गरेको छ, तर साधुलाई थाहै थिएन अन्नदाता नारी वेश्या हो। उनीहरूले खाना तयार गरेर भोजन पनि गरे।

साधुजन तर जसबाट अन्नग्रहण गर्छन्, त्यसको कल्याण पनि गर्छन्।

वेश्याले भनेपछि अजामिलले साधुहरूलाई प्रणाम गर्‍यो। साधुहरूले भने—'तिम्रो घरमा भोजन मिल्यो तर दक्षिणा अहिलेसम्म बाँकी छ।'

तब अजामिलले भन्यो—मेरो यही दक्षिणा हो जो मैले तपाईंहरूलाई लुटिनँ। म कुनै पनि साधुलाई धन दिने होइन। अरू केही इच्छा छ भने माग दिन्छु।

वेश्याले पेट बोकेकी थिई। साधुहरूको इच्छा थियो अजामिलको कल्याण होस्। तब उनीहरूले भने—'तिम्रा घरमा पुत्र भएपछि तिमीले उसको नाउँ नारायण राख्नु।'

अजामिलले साधुहरूलाई सोधे—'महाराज ! मैले मेरो छोराको नाउँ नारायण राखें भने तपाईंहरूलाई के लाभ ?'

साधुहरूले भने—'हाम्रो भगवान्‌को नाउँ नारायण हो। त्यसकारण यो नाउँ सुनेर हामीलाई आनन्द लाग्ने छ र तिमीलाई भगवान्‌को स्मरण भइरहने छ।'

अजामिलले भन्यो—ठीक छ म मेरो छोराको नाउँ नारायण राख्नेछु।

अजामिलको घरमा पुत्रजन्म भयो। त्यसको नाउँ राखियो नारायण। सन्ततिप्रति माता-पिताको प्रेम केही विशेष हुन्छ। अजामिल बारम्बार नारायणलाई बोलाइरहन्थ्यो। नारायण नाउँ लिने उसलाई बानी जस्तै भयो।

अतिशय पापी र अतिशय कामी व्यक्ति आफ्नो पूरा आयु बाँच्न सक्तैन।

अजामिलको अझै १२ वर्ष बाँकी थियो। उसलाई लिन भनी यमदूत आइपुगे। मृत्युकाल नजिक आयो। आफ्नो सानो छोरो नारायणका प्रति उसको अतिशय आसक्ति थियो। त्यसकारण उसको नाउँ लिएर बोलाउन थाल्यो—'नारायण, नारायण।'

भोजन, द्रव्य, काम-सुख, सन्तति र पुस्तकहरूमा यो जीव फँसिरहन्छ। आमाबाबुको मन आफ्ना सन्ततिमा विशेष फँसिरहन्छ।

प्रतिदिनको बानी अनुसार अजामिलले नाउँ लिईलिईकन कति पटक बोलायो। उसको नारायण आएन तर त्यहाँ विष्णुदूत आइपुगे। उनीहरूले यमदूतलाई भने 'अजामिललाई छोड़िदेओ।'

यमदूतहरूले भने—'अजामिलको चरित्र भ्रष्ट छ, त्यसकारण ऊ बाँच्नलाई अपात्र छ।'

विष्णुदूतहरूले भने—'यो सत्य कुरा हो जो अजामिलले पाप गरेको छ तर भगवान्‌को नाउँ लिएर प्रायश्चित्त पनि गरेको छ। त्यसकारण उसको केही पाप डढ़ेर गयो। अब यसलाई बाँच्न देओ। त्यसको आयुको बाह्र वर्ष अझ बाँकी छ।'

यमदूतहरूले भने—'अजामिलले 'नारायण, नारायण' भनेको छ, तर बैकुण्ठवासी नारायण होइन, आफ्नो पुत्र नारायणलाई बोलाएको छ। विष्णुदूतहरूले भने—उसको मुखबाट भगवान्‌को नाउँ अनजानमै निस्किन गयो। आगोमा नजानीकन गोड़ा पऱ्यो भने पोल्छ। यस्तै प्रकारले अनजानबाट यदि प्रभुको नाउँ लिइन्छ भने कल्याणै हुन्छ। भगवान्‌को नाउँ अनजानमा लिएमा पनि त्यसको फल पाइहालिन्छ। अजामिलले नारायण शब्दबाट आफ्नो छोरालाई किन नबोलाइएको होस् त्यस बहानाबाट भगवान्‌का नाउँको उच्चारण तर भइहाल्यो।'

सांकेत्यं परिहास्यं वा स्तोभं हेलनमेव वा।
बैकुण्ठनामग्रहणमशेषाघहरं विदुः॥
पतितः स्खलितो भग्नः संदष्टस्तप्तः आहतः।
हरिरित्यवशेनाह पुमान्नार्हति यातनाम्॥

ठूलठूला महापुरुष पनि जान्दछन् संकेतबाट, परिहासबाट तानको आलापको समय कसैको अवहेलना गर्दा पनि यदि भगवान्‌को नाउँ उच्चारण हुन्छ भने त्यसको पाप नष्ट हुन्छ।

जो मानिस लड्दाखेरि, गोड़ा चिप्लँदाखेरि, अङ्ग-भङ्ग भएमा, ज्वरोको दाहबाट, चोट लागेमा याने जस्तोसुकै विवशतावश भगवान्‌को नाउँको 'हरि, हरि' शब्दको उच्चारण गर्छ, त्यो नरकको याचनाको भागी हुँदैन।

लड़ेमा जतिसुकै हानि भए पनि 'हाय-हाय' नभन 'हरि-हरि' भन।

चूह्लामा उम्लिएको दूध छचल्किन थाल्छ तब हाम्रा आमाहरू अहा ! भन्न थाल्छन्। तर 'अब अहा ! अहा ! भनेर के हुने हो।' 'हरि ! हरि !' भन। अनजानमा पनि 'हरि-हरि' भन्नाले यज्ञको फल अवश्यै पाइन्छ। होइन भने अग्निलाई कसले आहुति दिन्छ। 'अहा होइन' 'हरि' भन। यसो गर्नाले अनजानमा पनि भगवान्‌को स्मरण हुनेछ र जप पनि हुनेछ।

वाल्मीकि रामायणमा यसप्रकार लेखिएको छ—मृतात्माका पछि 'हाय-हाय' धेरै गर्नाले मृतात्मालाई कष्ट हुन्छ, उसलाई दुःख हुन्छ, 'हरि-हरि' बोल्नाले त्यसको फल मृतात्माले पाउँछ।

विष्णुदूतहरूले अजामिललाई यमदूतहरूका बन्धनबाट मुक्त गरिदिए र उद्धार भयो।

अपमृत्यु टार्न सकिन्छ तर महामृत्यु सकिँदैन। अल्पायुको शेष भएपछि पापका कारणले आउने अपमृत्युलाई सत्कर्मद्वारा टार्न सकिन्छ।

अजामिलको अपमृत्यु टऱ्यो।

अजामिलले ओछ्यानमा सुती-सुती सबै कुरा सुनिरहेको थियो। सबै कुरा सुनेर उसलाई अतिशय पश्चात्ताप भयो। हृदयदेखि प्रायश्चित्त गर्नाले उसको सारा पाप डढ्यो। त्यसपछि उसले सबै कुरा छोड़ेर भगवत् स्मरण गर्न थाल्यो।

पश्चाताप गर्नाले अतिशय पापीको जीवन पनि बदलिन्छ, त्यो सुध्रिन्छ र यसै जीवनमा मुक्ति पाउँछ। त्यसकारण कुनै पनि पापीको तिरस्कार नगर। पापको मात्र तिरस्कार गर।

हृदयदेखि नै पश्चात्ताप गर्नाले पाप डढ़ेर जान्छ। प्रायश्चित्तले चित्तको शुद्धि गर्छ।

त्यसपछि अजामिल नीरस भोजन गर्न थाल्यो।

जसको भोजन सरस हुन्छ, त्यसको भजन नीरस हुन्छ र जसको भोजन नीरस हुन्छ त्यसको भजन सरस हुन्छ।

जीवन, धन कुटुम्बलाई होइन, श्रीकृष्णलाई हो।

अजामिलको बुद्धि अब त्रिगुणात्मिका प्रकृतिबाट टाढ़ा भएर भगवान्‌को स्वरूपमा स्थिर भयो, उसलाई लिन भनी विमान लिएर पार्षद आए। विशिष्ट मान भनेको विमान हो। अजामिल विचार गर्छ त्यसो तर मैले अनेक पाप गरेको थिएँ र सद्‌गति पाएँ। नाउँको निष्ठा राख्नाले मात्रै यो फल भयो।

अजामिलले 'नारायण-नारायण' को जप गरेर जिब्रो र जीवनलाई पवित्र बनायो।

जिब्रोलाई सम्झाउनाले त्यो सुध्रिन्छ। सकरकन्द माग्यो भने त्यसलाई तीतो नीमको रस देऊ। त्यसले व्यर्थको भाषण नै धेरै गर्छ, निरर्थक बकबक गरिरहन्छ, भगवान्‌को नाउँ कहिले लिँदै लिँदैन। जिब्रोलाई यदि नीमको रस पिलाउँछौ भने त्यसमा रामको नाउँ बस्नेछ।

भगवान्‌को भक्ति गर्नेहरूले इहलोक र परलोक दुवैमा मान पाउँछन्।

भगवान्‌को कीर्तन गर्नाले अजामिल भगवद्‌धाममा पुग्यो। भगवान्‌को नाउँको आश्रय लिएर तऱ्यो। अजाको अर्थ पहिले माया भनेको थियो तर अब भगवन्नामको सहारा लिएपछि अजाको अर्थ भयो ब्रह्म। अजामिल अब ब्रह्मको साथ मिलेर ब्रह्मरूप भयो। आज जीव र शिव एक भए।

अजामिल शब्दका दुइ अर्थ छन्—( १ ) मायामा फँसेको जीव तथा ( २ ) ब्रह्मरूप भएको जीव। मायाको वर्णन कैयौं किसिमले गरेको छ।

श्रीमद् शङ्कराचार्यले मायाको व्याख्या गर्दै भन्नुभएको छ कञ्चन र कामिनीमा फँसेको व्यक्तिलाई मायामा फँसेको भनी जान—

किमत्र हेयं? कनकं च कान्ता।

यस जगत्‌मा कुनचाहिँ वस्तुहरू त्याज्य छन्? उत्तर दिँदै भन्नुहुन्छ 'जीवलाई अधोगतितिर लैजानेवाला हुन् कञ्चन र कामिनी। यी दुइमा जो फँस्यो, जान त्यो मायामा फँसिगयो।'

मणिरत्नमालाका प्रश्नोत्तर अति उत्तम छन्। त्यसका एक-एक शब्दमा उपदेश भरिएका छन्।

बद्धो हि को वा विषयानुरागी का वा विमुक्तिर्विषये विरक्तः।
को वास्ति घोरो नरकः स्वदेहः तृष्णाक्षयः स्वर्गपदं किमस्ति॥

बन्धनयुक्त को छ ? जो पाँच विषयमा आसक्त छ। स्वतन्त्र को हो ? जो विषयहरूका तर्फ वैराग्यको दृष्टि राख्नेवाला हो। घोर नरक कुनचाहिँ हो ? स्वदेह भनेको घोर नरक हो। यस देहमा सुन्दरता कहाँ छ ? यो मासु, रगत आदि दुर्गन्धयुक्त पदार्थहरूले भरिएको छ। स्वर्गको सोपान ( सिँढ़ी ) कहाँ छ ? सबै तृष्णाहरूको क्षय स्वर्गको सोपान हो।

**को वा दरिद्रो हि विशाल तृष्णः, श्रीमांश्च को यस्य समस्ततोषः।**

दरिद्र को हो ? जसको तृष्णा विशाल छ। श्रीमन्त को हो ? जो सदाका निमित्त सम्पूर्ण सन्तोषी छ।

**को दीर्घरोगो भव एव साधो, किमौषधं तस्य विचार एव।**

कुनचाहिँ रोग बढ्ता कष्टदायी छ ? जन्मधारणको रोग अत्यधिक कष्टदायी छ। रोगको औषधि क्या हो ? परमात्माका स्वरूपको बारम्बार चिन्तन र स्मरण गर्नु यस भवरूपी रोगको औषधि हो।

अब अजामिल शब्दको दोस्रो अर्थ पनि हेरौं।

अजको अर्थ हो ईश्वर। ईश्वरमा, ब्रह्ममा विलीन भएको जीव मात्र अजामिल हो।

साधु हुन कठिन छ तर सरल जीवनमा साधु बन्न सकिएला। साधु हुने होइन तर सरल हुने आवश्यकता छ।

जसले रसहरूलाई जितेको छ, उसले जगत्‌लाई पनि जितेको छ भन्ठान।

**"जितं सर्वं जिते रसे"।**

लौकिक सुखको प्रयत्न सफल भयो भने मान ईश्वरको कृपा रहनेछ। उता लौकिक सुखको इच्छा र प्रयत्न असफल भएमा सम्झ ईश्वरको कृपा भएको छ। यसको कारण यो हो लौकिक सुखहरूमा फँसेको व्यक्ति ईश्वरभजन गर्न पाउँदैन।

अजामिलको जीवन सुध्रियो। अन्त्यमा ऊ विमानमा बसी बैकुण्ठधाम गयो। अजामिल गयो तर साथसाथै संसारलाई उपदेश पनि दिँदै गयो अतिशय पापीलाई पनि निराश हुनुपर्ने भएन। पापीले यस्तो कहिल्यै सोच्नु हुन्न नाम जपका निमित्त आवश्यक शुद्धता या निर्मलता आफूमा छैन भनेर। त्यसकारण रामनाम जप्नाले के लाभ होला ? यदि ऊ यस्तो सोच्दछ, तब उसले यो बिर्सियो जो हर प्रकारको शुद्धिको प्राप्तिका निमित्त रामनामको जप एकमात्र उपाय हो। अति पापी भएपनि भगवान्‌को नामजपले पापलाई भस्मीभूत गरिदिन्छ।

**श्रीकृष्ण गोविन्द हरे मुरारे, हे नाथ नारायण वासुदेव।**

यो महामन्त्र हो। अर्थको ज्ञानसहित यस मन्त्रको जप गर।

*श्रीकृष्ण* : हे प्रभो ! तपाईं सबको मनलाई आकर्षित गर्नुहुन्छ। त्यसकारण तपाईंले मेरो मन पनि आकर्षित गरिदिनुहोस्।

*गोविन्द* : इन्द्रियहरूको रक्षक भगवान्, तपाईंले मेरा इन्द्रियहरूलाई स्वयंमा लीन गरिदिनुहोस्।

*हरे* : हे दुःखहर्ता, मेरा दुःखहरूलाई पनि हरण गरिदिनु हवस्।( जसको मन भगवान्मा लीन हुन्छ त्यसका सारा दुःखहरू हरण भइहाल्छन्।)

*मुरारे* : हे मुर राक्षसका विजेता, मेरा मनमा बसेका काम, क्रोधादि राक्षसहरूको नाश गरिदिनुहोस्।

*हे नाथ* : तपाईं नाथ हुनुहुन्छ र म तपाईंको सेवक।

*नारायण* : म नर हुँ र तपाईं नारायण हुनुहुन्छ।

*वासुदेव* : वसुको अर्थ हो प्राण। मेरो प्राणको रक्षा होस्। मैले आफ्नो मन तपाईंका चरणमा अर्पित गरिदिएँ।

प्राचीनबर्हि राजाकहाँ प्रचेता नामक दश छोराहरू भएका थिए। तिनका दक्षनामक एक छोरा थिए। प्रजापति दक्षले 'हंसगुह्य' स्तोत्रद्वारा आदिनारायण भगवान्को आराधना गरे तब उनीकहाँ हर्यश्व नामक दशहजार पुत्र रत्न भए। दक्षले उनलाई प्रजा उत्पन्न गर्न आज्ञा दिए तर नारायण सरोवर जलको स्पर्श गर्नाले उनलाई परमहंस धर्मको आचरण गर्ने इच्छा भयो।

त्यहाँ उनलाई नारदजी भेटिए। दक्षका यी दशहजार छोरालाई नारदजीले जटिल प्रश्न सोधे। यी पुत्रहरूले ती प्रश्नहरूको उत्तर सोचेर दिए। तिनमध्येका केही प्रश्नोत्तर हामी हेरौं।

*प्रश्न* : यस्तो कुन देश छ, जहाँ एउटै पुरुष हुन्छ ?

*उत्तर* : ईश्वररूप पुरुष यस देहरूप देशमा बस्छ।

*प्रश्न* : यस्तो कुनचाहिँ गुफा छ, जसमा प्रवेश गर्न सकिन्छ तर बाहिर आउन सकिँदैन।

*उत्तर* : प्रभुको चरण। त्यहाँबाट कोही फर्केर आउन सक्दैन, ( यद्गत्वा न निवर्तन्ते )।

*प्रश्न* : त्यो कुनचाहिँ नदी हो जो परस्पर विरुद्ध दिशामा बग्छ।

*उत्तर* : संसार। संसाररूपी नदीमा प्रवृत्तिले विषयहरूतर्फ खिँचेर लैजान्छ र निवृत्तिले प्रभुका तर्फ बगाएर लैजान्छ।

*प्रश्न* : शिरमा जो चक्र घुमिरहेछ, त्यो कुनचाहिँ चक्र हो ? के हो ?

*उत्तर* : सबै जीवका शिरमा कालचक्र घुमिरहेछ।

नारदजीका कूटप्रश्नहरूको चर्चा-विचार गर्दा ती दश हजार पुत्र मोक्षमार्गका तर्फ प्रवृत्त भए, सबैलाई नारदजीले संन्यासको दीक्षा दिए।

जब दक्षका सबै पुत्र प्रवृत्तिमार्गका तर्फबाट भ्रष्ट भएका थिए तब उनले दशहजार पुत्र अरू उत्पन्न गरे। ती पनि नारदजीका उपदेशबाट निवृत्तिपरायण भए। यस्तो भएपछि प्रजापति दक्षले रिसाएर नारदजीलाई श्राप दिए—'तिमी कहिले पनि एक थलामा बस्न पाउने छैनौ, तिमीलाई सदा घुमिरहनु परोस्।'

नारदजीले दक्षको श्राप स्वीकार गरे र दक्षलाई भने—'म तिमीलाई श्रापको बदलामा वरदान दिन्छु तिम्रा घरमा धेरै पुत्रीहरू उत्पन्न होऊन्।' त्यसकारण उनलाई संन्यास दिने प्रश्नै रहेन ?

नारदजीले दक्षलाई आशीर्वाद दिए।

जसले श्रापको बदला आशीर्वाद दिन्छ, उही सन्त हो। सहनशीलताको निर्वाह नै साधुता हो। सहन गर्नु सन्तहरूको धर्म हो।

जड़ चेतन सबैमा जो ईश्वरको अनुभव गर्छ, त्यसको मनमा रागद्वेष कहिल्यै उत्पन्न हुँदैन।

ब्रह्माले सबै इन्द्रियहरू बहिर्मुखी बनाइदिए। यी इन्द्रियहरू जब अन्तर्मुखी हुन्छन्, तब आनन्द प्राप्त हुन्छ र त्यसै वेलामा जीव र शिवको मिलन पनि हुन्छ। जबसम्म बाह्यद्वार बन्द गर्दैनौ तबसम्म भित्रको द्वार खुल्न सक्दैन, शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन् ! फेरि दक्षका घरमा साठी कन्याहरूको जन्म भयो। यिनीहरूमध्ये अदितिका घरबाट सन्तानहरू भए। यिनमध्ये एउटाको नाम त्वष्टा थियो। यस प्रजापति त्वष्टाका पुत्र भए विश्वरूप।

एक दिन जब इन्द्र सिंहासनमा बसेका थिए त्यसैबखत त्यहाँ वृहस्पति आइपुगे। आफ्ना सारा देवहरूका गुरु वृहस्पतिको आगमन भयो र पनि इन्द्रले उठेर उनको स्वागत गरेनन्। वृहस्पति मानको अपेक्षा गर्छन्, धनको होइन। यस्तो अपमानको कारण वृहस्पतिले देवहरूलाई त्यागिदिए र इन्द्रलाई श्राप दिए 'तँ दरिद्र हुनेछस्।'

सम्पत्तिका मदमा होशहवास र ज्ञान-मान बिर्सने व्यक्ति दरिद्र भएपछि डर लाग्छ।

दैत्यहरूले तब यसलाई शुभ प्रसङ्ग मानेर देवहरूका साथ युद्ध शुरू गरिदिए। उनीहरूले स्वर्गलाई जितिदिए। पराजित देवगण ब्रह्माछेउ गए। ब्रह्माले देवताहरूलाई कड़ा किसिमले दोषी ठहराउनुभयो, किनभने त्यो पराजय उही ऋषिको अपमानको फल हो। उहाँ ऋषि-ब्राह्मणहरूको सेवा गर्नलाई आदेश दिएर भन्नुभयो—'कुनै ब्रह्मनिष्ठ ब्राह्मणलाई गुरु थापेर त्यसलाई वृहस्पतिको आसन देऊ।'

देवहरूले सोधे—यस्तो ब्रह्मनिष्ठ ब्राह्मण को होला ?

ब्रह्माले भने—'प्रजापति त्वष्टाका पुत्र विश्वरूप ब्रह्मनिष्ठ छन्।'

विश्व याने जगत्। विश्व अर्थात् विष्णु भगवान्। विश्वका प्रत्येक पदार्थमा जसले विष्णुको दर्शन गर्छ, त्यही विश्वरूप हो।

जस्ता किसिमबाट बाँड़ाको दृष्टिमा आकारको होइन, सुवर्णको महत्त्व बढ़ी हुन्छ, सोही प्रकार ज्ञानी पुरुषले ब्रह्माकारलाई महत्त्व दिँदैनन्। आकार मध्येबाटै विकार उत्पन्न हुन्छ।

विश्वरूपले सबै जड़-चेतनमा ईश्वरको झलक देख्थे।

शत्रुलाई पनि शत्रुभावले होइन ईश्वरभावले हेर। सबैका प्रति सद्भाव राख्न कठिन छ। बाटामा कुनै सौभाग्यवती नारीको दर्शन पाइयो भने लक्ष्मीजीको भावना मनमा उत्पन्न हुन्छ तर विधवा भेटिई भने झोंक्किएर आँखा बटारेर हिँड्छन्। तिनी यो विचार गर्दैनन् विधवा पनि गङ्गा जस्तै पवित्र छ।

विश्वरूप ब्रह्मज्ञानी थिए, ब्रह्मनिष्ठ पनि थिए। ब्रह्मद्रष्टाले मात्र ब्रह्मोपदेश गर्न सक्छ। यसै ब्रह्मरूपका सहाराद्वारा देवहरूले दैत्यहरूलाई हराए।

दैत्य को हो ? काम, क्रोध आदि भनेकै दैत्य हो।

ब्रह्माका आदेशबाट देवगण विश्वरूपकहाँ आए। उनीबाट देवहरूले 'नारायण-कवच' पाए। यसैका सहाराले देवहरूलाई आफ्नो राज्य फेरि हात लाग्यो, जुन उनीहरूले वृहस्पतिको अपमान गरेर गुमाएका थिए। 'नारायण-कवच' बाट समर्थ भएर इन्द्रले असुरहरूका सेनालाई परास्त गरे।

योद्धा लड़ाइँमा ज्यादा फलामको कवच धारण गर्दछ। यसै प्रकार 'नारायण-कवच' मन्त्रात्मक कवच हो।

यस मन्त्रलाई जप गर्नेले सबैभन्दा पहिले अङ्गन्यास गरोस्, करन्यास गरोस्, शरीरका प्रत्येक अङ्गको न्यास गरेर यस मन्त्रको जप गर्नुपर्छ जो 'नारायण-कवच' भनिन्छ।

**जलेषु मां रक्षतु मत्स्यमूर्तिर्यादो गणेभ्यो वरुणस्य पाशात्।**
**स्थलेषु मायावटुवामनोऽव्यात् त्रिविक्रमः खेऽवतु विश्वरूपः॥**

(भा० ६-८-१३)

जलभित्र बस्ने जलचर जन्तुहरूबाट र वरुणको पाशबाट मत्स्यमूर्ति भगवान्ले मेरो रक्षा गरून्। मायाबाट ब्रह्मचारीरूप धारण गर्ने वामन प्रभुले भूमिले पनि मेरो रक्षा गरून्। आकाशमा त्रिविक्रम प्रभुले मेरो रक्षा गरून्।

**तेनैव सत्य मानेन सर्वज्ञो भगवान् हरिः।**
**पातु सर्वैः स्वरूपैनः सदा सर्वत्र सर्वगः॥**

(भा० ६-८-३३)

यो कुरा निश्चित रूपले सत्य छ। यसकारण सर्वज्ञ, सर्वव्यापक भगवान् श्री हरिः सदा सर्वत्र सर्वस्वरूपहरूबाट हाम्रो रक्षा गरून्।

नारायण-कवचको यो अन्तिम श्लोक महत्वपूर्ण छ। याद गर्नुपर्ने छ। डर लागेमा, मनोद्वेगका समयमा यसलाई पाठ गर। मेरा एउटै भगवान् अनेक स्वरूप धारण गरेर क्रीड़ा गरिरहेछन्।

स्वप्नमा एकबाट अनेकको उत्पत्ति हुन्छ। स्वप्नको साक्षी कल्पित हुन्छ। जागृतावस्थामा जे पनि देखा पर्छ, ती सबै एउटैबाट निष्पन्न भएका हुन्। जब तिमीले यस्तो मानौला यो सारा जगत् ईश्वररूप हो, तब तिमी निर्भय हुन सक्नेछौ।

'नारायण-कवच' को आश्रय लिएर देवहरूले दैत्यहरूको नाश गरेर स्वर्गको राज्य फेरि प्राप्त गरे।

विश्वरूपको मातृगृह दैत्य कुलमा थियो। उहाँ सबैमा ब्रह्मनिष्ठा राख्नुहुन्थ्यो। राक्षसमा पनि ईश्वरको स्वरूपको साक्षात्कार गर्थे। उनलाई अभेदभाव सिद्ध भइसकेको थियो। त्यसकारण उनी यज्ञमा दैत्यहरूलाई पनि आहुति दिन्थे।

सबैमा 'म' छ। यस 'म' लाई व्यापक बनाऊ। 'म' लाई संकुचित तुल्यायौ भने दुःखी हुनेछौ।

विश्वरूपको ब्रह्मनिष्ठा यतिसम्म सिद्ध भएको थियो जो उनी राक्षसमा पनि परब्रह्मको दर्शन गर्थे।

उनको मातृगृह असुरकुलमा हुनाको कारण विश्वरूप लुकी-छिपी असुरहरूलाई यज्ञको भाग दिने गर्थे। इन्द्रलाई यो कुरा मन परेन। यसले गर्दा इन्द्रादि देवहरूको ब्रह्मभावना सिद्ध भएन। दैत्यहरूलाई यज्ञभाग नदेऊ भन्दा-भन्दै पनि गुरु मान्दैनथे। त्यसकारण इन्द्रले विश्वरूपको शिर काटिदिए। यो समाचार सुनेर प्रजापति त्वष्टालाई बड़ो दुःख भयो। उहाँले सङ्कल्प गर्नु भयो—म यस्तो यज्ञ गर्नेछु जसबाट इन्द्रलाई मार्नेवाला पुत्र उत्पन्न होस्।

सकाम कर्ममा अलिकति क्षति भयो भने पनि विपरीत फल मिल्छ। परमात्मालाई प्रसन्न गर्ने इच्छाले कर्म गर। कुनै काम गर्दा पनि यस्तो इच्छा नगर जगत्‌ले मेरो प्रशंसा गरोस्। जगत्‌ले तर श्री रामचन्द्रजीको पनि निन्दा गरेको थियो। लोककल्याणको निमित्त मात्र प्रभु श्रीरामले मानव-शरीर धारण गर्नुभएको थियो, कैयौं किसिमका दुःख सहनु भयो र पनि जनताले उहाँको कदर गरेन।

तिमीले यस्तो निश्चय गर मेरा भगवान्‌लाई जे असल लाग्छ मलाई पनि त्यही गर्नुछ। सकाम कर्ममा भएको अलिकति क्षति पनि अनर्थकारी हुन्छ। निष्काम कर्ममा क्षति क्षम्य छ, तर सकाम कर्ममा अलिकति पनि क्षति अक्षम्य हुन्छ।

यज्ञ मन्त्रबाट अलिकति यस्तो क्षति भयो जसले इन्द्रलाई मार्ने पुत्रका बदला इन्द्रको हातबाटै मारिने पुत्र उत्पन्न भयो। मन्त्र थियो—

**इन्द्रशत्रो विवर्धस्व, इन्द्रशत्रो विवर्धस्व।**

यस मन्त्रलाई भन्दाखेरि ऋत्विज्हरूले 'इन्द्र' शब्दलाई उदात्त गरिदिए र 'शत्रो' शब्दलाई अनुदात्त गरिदिए। यसो हुँदा शब्दार्थमा परिवर्तन भइहाल्यो र परिणामतः इन्द्रघातक पुत्रको अपेक्षा इन्द्रद्वारा मारिनेवाला पुत्र उत्पन्न भयो।

यसैकारणले वेदमन्त्रको अधिकार सबैलाई दिइएको छैन। मन्त्रोच्चारण वा मन्त्रपाठमा क्षति भएपछि अनर्थ हुन्छ। केवल सात्त्विक विद्वान् ब्राह्मणले वेदको शुद्ध पाठ गर्न सक्छन्।

भागवतमा कर्मको निन्दा गरिएको छ। भागवतशास्त्रमा केवल भक्तिको मात्र महिमा होस् र कर्मलाई गौण मानिएको हो भन्ने कुरा होइन। हो, सकाम कर्मलाई गौण मानेको छ। कर्म गर्दाखेरि एकै हेतु हुनुपर्छ। त्यो हो भगवान्‌लाई प्रसन्न पार्नु छ।

यज्ञकुण्डभित्रबाट वृत्तासुर उत्पन्न भयो। उसले देवहरूलाई सताउन थाल्यो। देवहरूको सबै अस्त्र-शस्त्र उसका सामुन्ने प्रभावहीन सिद्ध भए। आत्तिएर देवहरू परमात्माका शरणमा गए र परमात्मासङ्ग प्रार्थना गर्न थाले।

परमात्माले देवहरूलाई भने—'यदि दधिचि ऋषिका हाड़द्वारा वज्र बनाउन सक्छौ भने त्यस वज्रले वृत्तासुर मार्न सकिन्छ।'

साथसाथै भगवान्‌ले देवहरूलाई यो पनि भन्नुभयो मलाई प्रसन्न पारेर भक्तिजस्तो श्रेष्ठ वरदान नमागेर तिमीहरूले एक तुच्छ वस्तु माग्यौ।

प्रभुले आफ्नो दिव्य तेज वज्रमा निहित गरिदिनुभयो।

वृत्तासुरलाई मार्नका निमित्त इन्द्र वज्र लिएर युद्ध गर्न हिंड़े।

त्रासदायक वृत्ति पनि वृत्तासुर हो। वृत्ति अन्तर्मुख भएमा मात्र जीवको ईश्वरसङ्ग मिलन हुन सक्छ। कुनै पनि अवस्थामा ईश्वरसङ्ग विमुख नहोऊ। वृत्तिको बहिर्मुख दुःखद छ, त्रासदायक छ। यसले देवहरूलाई पनि त्रास दिन्छ।

मनलाई स्थिर राख्नु छ भने आँखा पनि एकै ठाउँमा स्थिर राख। वृत्ति बहिर्मुख भएमा कथामा या मन्दिरमा दर्शन गर्न आनन्द पाईंदैन। बहिर्मुख वृत्तिलाई ज्ञानरूपी वज्रद्वारा नष्ट गरिदेऊ।

ज्ञान प्रधान बल हो। यसका सहाराले विषय वृत्तिहरूलाई, आवरण वृत्तिहरू ( वृत्तासुर )-लाई मार। तब मात्र इन्द्रियहरूका अधिष्ठाता देवहरूले शांति पाउँछन्। भागवतमा पहिले चरित्रको वर्णन हुन्छ र उपसंहारमा सिद्धान्त भनिन्छ।

ब्रह्मनिष्ठा यस्तो अचल हुनुपर्छ जो अन्य विषयहरूमा रमाउनतिर मनै नजाओस्। मानिस विषयहरूमा आनन्द खोज्दछ त्यसकारण ऊ भेटिंदैन। प्रभुको भजनमा वज्र जस्तो अटल निष्ठा राख।

दधीचि ब्रह्मनिष्ठ थिए, त्यसकारण उनका हाड़मा पनि दिव्यता थियो।

एक करोड़ जप गरेपछि मालामा दिव्यता आउँछ। शास्त्रहरूमा भनेको छ—मन्त्र, मूर्ति र मालालाई कहिल्यै पनि नसाट। प्रत्येक मन्त्रमा दिव्यशक्ति छ। जुन पनि मन्त्र पाएका छौ, त्यसमा दृढ़ निष्ठा राखेर जप गर। मूर्ति पनि कहिल्यै नसाट।

जुन स्वरूपमा रुचि छ त्यसमा पूर्णतः निष्ठा राख। त्यसैमा प्रभु प्रकट हुनुहुन्छ।

वज्र धारण गरेर इन्द्र वृत्तासुरसँग युद्ध गर्न गए। दुवैमा भयङ्कर युद्ध भयो।

वृत्तासुर पुष्टिभक्त अर्थात् अनुग्रह हो। इन्द्रको हातमा वज्र छ, जसमा नारायण हुनुहुन्छ, तर इन्द्रले देख्न सक्दैनन्। वृत्तासुरले देख्दछ किनभने ऊ पुष्टिभक्त हो। ऊ इन्द्रलाई भन्दछ—'इन्द्र, तिमीले वज्रको प्रहार ममाथि चाँडै गर। जीत तिम्रै होस्। तर तिम्रो अपेक्षा मैमाथि भगवान्‌को कृपा ज्यादा छ।'

लौकिक सुखको प्राप्तिको प्रयत्न सफल भएन भने सम्झ मलाई प्रभुले अलौकिक सुख दिन लाग्नुभएको छ।

लौकिक सुख पाएपछि जीव ईश्वरसँग विमुख हुन्छ।

श्रीकृष्णको नाम स्मरण लौकिक सुखको प्राप्तिका निमित्त कहिल्यै नगर। लौकिक सुखमा विघ्न उपस्थित भएमा पनि संझ मलाई प्रभुले अलौकिक सुख दिन थाल्नुभएको छ। जुन जीवमाथि प्रभुको कृपा विशेष हुन्छ, त्यसको लौकिक सुखको प्राप्तिको प्रयत्न भगवान्‌ले सफल हुन दिनुहुन्न। जुन जीवमाथि उहाँ साधारण कृपा गर्नुहुन्छ त्यसलाई सुख दिनुहुन्छ।

वृत्तासुरले इन्द्रलाई भने—'इन्द्र, जीत तिम्रै हुने हो र स्वर्गको राज्य पनि तिमीले मात्रै पाउने छौ तर म भगवान्‌को त्यस धाममा जानेछु जहाँबाट मेरो पतन कहिल्यै पनि हुने छैन, तिम्रो स्वर्गमा पतन हुन सक्छ तर मेरो हुँदैन। मलाई लौकिक सुख नमिलोस् तापनि म प्रभुको धाममा जानेछु।'

वृत्तासुर श्रीहरिको स्तुति गर्न थाल्यो। यस स्तुतिको तेस्रो श्लोकलाई कति महात्माहरूले आफ्नो मन परेको श्लोक मानेका छन्।

अहं हरे तव पादैकमूलदासानुदासो भवास्मि भूयः।
मनः स्मरेतासुपतेर्गुणांस्तेगृणीत वाक् कर्म करोतु कायः॥
न नाकपृष्ठं न च पारमेष्ठ्यं न सार्वभौमंरसाधिपत्यम्।
न योग सिद्धिरपुनर्भवं वा समञ्जस त्वा विरहय्यकांक्षे॥
अजातपक्षा इव मातरं खगाः स्तन्यं यथा वत्सतराः क्षुधार्ता।
प्रियं प्रियेव व्युषितं विषण्णा मनोऽरविन्दाक्ष विदृक्षते त्वाम्॥

ममोत्तम श्लोकजनेषु सख्यं संसारचक्रे भ्रमतः स्वकर्मभिः।
स्वन्माययाऽऽत्मजदारगेहेष्वासक्तचित्तस्य न नाथ भूयात्॥
(भा० ६-११-(२४-२७)

प्रभो ! तपाईंले ममाथि यस्तो कृपा गरिदिनुहोस् जसबाट प्रभुको चरण कमलको अनन्य भावले सेवा गर्ने अवसर आगामी जन्ममा पनि मैले पाउन सकूँ। प्राणवल्लभ, मेरो मन तपाईंको मङ्गलमय गुणहरूको स्मरण गर्दै रहोस्, मेरो वाणीले तपाईंको गुणगान गर्दै रहोस् र मेरो शरीर तपाईंको सेवामा संलग्न रहोस्।

हे भगवन् ! तपाईंलाई छोड़ेर मलाई स्वर्ग, ब्रह्मलोक, भूमण्डल, रसातल, योगसिद्धिको कुरा छौड़ौं मोक्षको पनि इच्छा छैन तपाईंको अनुपस्थितिमा यी सबैलाई म के गरूँ। तपाईंलाई छोड़ेर मलाई अरू केही पनि चाहिँदैन।

हे कमलनयन ! तपाईंको दर्शनका निमित्त मेरो मन त्यस्तै प्रकारले व्याकुल भइरहेछ जस्ता प्रकारले प्वाँखविनाको पक्षीले आफ्नी आमाको बाटो हेरिरहन्छ, भोकाएको बाच्छाले आफ्नी माताको प्रतीक्षा गर्छ, विरहिणी पत्नी आफ्नो परदेशवासी पतिसँग भेट्न उत्कण्ठित हुन्छिन् प्रभुमिलनको आतुरता कति उत्कट हुनुपर्छ, यो कुरा यी दृष्टान्तहरूद्वारा बताइएको छ।

प्रभो ! मलाई मुक्तिको इच्छा छैन। आफ्ना कर्महरूको फलस्वरूप मलाई जन्म-मृत्युका चक्रमा बारम्बार फँस्नु परे पनि त्यसको मलाई वास्ता छैन तर म जहाँ जाऊँ, जुनसुकै योनिमा जन्मूँ त्यहाँ मलाई भगवान्का प्रिय भक्तजनहरूको मैत्री पाउँदै रहूँ। भगवन्, म यति मात्र चाहन्छु तपाईंको मायाको कारण शरीर, घर, स्त्रीपुत्रादिमा आसक्त मानिसहरूका साथ कहीं पनि कुनै प्रकारको मेरो सम्बन्ध हुन नपाओस्।

दीन भएर शरणमा गएपछि जीवलाई प्रभुले आफ्नो गराउनुहुन्छ। वृत्रासुर कति दीन थियो। ऊ भन्दछ 'म भगवान्को सेवा गर्न अपात्र छु, त्यसकारण भगवान्का दासहरूको दासको गर्ने छु। म भगवान्को सेवक वैष्णवहरूको सेवा गर्नेछु। मैले सबै इन्द्रियहरूलाई भक्तिरसको दान दिएको छु। मेरो वाणीले कृष्ण कीर्तन गरोस् र कानले तपाईंको कथा सुनोस्।'

वैराग्य विना भक्ति दृढ़ हुन पाउँदैन। भक्ति भोगका निमित्त नगर। भक्ति भगवान्का निमित्त मात्र गर्नुपर्छ। दोस्रो श्लोक वैराग्यको हो। वृत्तासुर, भक्तिद्वारा इन्द्रको राज्य या मोक्ष पाउने अभिलाषा गर्दैन।

भगवान्ले वृत्रासुरलाई सोधे, 'वैष्णवहरूको सेवा गरेर तिमीलाई केही माग्नु छ ? उसले उत्तर दियो मलाई स्वर्ग कुरै छोड़िदिऊँ ब्रह्मलोकको राज्यको पनि इच्छा छैन।'

भोग भक्तिमा बाधक छ।

आजकलको शिक्षा यस्तो भइरहेछ जो विषयवासना बढ़ाउँदो छ र वासना बढ़ेका कारणले जीवन पनि बिग्रिँदै गइरहेछ।

वृत्तासुर भन्दछ—'मेरो केही इच्छा छैन। म तपाईंको सेवा गर्न चाहन्छु। तपाईंकै उपयोगमा आउन चाहन्छु।'

पहिलो श्लोकमा वृत्तासुरको शरणागति छ र दोस्रो श्लोकमा उसको वैराग्य प्रकट हुन्छ।

ज्ञानी शरणागतिको तीन भेद मान्दछन्। नाथ, म तपाईंकै हुँ। परमात्माले आफ्नो गरेपछि जीवले संझन्छ भगवान् मेरा हुन्। भगवान् मेरा हुन भन्ने भाव उदय भएपछि अनुभव हुन्छ जगत्मा अब अरू केही पनि छैन।

ज्ञानवैराग्य बढ़ेपछि सबै कुरा भगवान्मय लाग्दछ। 'मेरो' भन्ने भावना हिँड़िहाल्छ। 'अहम् ब्रह्मास्मि' को प्रतीति हुन लाग्दछ। जगत्मा उसका निमित्त भगवान्का सिवाय अरू केही बाँकी रहेको लाग्दैन। 'म' भन्ने रहँदैन। त्यो 'म' ईश्वमा विलीन भइहाल्छ, वैष्णव विनाशरणागति दृढ़ हुन सक्दैन।

तेस्रो श्लोकमा प्रार्थना गरिएको छ हे प्रभो ! तपाईंको दर्शनका निमित्त मलाई आतुर बनाइदिनुहोस्। परमात्मा पूर्ण प्रेम माग्छन्, तर जीव उनलाई पूर्ण प्रेम दिँदैन त्यसकारण उनलाई मन पनि पर्दैन। जीव आफ्नो प्रेम दिन्छ स्त्री, पुत्रादिलाई। त्यसकारण वृत्तासुर भन्छ मेरो अब एउटै इच्छा छ त्यो हो तपाईंको दर्शनलाई आतुर बन्न सकूँ।

चौथो श्लोकमा वृत्तासुरले सत्संगको अभिलाषा जाहेर गरेको छ। ऊ भन्छ 'पुनर्जन्म पाइने हो भने हे प्रभो ! तपाईंले मलाई वैष्णवका घरको गाई बनाई दिनोस्। किनभने यदि मेरो दूध प्रभुको उपयोगमा आउने भयो भने म पशुसमेत हुन तयार छु। पशुशरीरमा पनि मलाई सत्सङ्ग मिलोस्।'

वृत्तासुरले यस्तो स्तुति गऱ्यो जो इन्द्रासन पनि हल्लिन थाल्यो।

भक्तिले भगवान्लाई परतन्त्र बनाइदिन्छ। अर्थात् भक्तिले भगवान्लाई भक्तको वशमा गरिदिन्छ। त्यसकारण भगवान् मुक्ति मात्र दिन्छन्, भक्ति होइन। भगवान्ले जब कृपा गर्नुहुन्छ, तब उहाँले अन्तमा नष्ट हुने सम्पत्ति दिनुहुन्न, भक्ति दिनुहुन्छ। भगवान्ले मुक्ति चाँड़ै दिई पनि हाल्नुहोला, भक्ति होइन, किनभने यदि भगवान्ले भक्ति दिनु भए उहाँलाई भक्तको सेवक पनि बन्नुपर्छ। भक्तिले स्वतन्त्र परमात्मालाई प्रेमको बन्धनले बाँधिदिन्छ।

स्तुति समाप्त भएपछि इन्द्रले वृत्रासुरको वध गरे। वृत्तासुरको शरीरबाट निस्किएको तेज भगवत् शरीरमा विलीन भयो। भगवान्ले वृत्रासुरको उद्धार गरिदिनु भयो।

छैटौं स्कन्धमा पुष्टि-लीलाको वर्णन छ। भगवान्ले वृत्रासुरलाई पुष्टिभक्ति प्रदान गर्नुभयो, अर्थात् उसलाई कृपा गर्नुभयो।

परीक्षित्ले सोधे—'यस्ता महान् भक्त भएपछि वृत्तासुरलाई राक्षस योनिमा किन जन्म लिनुपऱ्यो ? उसलाई यस्तो तीव्र हरिभक्ति कसरी प्राप्त भयो ? उसको पूर्ववृत्तान्त के हो ?'

शुकदेवजी वर्णन गर्नुहुन्छ—'राजन् ! सुन। वृत्रासुर आफ्नो पूर्वजन्ममा चित्रकेतु नामक राजा थियो। उसकी रानीको नाउँ थियो कृतद्युति। उसका सन्तान थिएनन्।'

यहाँ शब्दार्थ होइन, लक्ष्यार्थबाट काम लिनुपर्छ। जो चित्र-विचित्र कल्पनाहरू गर्छ, त्यही चित्रकेतु हो। बुद्धि भनेकै कृतद्युति हो। मन अनेक विषयहरूको कल्पना गर्छ। उसै विषयाकार स्थितिमा चित्रकेतुको जन्म हुन्छ।

मनमा जमेका बाहिरका चित्र नै भजनमा विघ्नकर्ता हुनजान्छ।

एक पटक राजा चित्रकेतुका घरमा अङ्गिरा ऋषि आए। राजाले उनीसँग पुत्र मागे। अङ्गिरा ऋषिले राजालाई भने—'पुत्रका माता-पितालाई पनि शान्ति कहाँ छ ? तिम्रो कुनै सन्तान छैन, यही जाती छ।'

राजाका मनमा संसारका कैयौं चित्रहरू जमेका थिए, त्यसकारण उनले दुराग्रह गरे। ऋषिका कृपाले उनको घर पुत्रको जन्म भयो। राजाका अरू पनि पत्नीहरू थिए। ईर्ष्यावश कुनै विमाताले त्यस बालकलाई विष दिई। उसको मृत्यु भयो। यति भएपछि चित्रकेतु र कृतद्युति रुन लागे।

यस्तो शोक समयमा त्यहाँ अङ्गिरा ऋषिका साथ नारदजी आए। पुत्रको मृत्युमा राजा-रानीलाई विलाप गरेको देखेर नारदजीले उनीहरूलाई उपदेश दिए, 'अब पुत्रका निमित्त रुनु व्यर्थ छ। अब तिमीले आफ्ना निमित्त आँसु बगाऊ। त्यो पुत्र जहाँ गएको छ, त्यहाँबाट फर्किएर आउँदैन।'

पुत्र चार प्रकारका हुन्छन् भनेको छ : ( १ ) शत्रुपुत्र—पूर्वजन्मको कोही वैरी मात्र सताउनका निमित्त पुत्ररूपमा आउँछ। ( २ ) ऋणानुबन्धी—पूर्वजन्मको ऋणदाता आफ्नो बाँकी रहेको असूल गर्न भनी पुत्ररूपमा आएको। ( ३ ) उदासीन पुत्र—जबसम्म यो अविवाहित हुन्छ, तबसम्म त्यो मातापिताका साथ बस्दछ। माता-पितासँग न केही लिन्छ न उनलाई केही दिन्छ। यस्तो पुत्र विवाहित भएपछि माता-पितासँग छुट्टिन्छ। माता-पिताको यो इच्छा हुन्छ पुत्रको विवाह भएपछि उसका चार हात होलान् र उसले सेवा गर्ला। तर यो सोच्दाखेरि ऊ यो बिर्सन्छ जो चार हात हुनासाथै चार गोड़ा पनि भइहाल्छन्। विवाहपछि मनुष्य अधिकतर पशुवत् जीवन बिताउँछ। ( ४ ) सेवक पुत्र—पूर्वजन्ममा कसैले सेवा पाएको होला त्यसकारण ऊ यस जन्ममा सेवा गर्नका निमित्त पुत्ररूप भएर सेवा गर्दछ।

हामी कसैको सेवा नगरौं तर अरूहरूले हाम्रो सेवा अवश्य गरून्, यस्तो आशा गर्नु निरर्थक छ।

स्कन्दपुराणमा पुण्डरिकको चरित्र छ। छोराले आमाबाबुको सेवा कसरी गर्नुपर्छ यसको उत्तम दृष्टान्त छ।

पुण्डरिकको दर्शन गर्नलाई भगवान् स्वयं जानुभएको थियो।

पुण्डरिक आमा-बाबुको सदा सेवा गर्थे, उनी आमा-बाबुलाई सर्वस्व मान्दथे। माता-पिताको यस्तो सेवाबाट प्रसन्न भएर भगवान्‌ले दर्शन दिनुभयो। जब भगवान् ढोकामा पुग्नुभएको थियो, त्यसबेला पुण्डरिक माता-पिताको सेवामा लीन थिए। ती विचरा गरीब थिए। उनको एउटा सानो कुटी थियो। भित्र बस्नेसम्म पनि ठाउँ थिएन। भगवान् बाहिर उभिएरै पुण्डरिकको प्रतीक्षा गर्न लाग्नुभयो।

माता-पिताका सेवामा व्यस्त पुण्डरिकले भगवान्‌लाई भने—'माता-पिताको सेवाको फलस्वरूप तपाईं मलाई भेटिनुभएको हो, त्यसकारण मलाई पहिले उहाँहरूको सेवा गर्नु छ।' यति भनेर उनले एउटा ईंट फ्याँक्दै भगवान्‌लाई भने—'म जबसम्म माता-पिताको सेवा पूरा गरिलिन्नँ, तबसम्म तपाईं यसैमाथि उभिरहनु होस्।' भगवान् प्रकट हुनुभयो र पनि पुण्डरिकले माता-पिताको सेवा अलपत्र पारेर छोड़ेनन्। भगवान् ईंटमाथि उभिइरहे। ईंटबाट बीट बन्यो र त्यसको नाउँ पऱ्यो विठोबा।

उभिँदा-उभिँदा जब भगवान् थाक्नुभयो तब उहाँले एक हात कम्मरमा राख्नुभयो। आज पनि पंढरपुरमा उहाँ त्यस्तै मुद्रामा उभिइरहनुभएको छ। पुण्डरिकले उहाँलाई जसरी उभिनु भन्नुभएको थियो, त्यस्तै उहाँ आज पनि उभिनुभएको छ।

कम्मरमा हात राखेर उहाँ भन्नुहुन्छ, 'मेरो पासमा आउनेलाई, मेरो आसरा लिनेलाई संसार मात्र यति ( कम्मरसम्म जति उँचाइ ) गहिरो छ।'

भगवान् पाण्डुरङ्गको स्तुतिको स्तोत्र श्रीमत्शङ्कराचार्यले यस प्रकार रच्नुभएको छ—

भवाब्धेः प्रमाणं इदं मामकानाम्।
नितंबं कराभ्यां धृतो येन यत्नात्॥
समागत्य तिष्ठन्त आनन्दकन्दम्।
परब्रह्म लिङ्गं भजे पांडुरंगम्॥

*भवाब्धे प्रमाणं इदम्।* तर कसलाई? जो भगवान्‌को बन्यो उसैलाई।

नारदजी राजा चित्रकेतुलाई भन्नुहुन्छ—'राजन्! तिम्रै शत्रु पुत्र भएर जन्मेको छ।'

बेसै भयो जो त्यो मऱ्यो तिमीलाई आनन्द लाग्नुपर्ने हो।

घर, धन, पत्नी, विविध ऐश्वर्य, शब्दादि विषय, राज्य समृद्धि, सेवक, मित्रजन, नातादार आदि सबै शोक, मोह, भय र दुःखका दाता हुन्। यी सबै नाशवान् हुन्।

जीवका हजारौं जन्म भए, भइरहेछन् र हुनेछन्। यिनमा को कसको नजिक र को कसको सम्बन्धी हो।

जस्ता प्रकारले जलप्रवाहमा बालुवाका कण कहिले जम्मा हुन्छन् र कहिले छरिन्छन् त्यस्तै किसिमबाट समयको प्रवाहमा संसारका प्राणी जम्मा हुन्छन् र छुट्टिन्छन्।

जब त्यस मृत राजकुमारको जीवात्मालाई ल्याइयो तब त्यसले कसैलाई पनि चिन्दैनथ्यो। उसले भन्यो—'मेरा त हजारौं जन्म भइसकेका छन्, म तिनमध्ये कुन-कुन जन्मका मातापितालाई सम्झिराखूँ ?' यसो भनेर त्यो जीवात्मा गइहाल्यो।

नारदजीले भन्नुभयो—'राजन् ! तिमी कसका निमित्त रोइरहेछौ, त्यसले त तिमीतर्फ हेर्नसम्म चाहँदैन। तैपनि तिमी शोक गरिरहेछौ।'

नारदजीले चित्रकेतुलाई दिव्यज्ञान दिए। तत्त्वोपदेश दिए र मन्त्रको पनि उपदेश दिए।

यसका पश्चात् चित्रकेतु राजाले तपश्चर्या गरेर भगवान्‌को नाउँको जप गऱ्यो। उसलाई भगवान्‌को दर्शन भयो। उसका सारा पापहरूको क्षय भयो। ऊ महाज्ञानी र महासिद्ध भयो। भगवान्‌ले उसलाई पार्षद बनाउनुभयो।

एक दिन चित्रकेतु आकाशमा विहार गरिरहेको थियो। त्यो घुम्दै-फिर्दै कैलाश धाम पुगेछ। त्यहाँ उसले पार्वतीजीलाई शिवको काखमा बसिरहेको देख्यो। यो देखेर उसको मनमा कुभाव जागेर आयो।

विषय वासनाका बीचबाट चित्रकेतुको जन्म हुन्छ। प्रत्येक स्त्री-पुरुषलाई नरनारायणको रूपमा देखेपछि वासना उत्पन्न हुँदैन।

चित्रकेतुले सांसारिक भावबाट शिव-पार्वतीलाई हेऱ्यो।

यस चरित्रबाट स्पष्ट हुन्छ विनाज्ञानको भक्ति व्यर्थ छ। सगुणको साक्षात्कार मात्रले मन शुद्ध हुँदैन। साक्षात्कारबाट मनको चञ्चलता नष्ट हुन पाउँदैन। सगुण र निर्गुण भक्ति भएपछि जीव शिव हुनसक्छ।

चित्रकेतुले शिवपार्वतीलाई लौकिक दृष्टिवश कामभावले हेर्न थाल्यो।

शिव-पार्वतीको यस प्रकार बस्नाको एउटा कारण थियो। एक पटक कामदेवले फेरि शिवसङ्ग युद्ध गर्न खोज्यो। शिवजीले भन्नुभयो—'मैले एक पटक तँलाई डढ़ाइसकें भन्दा कामदेवले भन्यो, 'समाधिमा बसेर डढ़ाउनु कुनै ठूलो कुरो होइन। समाधिको अवस्थामा कुनै पनि जीवले मलाई डढ़ाइदिनसक्छ। मेरा मनमा एउटा सानु इच्छा बाँकी छ। तपाईंले पार्वतीजीलाई अँगालो मार्नुहोस्, म त्यसै वेलामा आफ्नो बाण चलाउँछु यदि तपाईं त्यसवेला पनि निर्विकार रहन सक्नुभयो भने म मान्नेछु तपाईं महादेव हुनुहुँदो रहेछ।' शिवजी तयार हुनुभयो। पार्वतीजीलाई आलिङ्गनबद्ध गरेर उहाँ अर्धनारीश्वर, नटेश्वर हुनुभयो। कामले उहाँलाई विचलित गर्ने पूरा कोशिश गऱ्यो तर उसलाई सफलता प्राप्त भएन। शङ्कर निर्विकारै रहनु भयो। कामदेवले आफ्नो पराजय स्वीकार गऱ्यो र शिवजीको शरणमा पऱ्यो।

चित्रकेतु यी सबै कुराबाट अनभिज्ञ थिए, त्यसकारण ऊ शिवजीको निन्दा गर्दै भन्नथाल्यो—'भरी सभामा यिनले आफ्नी पत्नीलाई अँगालो मारेर काखमा राखेर बसेका छन्। यिनलाई केही लाज पनि हुँदैन क्या ?'

शिव-पार्वती निर्विकारी थिए तर उनलाई हेर्ने मानिसका आँखामा विकार थियो। कसैलाई लौकिक भावले हेऱ्यो भने मनमा विकार उत्पन्न हुनेछ र विकृत चित्र मनमा उदय हुन्छ।

यस प्रकार लौकिक भावबाट हेरेको हुँदा चित्रकेतुको पतन भयो।

उसको निन्दाले शिवजीमा केही नराम्रो भएन। जसको शिरमा गङ्गा-ज्ञानगङ्गा हुन्छिन् तब उसलाई निन्दारस प्रभावित गर्न सक्दैन, तर पार्वतीका निमित्त यो कुरा असह्य भयो। उनले चित्रकेतुलाई श्राप दिइन्—'उद्धत्, तेरो अब असुरयोनिमा जन्म हुनेछ।'

चित्रकेतु पार्वती मातासँग क्षमा-याचना गर्नथाले। तब देवीले भनिन्—दोस्रो जन्ममा तँलाई अनन्य भक्ति प्राप्त हुनेछ र तेरो उद्धार हुनेछ।

पार्वतीको श्रापको कारणले चित्रकेतुको वृत्रासुरको रूपमा जन्म भयो।

मन-चित्रकेतुले शुभकल्पना गऱ्यो भने ( जस्ता प्रकारले चित्रकेतुले वृत्रासुर रूपमा गरेको थियो ) तब अन्तमा सुखी हुन सक्छ र दुष्ट कल्पना गरेमा दुःखी हुन्छ।

नारदजी र अंगिरा जस्ता सन्तहरूको समागमबाट मन-बुद्धि ऊर्ध्वगामी बन्दछ।

मनमा विषयहरूको चित्र देखा नपरोस् र सात्त्विक भाव जागोस् भन्नका निमित्त लक्ष्मीनारायणको सदा पूजा गरोस्। विष्णु सत्त्वगुणका अधिपति देव हुन्। उनको सेवा गर्नाले मनमा सात्त्विक भावको जागृति हुन्छ।

विषयहरूको चित्र भिन्न हुन्छ। आँखा चिम्लिएर बस्यौं भने ती बाहिर आउँछन्। यी चित्रहरूलाई भेट्टाउनका निमित्त लक्ष्मीनारायणको सेवा गर्नु आवश्यक छ।

दितिका दुवै पुत्रहरूको मृत्यु भयो। दितिले इन्द्रलाई मार्नका निमित्त व्रत गरिन्। इन्द्रलाई मार्न सक्ने पुत्र उत्पन्न हुन सकोस् भन्ने हेतुले कश्यप ऋषिले दितिलाई एक वर्षको व्रत गर्न भने। त्यसको नाउँ थियो पुंसवन व्रत।

चञ्चल मनलाई ईश्वरमा स्थिर गर्ने साधन नै व्रत हो। व्रतबाट मनको चञ्चलता घट्दै जान्छ र ईश्वरमा स्थिरता बढ्दै जान्छ। मनलाई ईश्वरमा लगाइराख्ने साधन नै व्रत हो।

दितिले व्रत गरिन् तर व्रतका नियमहरूको बराबर पालन नगर्नाको कारण व्रत भङ्ग भयो। परिणामतः मरुत्‌गणहरूको उत्पत्ति भयो।

भेद बुद्धि नै दिति हुन्। चंचल मनोवृत्तिलाई एकै स्थानमा स्थिर गरेर एकलाई अनेकमा हेर्ने गऱ्यौं भने मात्र व्रत सफल हुन्छ।

भेदभावका कारण दितिको व्रत भङ्ग भयो। तब दितिले इन्द्रसङ्ग भनिन्—'यी मेरा सन्तान हुन्, तर तिनको गणना देवहरूमा हुनेछ।' अब दितिका मनमा इन्द्रका निमित्त कुभाव रहेन।

यी मरुत्‌गणहरूको उत्पत्तिको वर्णन गरेर षष्ठ स्कन्धको कथा समाप्त गरिएको छ।

**श्रीकृष्ण गोविन्द हरे मुरारे। हे नाथ नारायण वासुदेव॥**

# ❀ सप्तम स्कन्ध ❀

छैटौं स्कन्धमा पुष्टि-अनुग्रहको कथा थियो। भगवदनुग्रहका पश्चात् विकार-वासनालाई नष्ट गरेर अनुग्रहको यदि सदुपयोग गर्न सकियो भने मात्र त्यो पुष्ट हुनसक्छ। सेवा-स्मरणमा तन्मय बनेर मात्र जीव पुष्ट हुनसक्छ। भगवान् कैयौं जीवमाथि अनुग्रह गर्नुहुन्छ तर त्यस अनुग्रहको सदुपयोग गर्ने रीति जीवले जान्दै जान्दैन। परिणामतः जीव पुष्ट बन्न पाउँदैन तर दुष्ट बन्दछ।

अब हामी हिरण्यकशिपु र प्रह्लादको कथा सुनौं। हिरण्यकशिपु दैत्य भए र प्रह्लाद देव। हिरण्यकशिपुले सारा सम्पत्तिको उपयोग भोग-विलासका निमित्त गरे, त्यसकारण उनी दैत्य भए। प्रह्लादले समय तथा आफ्नो शक्तिको उपयोग प्रभुको भक्ति गर्नमा लगाए, त्यसकारण उनी देव बने।

सातौं स्कन्धमा वासनाका तीन प्रकार बताइएका छ—( १ ) असद् वासना, ( २ ) सद् वासना र ( ३ ) मिश्र वासना।

यस सातौं स्कन्धको आरम्भमा परीक्षित राजाले एक महत्वपूर्ण प्रश्न सोधेको छ— 'तपाईं भन्नुहुन्छ ईश्वर सर्वत्र छन् र समभावले व्यवहार गर्छन्।' यदि यस्तो कुरा हो भने जगत्मा यो विषमता किन दृष्टिगोचर भइरहेछ ? मूसामा पनि ईश्वर छन् र बिरालामा पनि। त्यसो भए बिरालाले मूसालाई किन मारेर खान्छ ?

भगवान् यदि सम हुनुहुन्छ भने जगत्मा उहाँ विषमता किन उत्पन्न गर्नुहुन्छ। यदि उहाँ समभागी हुनुहुन्छ भने बारंबार देवहरूको पक्ष लिएर उहाँ दैत्यहरूलाई किन मार्नुहुन्छ ? यदि उहाँ ईश्वर हुनुहुन्छ भने विषमता उहाँ किन गर्नुहुन्छ।

भगवान्का दृष्टिमा यदि सबै प्राणी समान छन् भने उहाँले इन्द्रका निमित्त वृत्रासुरको वध किन गर्नुभयो।

म मान्दछु दैत्य त पापी हुन्। अतः हरि उनको हत्या गर्नुहुन्छ। तर वृत्तासुर भगवद्भक्त थियो तब उसको हत्या उहाँले किन गर्नुभयो ?

शुकदेवजी भन्नुहुन्छ—'राजन् ! क्रियामा विषमता भए पनि भावमा तर हुनु हुन्न।'

समता अद्वैत भावमा मात्र हुन्छ, क्रियामा त्यो संभाव्य हुँदैन। क्रियाबाट विषमता हुन्यैभो। त्यसकारण भावमा समता राख्नै पर्छ।

घरमा माता, पत्नी, सन्तान आदि हुन्छन्। पुरुष यी सबैप्रति प्रेम एक समानै राख्छ, तर सबैका साथ एक समान बर्ताव राख्न सक्दैन, उसले आमालाई वन्दना गर्न सक्छ तर पत्नीलाई हुँदैन।

प्रेम आत्माका साथ हुन्छ, देहका साथ होइन।

भावनाका क्षेत्रमा अद्वैत भाव हुनुपर्छ। समदर्शी बन्नु छ, समव्यवहारी होइन। सबै व्यवहारी हुन संभव छैन।

शङ्कराचार्यले आज्ञा दिनुभएको छ—

भावाद्वैतं सदा कुर्यात् क्रियाद्वैतं न कर्हिचित्।

भागवतलाई आदि भौतिक साम्यवाद मान्य छैन। आध्यात्मिक साम्यवाद मात्र मान्य छ।

राजन् ! देवहरूको पक्ष लिएर भगवान्ले असुरहरूको नाश गर्नुभयो भन्ने तपाईंलाई लाग्ला, तर उहाँले यो संहार ती असुरहरूमाथि कृपा गर्नका निमित्त मात्र गरेको थियो।

एउटा दृष्टान्त सुन्नुहोस्। एउटा चोर चोरी गर्न भनी घरबाट निस्क्यो, तर बाटामा ठेस लागेर त्यो लड्यो र एउटा गोड़ा भाँचियो। यसकारण उसले चोरी गर्न सकेन। यो भगवान्को कृपा थियो वा अकृपा ? यसलाई कृपा संझनुपर्छ। गोड़ा मात्र भाँचियो तर त्यस कारणले उसले पाप चाहीं गर्न सकेन।

राजन् ! तिमी जस्तो हुन्छौ, ईश्वरको रूप पनि तिमीलाई त्यस्तै देखा पर्छ। ईश्वरको कुनै एक निश्चित स्वरूप हुँदैन। जीवले जुन भावले उहाँलाई हेर्दछ, उसका निमित्त उहाँ त्यस्तै बनिदिनुहुन्छ।

वल्लभाचार्यजी भन्नुहुन्छ, 'ब्रह्म ईश्वर-लीला गर्नुहुन्छ अतः उहाँ अनेक स्वरूप धारण गर्नु हुन्छ।'

शङ्कराचार्य भन्नुहुन्छ, 'ब्रह्म सर्वव्यापक छ र निर्विकार छ। त्यस ब्रह्मको कुनै क्रिया छैन। कलशमा राखेको जल बाहिर झिक्न सकिन्छ, तर भित्र आएको आकाश सकिँदैन।'

ईश्वरमा मायाद्वारा यस क्रियाको अध्यारोप गरिएको छ। यो वेदान्तको सिद्धान्त हो। मायाको क्रिया ईश्वरको अधिष्ठानमा आभासित हुन्छ। मानिस रेलमा चढ़ेर कलकत्ता जान्छन्। कलकत्ता रेल पुगेपछि उनीहरू भन्छन् कलकत्ता आइपुग्यो, तर यो आउने क्रिया त्यस नगरको होइन तर रेलको चाहिँ हो।

ईश्वर निराकार रूपबाट सर्वत्र व्यापक छन्। ईश्वरले यदि कुनै स्थानमा आवागमन गरे भने उनलाई सर्वव्यापक कसरी भन्ने ? कुनै पनि स्थानमा जसको अभाव नहोस्, उसैलाई सर्वव्यापी भन्न सकिन्छ।

आचार्य शङ्करको मत तर यस्तो छ ईश्वर निष्क्रिय छ। मायाको कारणले उनमा क्रियाको आभास हुन्छ, तर वास्तवमा भगवान्ले केही पनि गर्नुहुन्न, त्यसकारण उनमा विषमता छैन। अग्नि निराकार छ, तैपनि जब काठ सल्कन्छ तब काठजस्तै आकार अग्निको पनि आभासित हुन्छ। उपाधिका कारणले आकारको आभास हुन्छ।

परमात्माको वास्तविक स्वरूप व्यापक, निराकार र आनन्दरूप छ। आचार्य शङ्करको यही दिव्य सिद्धान्त हो।

महाप्रभुजीको सिद्धान्त पनि दिव्य छ। वैष्णव मान्दछन् ईश्वरको अक्रियात्मकताको कुरा बराबर होस्। ईश्वर क्रिया गर्न सक्दैनन् तर लीला गर्दछन्। ईश्वर निष्क्रिय छन् यो कुरा साँचो हो उनी लीला गर्छन्। जुन क्रियामा अभिमान हुँदैन, त्यही नै लीला हो। ईश्वर स्वेच्छाले लीला गर्छन्।

'म गर्दछु' यस्तो भावनाको विना निष्काम भावले जो क्रिया गरिन्छ त्यही लीला हो। केवल अरूहरूलाई सुखी गराउने भावनाले जो क्रिया गरिन्छ त्यही लीला हो। कृष्णको काम लीला हो। ईश्वरलाई सुखको इच्छा छैन। कृष्ण चोरी गर्छन्, तर अरूहरूको भलाइका निमित्त मात्र। क्रिया बन्धनकारक छ, लीला मुक्तिदायक।

जीवले जे गर्छ त्यो क्रिया हो, किनभने उसका हरेक क्रियाका पछि स्वार्थ, वासना र अभिमान हुन्छ।

दुवै सिद्धान्त सत्य हुन्। ईश्वर निराकार, निर्विकल्प छ र माया क्रिया गर्दछ। यो सिद्धान्त पनि दिव्य हो। ईश्वर केही पनि गर्दैनन् तर उनमा क्रियाको अध्यारोप गरिन्छ। मायाको कारण ईश्वरको व्यवहारमा विषमताको आभास हुन्छ।

ईश्वर परिपूर्णसम छन्। परमात्मा सम छन् र जगत् विषम।

समता ईश्वरको हो, विषमता मायाको हो। त्यसो त ईश्वर सम छन् तर मायाकै कारणले उनमा विषमता देखिन्छ। ईश्वरको अधिष्ठानमा माया क्रिया गर्छ। त्यसकारण मायाले जे पनि क्रिया गर्छ त्यसको अध्यारोप ईश्वरमा पनि गरिन्छ। बत्तीले स्वयं केही गर्दैन तर उसको अनुपस्थितिमा पनि केही गर्न सकिँदैन।

भगवान् दैत्यलाई मार्नुहुन्न; तारी ( उद्धार ) दिनुहुन्छ। विषमता क्रियामा छ, भावमा होइन। भगवान् दैत्यहरूलाई मार्नुहुन्छ तर उहाँको प्रहारमा पनि प्रेम भरिएको हुन्छ।

सत्त्वगुण, रजोगुण र तमोगुण प्रकृतिको हो, आत्माको होइन।

जीवनको उपभोगको निमित्त शरीर सिर्जनको इच्छा जब भगवान् गर्नुहुन्छ तब रजोगुणको बलमा वृद्धि गर्नुहुन्छ। जीवहरूको पालनका निमित्त उहाँले सत्त्वगुणको बलमा र संहारार्थ तमोगुणको बलमा वृद्धि गर्नुहुन्छ।

राजन् ! जो प्रश्न तपाईंले मलाई सोध्नुभयो, त्यही प्रश्न तपाईंका पितामहले नारदजीलाई सोध्नुभएको थियो।

राजसूय यज्ञमा प्रथम श्रीकृष्णको पूजा भयो, जो शिशुपाललाई मान्य भएन र ऊ भगवान्लाई निन्दा गर्न थाल्यो। त्यसोत भगवान्ले धेरै कालसम्म निन्दा सहँदै रहनुभयो तर अन्तमा उहाँले सुदर्शन चक्रद्वारा शिशुपालको शिर उड़ाइदिनुभयो, उसको शरीरबाट बाहिर आएको आत्मतेज द्वारकाधीशमा विलीन भयो र शिशुपाललाई मुक्ति मिल्यो। यस प्रसङ्गलाई देखेर युधिष्ठिरलाई

आश्चर्य भयो। उहाँले नारदजीलाई सोध्नुभयो—भगवान्सँग शत्रुता भए पनि शिशुपाललाई सद्‌गति किन मिल्यो ? उसले भगवान्लाई गाली गर्‍यो र पनि त्यो नरकवासी किन भएन ? यस्तो सायुज्य गति उसले किन पायो ? भगवानसँग द्वेष गर्ने शिशुपाल र दन्तवक्त्र नरकवासी हुनुपर्ने थियो। यस्तो उल्टा कुरा किन भयो ?

नारदजीले भने—'सुन, राजन्, परमात्मामा कुनै किसिमको तन्मयता हुनुपर्ने आवश्यक छ। परमात्माले भनेको छ जीव जुन कुनै भावले मसँग तन्मय बन्छ म उसलाई आफ्नो स्वरूपको दान गर्छु।'

राजन, कुनै पनि भावले मन, परमात्माका साथ एकाकार हुनुपर्छ।

जस्ता प्रकारले भक्तिद्वारा ईश्वरसँग मन लगाएर कति मानिसले परमात्माको गति प्राप्ति गर्नसकेका छन्, त्यस्तै प्रकारले काम, द्वेष, भय या स्नेहद्वारा भगवान्सँग नाता लगाएर पनि कति मानिसले सद्‌गति पाएका छन्।

गोपिनीहरूले मिलनको तीव्रकामनाले, कंसले भयद्वारा, शिशुपाल आदि केही राजाहरूले द्वेषद्वारा, यादवहरूले पारिवारिक संबन्धद्वारा, तपाईंले स्नेहद्वारा र मैले भक्तिद्वारा आफ्नो मनलाई भगवान्सँग जोड़िदिएका छौं।

गोप्यः कामाद् भयात् कंसो द्वेषाच्चैद्यादयो नृपाः।
सम्बन्धाद् वृष्णयः स्नेहाद्यूयं भक्त्या वयं विभो॥

(भा० ७-१-३०)

केही गोपिनीहरू कृष्णलाई कामभावले भज्दथे। श्रीकृष्णको स्वरूप हेरेर भलै उनका प्रति कामभाव जागिजावोस्: तर जसको ध्यान गर्दछन् त्यो निष्काम हो। निष्काम कृष्णको ध्यान गर्दै गोपिनीहरू पनि निष्काम भए, तर जगत्का स्त्रीपुरुषहरूको ध्यान कामभावले गर्‍यौ भने तब नरकमा जाउला।

श्रीकृष्णका प्रति कामभाव राखेर सतत उनको चिन्तन गर्दै पनि गोपिनीहरू निष्काम भए। परमात्मा पूर्ण निष्काम हुनुभएका कारणले उहाँलाई अर्पित गरेको काम पनि निष्काम भयो।

कामको जन्म रजोगुणबाट हुन्छ। ईश्वर बुद्धिभन्दा टाढ़ा छ। ईश्वरको नजीक काम जान सक्दैन। सूर्यका छेऊ अन्धकार जान सक्दैन।

जसको चिन्तन गरिएको थियो, ती श्रीकृष्ण निष्काम हुनाको कारण उनको कामभावले चिन्तन गर्ने गोपिनीहरू पनि निष्काम बने।

कंस डरले गर्दा तन्मय भएको थियो। उसलाई देवकीको आठौं पुत्र मात्र सदा देखा परिरहन्थ्यो। शिशुपाल आफ्नो शत्रुको रूपमा भगवान्को चिन्तन गरिरहन्थ्यो।

यसप्रकार ईश्वरमा कुनै पनि भावबाट तन्मय हुनुपर्छ।

तस्मात् केनाप्युपायेन मनः कृष्णे निवेशयेत्।

त्यसकारण प्रत्येक व्यक्तिलाई चाहिन्छ त्यसले श्रीकृष्णसँग आफ्नो मन जोड़ोस्। यो शिशुपाल साधारण व्यक्ति थिएन, त्यो विष्णु भगवान्‌को पार्षद थियो।

नारदजीले जय-विजयको तीनै जन्महरूको कथा संक्षेपमा सुनाउनु भयो। जय र विजय पहिलो जन्ममा हिरण्याक्ष र हिरण्यकशिपु बने, दोस्रो जन्ममा रावण र कुम्भकरण बने र तेस्रो जन्ममा शिशुपाल र दन्तवक्त्र बने।

नारदजीले हिरण्यकशिपु र प्रह्लादको कथा आरम्भ गर्नु भो। हिरण्याक्ष र हिरण्यकशिपु दितिका दुइ छोरा थिए। वराह भगवान्‌ले हिरण्याक्षको वध गरिदिनुभयो।

धर्मराजले नारदजीसङ्ग प्रार्थना गर्नुभयो—"म प्रह्लादको कथा विस्तारपूर्वक सुन्न चाहन्छु। उनी महान् भक्त थिए, तापनि हिरण्यकशिपुले उनलाई किन मार्न चाहे।"

नारदजी भन्नुहुन्छ—'दिति वस्तुतः भेदबुद्धि हो। भेदबुद्धिबाट हिरण्याक्ष र हिरण्यकशिपु-ममता र अहङ्कार उत्पन्न हुन्छन्। 'म' र 'मेरो' भेदबुद्धिका सन्तानहरू हुन्। सबै दुःखको मूल भेदबुद्धि हो र अभेद भाव हो। शरीरबाट होइन, बरु बुद्धिबाट यदि अभेद भाव स्थापित हुन सक्यो भने सबैका प्रति समबुद्धि हुनेछ।'

अहङ्कारलाई मार्न कठिन छ। विवेकद्वारा ममताको नाश हुन सक्दछ तर अहंभावको होइन। तर यदि अर्पण गर्ने व्यक्तिले आफ्नो 'मेरो' भन्ने भाव पनि प्रभुलाई अर्पित गरिदियो भने तब भगवान्‌ले कृपा गर्नु हुन्छ। ममा अभिमान छैन, यस्तो मान्नुनै अभिमान हो।

हिरण्यकशिपु अहङ्कारको रूप हो। उसको व्यवहार नै यस्तो छ जसबाट देवहरूलाई, ज्ञानी पुरुषहरूलाई र अन्य सबैलाई कष्टदायक छ। अभिमानले सबैलाई सताउँछ र रुवाउँछ। ममता त छिट्टै मरिहाल्छ तर अहङ्कार चाँड़ै मर्दैन। त्यसलाई मार्न बड़ो कठिन छ। त्यो न रातमा मर्छ न दिनमा। त्यो न घरभित्र मर्छ न घरबाहिर। त्यो घरभित्र पनि हुन्छ र बाहिर पनि। त्यो न शस्त्रले मर्छ न अस्त्रले। उसलाई बीचको स्थानमै मर्नुपर्छ। अहङ्कारलाई नष्ट गरिदिएका खण्डमा मानिस ईश्वरबाट टाढ़ा हुने छैन।

अभिमान भित्रै अटाएर बसेको हुन्छ। मानिसलाई दुःख दिने यही हो। यस अहङ्कारलाई मार्नु छ। त्यो ढोकाको सँघारमै मर्ने छ। रासकथामा भनिएको छ प्रति दुइ गोपिनीहरूका बीच (साथ)-मा श्रीकृष्ण हुनुहुन्छ। यस्तै किसिमबाट तिमीले दुइ वृत्तिहरूका बीचमा श्रीकृष्णलाई राख्यौ भने तिम्रो अहङ्कारको नाश हुनेछ। एउटा सङ्कल्पको समाप्त हुने र दोस्रो वृत्तिले उत्पन्न हुनुभन्दा अघि यदि श्रीकृष्णलाई राख्छौ भने तिम्रो अहङ्कार नाश हुनेछ। प्रत्येक इन्द्रियको मिलन परमात्माका साथ जबसम्म हुन पाउँदैन तबसम्म अहङ्कार बनिरहन्छ। पुरुष ईश्वरस्मरणमा तन्मय भयो, अन्य कुनै भेदको अस्तित्व रहेन भने अहङ्कारको मृत्यु अवश्य हुनेछ।

ज्ञान सुलभ छ तर जबसम्म अहं र ममता नष्ट हुँदैन तबसम्म ज्ञानले शोभा दिँदैन।

हिरण्यकशिपु ज्ञानी थियो तर उसको ज्ञान, अहंभाव र ममताले भरिएको थियो। आफ्नो भाइको मृत्युको अवसरमा पनि उसले ब्रह्मोपदेश गरेको थियो।

जो अरूहरूलाई उपदेश दिन्छ र स्वयं उसलाई आफ्नो जीवनमा लागू गर्न सक्दैन भने त्यो असुर हो।

हिरण्यकशिपु अरू मानवहरूलाई ज्ञानोपदेश दिन्थ्यो तर स्वयं यो सोच्दैन थियो आफ्नो भाइको हत्यारालाई मैले कसरी बदला लिने।

एउटा गृहस्थको पुत्रको मृत्यु भयो। कुनै साधु त्यस बखत त्यहाँ थिए र उपदेश दिए 'यो संसार मिथ्या हो।' केही दिनपछि तिनै साधुको एउटा भैंसी मरेछ र ऊ रुन थाले। केही जानिँदैन यस समयमा ज्ञान कहाँ गयो होला। ती गृहस्थले साधुकहाँ आएर सोधे, 'अहिले तपाईं किन रोइरहनुभएको छ?' साधुले भने—'त्यो पुत्र तिम्रो थियो र मैले तिमीलाई उपदेश गरें तर यो भैंसी मेरो थियो र रोइरहेको छु।'

जबसम्म अहंभाव र ममता विद्यमान हुन्छ तबसम्म ज्ञानको पाचन हुन पाउँदैन। भक्ति नभएको ज्ञान शाब्दिक मात्र रहन जान्छ। त्यसकारण त्यो ज्ञानबाट जीवलाई केही फायदा छैन। वैराग्य र भक्तिका अभावमा ज्ञानको अनुभव हुँदैन।

कोही व्यक्ति कुरा चाहिँ वेदान्त र ब्रह्मज्ञानको गर्छ तर प्रेम सांसारिक विषयहरूका साथ गर्‍यो भने संझ त्यो दैत्य हो वा दैत्य वंशको हो।

हिरण्याक्षको मृत्युको समाचार सुनेर हिरण्यकशिपुले भन्यो, 'म आफ्नो भाइको हत्यारा विष्णुसँग युद्ध गर्ने छु।' उसले माता दितिलाई अनेक किसिमका उपदेश सुनाएर संतुष्ट गरायो। उसले सोच्यो 'म विष्णुसँग अहिले युद्ध गर्ने छैन, पहिले वरदान प्राप्त गरेर अमर भइहालूँ अनि युद्ध गरौंला।'

हिरण्यकशिपु तपश्चर्या गर्न जाँदा उसकी दुलही कयाधुले सोधी, 'फर्केर कहिले आउने?' अनि उसले उत्तर दियो 'केही निश्चय छैन। तपबाट अनेक सिद्धिहरू प्राप्त गरेपछि घर फर्केर आउनेछु।'

हिरण्यकशिपु मन्दराचल पर्वतमा गयो। यो कथा भागवतमा छैन। व्यासजीले विष्णुपुराणमा यो कथा लेख्नुभएको छ। हिरण्यकशिपुको तपस्याको वृत्तान्त थाहा पाएर देवहरूले वृहस्पतिसँग प्रार्थना गरे—'तपाईंले हिरण्यकशिपुको तपस्यामा बाधा गरिदिनुपर्‍यो।' यो सुनेर वृहस्पति सुगाको रूप लिएर मन्दराचल पर्वतमा गए र जहाँ हिरण्यकशिपु तपस्या गर्न भनी बसेका थिए त्यहीं नजिकैको कुनै वृक्षमा बसेर 'नारायण' को जप गर्न थाल्यो। जसै हिरण्यकशिपुले मन्त्र जप गर्न थालेको थियो उसै बखत सुगाले 'नारायण' को रटना गर्न शुरू गर्‍यो। यो देखेर हिरण्यकशिपुले

सोच्यो 'विष्णुको हत्या गर्नलाई म तपश्चर्या गरिरहेछु र उसको कीर्तन यो तोताले गरिरहेछ। यो कहाँबाट आइपुग्यो ? हट्दै हट्दैन। आज तपस्या गर्नलाई शुभ दिन छैन।' यो सोचेर ऊ थाकेर सायङ्कालमा घर फर्कियो।

कयाधुलाई आश्चर्य लाग्यो मेरा पति आजै किन फर्किएर आए ? तर यो कुरा पतिसँग कसरी सोध्नु किनभने ऊ क्रोधी थियो। शायद उनले तँलाई के मतलब भने भने ?

त्यसकारण कयाधुले सोची 'म कुनै युक्तिले यो सोद्धछु।' उसले भान्साघरमा बाहुन-चाकरलाई भनी—'आज म स्वयं भान्सा तयार गर्छु'।

पतिसँग कुनै गोप्य कुरा बुझ्नु छ भने कयाधुको बाटोमा हिँड़। भोजनमा बहुतै वशीकरण हुन्छ।

*लोभीलाई द्रव्यले वश गर र अभिमानीलाई प्रशंसाले।*

हिरण्यकशिपु अभिमानी थियो। त्यसकारण उसकी पत्नीले उसको सेवा गर्दै प्रशंसा गर्न थाली।

राजा भोजले एक पटक कालिदासलाई सोधे—'चिनीभन्दा पनि ज्यादा मीठो वस्तु के होला ?'

कालिदासले उत्तर दिए—'प्रशंसा'।

कयाधु भन्न थाली—'इन्द्र, चन्द्र आदिदेव तपाईंसँग थरथर काँप्दछन्। तपाईं जितेन्द्रिय हुनुहुन्छ, ज्ञानी हुनुहुन्छ। तपाईंजस्तो वीर न कहिल्यै कोही भएको छ र न कहिल्यै होला। म कति भाग्यशाली छु, तपाईंजस्तो पति मैले पाएँ। म जान्दछु निर्धारित कामको टुङ्गो नलाईकन तपाईं फर्कने होइन। के आज वनमा यस्तो प्रसङ्ग भयो जुन कारणले तपाईंलाई फर्केर आउनुपर्‍यो ?'

कयाधुले केही मीठा-मीठा ताता-ताता पकौड़ीहरू ख्वाइदिइहोली। राक्षसलाई यस्तै भोजन मन पर्छ।

जसलाई सात्त्विक भोजन मन पर्दैन, त्यो राक्षस हो।

हिरण्यकशिपु आफ्नो प्रशंसा सुनेर दङ्ग पर्‍यो र भन्न थाल्यो—'म आफ्नो निश्चित काम पूरा नगरी फर्कने होइन, तर बाधा आइपुग्यो र अपशगुन पनि भयो त्यसैले फर्केर आएँ।'

कयाधुले सोधी—'कस्तो बाधा परिआयो ? के अपशगुन भयो ?'

हिरण्यकशिपुले भन्यो—'म जुन रूखका मुनि बसेर तपस्या गरिरहेको थिएँ, त्यही वृक्षमा बसेर एउटा शुगा ''नारायण-नारायण'' भन्न थाल्यो।'

कयाधुलाई बड़ो आनन्द आयो जसरी भएपनि आज यिनले नारायणको नाउँ लिए। किनभने मेरा पति बड़ा अभिमानी र नास्तिक छन्। यदि म उनलाई 'नारायण' को धुन ( जप ) गर भनौं भने उनी मान्दैनन्। त्यसकारण मलाई कुनै युक्ति सोच्नुपर्ला।

आफ्ना पतिलाई जप-प्रवृत्तिपट्टि लगाएर पापकर्मबाट रोक्नसक्ने पत्नीलाई साँच्चिकै पत्नी भन्छन्। पतिलाई धर्म-परमात्माको मार्गमा लैजाने पत्नीलाई धर्मपत्नी भन्दछन्। पतिलाई पत्नीले मात्र धर्म र मोक्षको मार्गमा लैजान सक्छे।

कयाधुले सोची—'यो बड़ो राम्रो अवसर छ यस बहानामा आफ्ना पतिद्वारा बारम्बार भगवान्को नामोच्चारण गराउन सकुँला। आफ्ना पति सुधिऊन् भनेर ऊ चाहन्थी, भोजनादिबाट निवृत्त भएर सुत्ने वेलामा ऊ पतिको चरणसेवा गर्दै भन्न थाली—'भोजनका समयमा तपाईंको कुरामा मैले पूरा-पूरा ध्यान दिन पाइनँ। अँ वनमा के भएको थियो?'

हिरण्यकशिपु—'देवी, त्यहाँ एउटा शुगाले आएर नारायणको रटना गऱ्यो।'

कयाधु—'शुगाले के भन्थ्यो?'

हिरण्यकशिपु—'नारायण-नारायण।'

कयाधु—'यस्तो कसरी हुन्छ होला? के साँच्चिकै त्यो शुगाले बोलेको हो?'

हिरण्यकशिपु—'हो, त्यो नारायण-नारायण भन्दथ्यो।'

बिचरा कामातुर पति! पत्नीले युक्तिपूर्वक बारंबार यही कुरा दोहऱ्याउन लगाई।

कयाधुले यस प्रसङ्गबाट लाभ उठाएर आफ्ना पतिको मुखबाट नारायणको एकसौ आठ पटक नामोच्चारण गराई।

साधारणतया पुरुष कामान्धताको कारणले स्त्रीको अधीन हुन जान्छ। त्यसकारण पत्नीले चाही भने आफ्नो पतिलाई सुधार्नसक्छे। पत्नी यदि सुपात्र भई भने आफ्नो पतिलाई भगवद्भजनमा लीन गराउन सक्छे।

माता-पिता (हिरण्यकशिपु-कयाधु) भगवान्का नाउँको उच्चारण गरिरहेका थिए सोही समयमा माताको गर्भमा प्रह्लादजीको स्थापना भयो। त्यसकारण बाबु राक्षस भएपनि उसको पुत्र प्रह्लाद महान् भगवद्भक्त भए।

कयाधु गर्भवती भई र हिरण्यकशिपु तपश्चर्या गर्न वनतर्फ गयो। त्यहाँ उसले छत्तीस हजार वर्षसम्म तपस्या गऱ्यो। अन्न जल पनि त्याग गऱ्यो। यस कलियुगमा प्राण अन्न र जलमय छ, तर त्यस सत्ययुगमा प्राण अस्थिमय थियो। त्यसकारण त्यसको तपस्या शक्य थियो।

तप गर्नाले मात्र मनुष्यको कल्याण हुने होइन, त्यो शुद्ध हुन सक्तैन। तपका साथ-साथ भावना र हेतु पनि शुद्ध हुनुपर्छ।

हिरण्यकशिपुको हेतु अशुद्ध थियो। दुर्योधनले पनि विष्णुयाग गरेको थियो, तर त्यो धन पापमय थियो।

यदि योगको साधना गर्दै योगीको हेतु अशुद्ध भयो भने निश्चयै त्यसको पतन हुन्छ। केवल योग साधनले मात्र हृदय विशाल हुन सक्दैन। योगसिद्धिले अन्य शक्तिहरू प्राप्त होलान् तर हृदयको विशालता प्राप्त हुन सक्दैन। ब्रह्मानुभूतिका विना हृदय विशाल हुन सक्दैन।

हिरण्यकशिपुको तपश्चर्याबाट प्रसन्न भएर ब्रह्माजी त्यहाँ आउनुभयो। ऊ तब माटाको थुप्रोले ढाकिएको जस्तो थियो। ब्रह्माजीले जल छर्किएपछि ऊ बाहिर आयो। ब्रह्माजीले उसलाई सोध्नुभयो 'तिम्रो के इच्छा छ ?' हिरण्यकशिपुले भन्यो—'मलाई अमर बनाइदिनुहोस्'। ब्रह्माजीले भन्नुभयो 'मर्नु तर सबैलाई छ। जसको जन्म भएको छ, त्यसले मर्नै पर्छ। तँ अरू केही माग्।'

हिरण्यकशिपुले भन्यो—'मलाई अमरत्वकै वरदान दिनुहोस्, त्यही मात्र चाहिन्छ। त्यसकारण मलाई यस्तो वर दिनुहोस् म न दिनमा मरूँ न रातमा, न जड़द्वारा मरूँ, न चेतनद्वारा, न शस्त्रले मरूँ न अस्त्रले।'

ब्रह्माजीले सोच्नुभयो यसले कठिन तपश्चर्या गरेको छ, त्यसकारण वर चाहिँ दिनैपर्छ। उहाँले अमरत्वको वर दिइहाल्नुभयो।

अब हिरण्यकशिपु यति शक्तिशाली भयो जो ऊसँग सबै पराभूत भए।

देवहरूले दुःखको कारण प्रभुसँग प्रार्थना गरे। भगवान्ले भन्नुभयो जैले पनि मेरा वैष्णव व्यथित हुन्छन्, म अवतार लिन्छु।

यदि पापी दुःखी हुन्छ भने भगवान् त्यसको उपेक्षा गरिदिनु पनि हुन्छ र अवतार पनि लिनुहुन्न, तर उहाँले आफ्ना भक्तहरूको उपेक्षा कहिल्यै गर्न सक्नुहुन्न, भक्तहरूमाथि विपत्ति आइपरेपछि उहाँले अवतार लिनैपर्छ। देवहरूलाई भगवान्ले आश्वासन दिनु भयो 'जब कुनै वेला हिरण्यकशिपुले आफ्नू छोरासँग शत्रुता गर्ला र उसको हत्या गर्न तत्पर होला, तब म अवतार लिनेछु र हिरण्यकशिपुको बध गर्नेछु।'

अर्कातर्फ कयाधुका गर्भबाट प्रहलादको जन्म भयो र ऊ दिनदिनै ठूलो हुँदै गयो। सबैलाई यसबाट आनन्द-आह्लाद पाइन्थ्यो, त्यसकारण उसको नाउँ प्रह्लाद राखियो।

दैत्यहरूका गुरु थिए शुक्राचार्य। उनका शण्ड र अमर्क नाउँ गरेका दुइ छोरा थिए। जब प्रह्लाद पाँच वर्षका भए तब हिरण्यकशिपुले शण्डामर्कलाई बोलाएर 'मेरो यस पुत्रलाई राजनीतिको शिक्षा दिनू' भनेर अह्रायो।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन् त्यसोत शण्डामर्कले प्रह्लादलाई राजनीतिशास्त्र पढ़ाउँथे, तर प्रह्लाद गर्भवासको समयदेखिनै भक्तिको रङ्गमा रङ्गिएका थिए।

प्रह्लादलाई भगवान् वासुदेवका साथ स्वाभाविक प्रीति थियो। श्रीकृष्णको अनुग्रहरूप विग्रहले उनको हृदय यसप्रकार आकर्षित गरेको थियो जो उनलाई जगत्सँग केही पनि वास्ता रहेको थिएन।

त्यसोत भक्तिको रङ्ग चाँड़ै लाग्दैन तर जब एकपटक लाग्दछ तब फेरि सांसारिक प्रवृत्तिहरूप्रति वैराग्य हुन्छ।

मीराबाईले भनेकी छिन् 'मेरो कृष्णाको रङ्ग श्याम छ र श्याम रङ्गमा अरू रङ्गको प्रभाव पर्दैन।'

प्रह्लादजी जन्मैदेखि भक्तिको रङ्गमा रङ्गिएका थिए। उनी महावैष्णव थिए। उनी गुरुजीको शिक्षा सुन्थे तर राजनीतिको चिन्तन अलिकता पनि गर्दैनथे।

सच्चा ज्ञानी भक्तको लक्षण यही हो जबसम्म देहमान छ उसको व्यवहारमा क्षति आउँदैन।

गुरुजीले सोचे यो राजपुत्र बड़ो लायक छ, त्यसकारण उसको शिक्षाबाट प्रभावित भएर उसका पिताले केही न केही पुरस्कार अवश्य दिनेछन्। उनले प्रह्लादलाई लिएर राज्यसभामा आए। प्रह्लादले पिताजीलाई प्रणाम गरे। पिताजीले बालकलाई उठाएर काखमा राखेर प्यारो गरी सोधे—बाबु, तिमी हिजो गुरुको घर पढ्न भनी गएका थियौ, हिजोको पाठ तिमीलाई संझना छ छैन ? जो पाठ ( प्रकरण ) तिमीलाई मन पर्छ त्यो भनत।

प्रह्लादले सोचे पिताजी उत्तम प्रकरणको कुरा सोध्नुहुन्छ र गुरुजीले चाहिँ मारकाटको विद्या सिकाउनुभएको छ। त्यो म कसरी भन्न सक्छु ? त्यसकारण उनले पिताजीलाई असल कुरा बताए—

हित्वाऽत्मपातं गृहमन्धकूपं वनं गतो यद्धरिमाश्रयेत।
( भा० ७-५-५ )

अँध्यारो इनारको समान यो घर आफ्नो अधःपतनको मूल कारण हो। जीवहरूलाई यही श्रेयस्कर हुन्छ उनीहरूले गृहत्याग गरेर वनवासी बनून् र उहाँ भगवान् श्रीहरिको आश्रय लिऊन्।

प्रह्लादले भने—'पिताजी, अनेक जन्महरूको प्रभावबाट म यो भनिरहेछु यो जीव कति पटक स्त्री, पशु, पन्छी बनेको छ। हजारौं जन्मदेखि प्रभुबाट छुट्टिएको यो जीव लौकिक सुखोपभोगमा लीन छ। तैपनि यो अतृप्त छ। तृप्ति भोगेर हुने होइन त्यागबाट मात्र प्राप्त हुन्छ। संसार दुःखको सागर हो। प्रत्येक जीव पीड़ित छ। पाप र पुण्यमा समानता आएपछि यो मानव देह प्राप्त हुन्छ। जसरी यो पाप भोग्नुपर्छ सोही किसिमबाट पुण्य पनि भोग्नुपर्छ। संसार प्रतिक्षण परिवर्तनशील छ।'

पिताजी आजसम्ममा मेरो अनेक जन्म भइसकेको छ। म आफ्नो अनुभवबाट भन्छु स्वार्थ र कपटको सिवाय यस जगत्मा अरू केही छैन। तैपनि जीव अविवेकी छ। निःस्वार्थ प्रेमी परमात्मा मात्र हो। अन्य सबैको प्रेम स्वार्थ र कपटले भरिएको हुन्छ। संसारमा बसेर कपट र छल गर्नैपर्छ। जहाँ कुनै वासना आयो त्यहाँ छलकपट गर्नै पर्छ।

पति-पत्नीको प्रेममा पनि स्वार्थ र कपट भइहाल्छ। जीव कति स्वार्थी र कपटी छ। मलाई एउटी असल नारी भेटिएकी थिइन्। जो भन्थिन् उनकी सासूले उनलाई चेतावनी दिँदै भनिन् रे तीन छोरीहरू प्रशस्त भए। यदि चौथो पटक पनि छोरी जन्माइस् भने कुनै किसिमबाट घरबाट तँलाई निकालिदिने छु।

त्यसो तर पुत्रको जन्म होवोस् या पुत्रीको, यो कसैको वशको कुरा होइन। पुत्रले एउटै कुलको उद्धार गर्छ, सुयोग्य पुत्री भई भने पिता र पति दुवै कुलको उद्धार गर्दछे।

दुर्भाग्यवश यदि पत्नी बिरामी भई भने उसका निमित्त चार-पाँच हजार खर्च गरिदेला र दुइ-चार वर्ष प्रतीक्षा पनि गर्ला। यतिमा पनि उसको बिमारी ठीक भएन भने भगवान्सँग प्रार्थना गर्दछ यसलाई केही भइदिए हुन्थ्यो। केही भइदिए हुन्थ्योको अर्थ हो मरिदिए हुन्थ्यो। ऊ सोच्छ मेरो आयु पनि धेरै छैन। अहिले अठचालीसमा प्रवेश गरेको छु। मेरो कामकाज पनि राम्ररी चलेको छ, त्यसकारण दोस्री पत्नी पाइहालिएला।

पति-पत्नीको प्रेममा पनि कपट छ। पत्नी या पति एक-अर्कालाई दुःखदायी भए उनीहरू सोच्दछन् यो मरिदिए कति बेस हुने थियो।

''सुर नर मुनि सबकी यह रीति, स्वारथ लागि करहिं सब प्रीती।''

पति-पत्नी एक अर्कालाई सुख-सुविधा दिन्छन् त्यसकारण एक अर्कालाई प्रेम गर्छन्।

तीमध्ये कुनै एकले दुःख दिन थाल्यो भने उससँग घृणा भइहाल्छ। जगत्मा स्वार्थ र कपटका सिवाय अरू केही पनि छैन।

यस्तै प्रकारको कुरा ऋषि याज्ञवल्क्यको मैत्रेयजीका साथ भएको थियो।

ऋषि याज्ञवल्क्यले संन्यास ग्रहण गर्ने निश्चय गरे। उनले आफ्नी पत्नी मैत्रेयी र कात्यायनीलाई भने—म अब संन्यासी हुन आँटेको छु। मेरो सम्पत्ति तिमी दुइमा समानरूपले बाँड़िदिन्छु जसले तिमीहरू दुइमा झगड़ा हुन नपाओस्।

मैत्रेयी ब्रह्मवादिनी थिइन्। उनले पतिलाई सोधिन्—'यस धनसम्पत्तिले के मलाई मोक्ष मिल्ला? म अमर हुन पाउँला?'

याज्ञवल्क्य—'ए, धनबाट पनि कहीं मोक्षको प्राप्ति हुन सक्छ? हो, यसले तिमीलाई सुख-सुविधा—भोगको पदार्थ पाउन सकिन्छ, त्यसकारण तिमीले आनन्दसाथ जीवन बिताउन सक्छ्यौ।'

मैत्रेयी—'जुन धनबाट मोक्षको प्राप्ति हुँदैन त्यो लिएर म के गरूँला? तपाईंले यो कात्यायनीलाई दिनुहोस्।'

मैत्रेयीको जिज्ञासाबाट प्रभावित भएर मुनिले उनलाई ब्रह्मविद्याको उपदेश दिए र मोक्षको साधन बताए।

याज्ञवल्क्यले भने—'मैत्रेयी, आफ्नो स्वयंको सुखका निमित्त मात्र घर, पुत्र, पत्नी आदि प्यारो लाग्दछ। प्रिय तर आत्मा मात्र हो'—

आत्मा वै सर्वेषां प्रियः।
न वा अरे पत्युः कामाय पतिः प्रियो भवति।
आत्मनस्तु कामाय पतिः प्रियो भवति।
न वा अरे जायायाः कामाय जाया प्रिया भवति।
आत्मनस्तुकामाय जाया प्रिया भवति।
न वा अरे पुत्राणां कामाय पुत्राः प्रियाः भवन्ति।
आत्मनस्तु कामाय पुत्राः प्रियाः भवन्ति।

पतिसँग पत्नीको जो प्रेम छ त्यो पतिको कामनापूर्तिका निमित्त होइन, तर स्वयंको कामना पूर्तिका निमित्त हो। यस्तै किसिमबाट पतिको र माता-पिताको पुत्रप्रेम पनि स्वयं आफ्नै कामनापूर्तिका निमित्त मात्र हो। पत्नी पतिसँग प्रेम गर्छे किनभने पति उसको जीवनयापन गराउँछ। पति रहेदेखि म बाँच्न सकुँला—यस्तै आशा र अपेक्षाले पत्नी पतिसँग प्रेम गर्छे। यस्तै प्रकारले पति पनि पत्नीलाई खास प्रेम गर्दैन। ऊ त्यसलाई यसका निमित्त प्रेम गर्छ जो त्यसले उसको इच्छाहरू पूर्ण गरिदिन्छे। माता-पिता पुत्रलाई यसकारण प्रेम गर्छन् ठूलो भएपछि उनको लालनपालन छोराले गर्ला। मनुष्यले मनुष्यलाई कहिल्यै प्रेम गर्दैन, तर आफ्नो स्वार्थका लागि मात्र प्रेम गर्छ।

प्रह्लादजीले भने—'कैयौं जन्महरूको अनुभवबाट म यो भन्न सक्छु—संसारमा कसैलाई पनि साँचो शान्ति प्राप्त भएको छैन।'

घरमा राम्ररी भजन गर्न पाईंदैन। त्यसकारण भजन घरमा नगरेर वनमा गएर गर्नु छ। एकान्तमा गएर नारायणको आराधना गर्नु पर्छ।

समाज सुधारकको भावना त्यसो त ठिक्कै हो तर यसका साथ-साथै अहङ्कार पनि उत्पन्न हुन्छ र अहङ्कारले आफ्नासाथ सबै अवगुणहरू लिएर आउँछ। समाजलाई कसैले पनि सुधार्न सकेको छैन। त्यसकारण तिमीले यही भावना गर म आफ्नो जीवन र मनलाई सुधार्नेछु। साधारण मानिसले जगत्‌लाई सुधार्न सक्तैन। शुक्राचार्य या वल्लभाचार्यको मात्र यो काम हो।

प्रह्लादजीको यस्तो कुरा सुनेर हिरण्यकशिपु क्रोधित भयो। उसले शण्डामर्कलाई दोष दिएर भन्यो मेरा बालकलाई तिमीले यो कस्तो उपदेश दियौ, यो कस्तो शिक्षा दिएको ?

शण्डामर्क—'मैले यस्तो शिक्षा उसलाई कहिल्यै दिएको छैन।'

हिरण्यकशिपु—'हेर, देव मसित डराउँछन्। ऊ सूक्ष्मरूप धारण गरेर विष्णुको प्रचार गर्छ। त्यसकारण तिनीहरूसँग सावधान भएर बसे।'

शण्डामर्कले प्रह्लादजीलाई सोधे—मैले जुन कुरा तिमीलाई कहिल्यै पढ़ाइनँ त्यो तिमीले आफ्ना पिताजीका समक्ष किन भन्यौ ?

प्रह्लादजी—'गुरुजी, जीव न कसैको भनाइमा भक्ति गर्दछ न ईश्वरका तर्फ लाग्छ। त्यसोत सन्त कृपा र सत्सङ्गका विना भक्तिको रङ्ग लाग्दैन। तर प्रभुकृपाबाट पनि भक्तिको रङ्ग लागिहाल्छ।'

केही दिनपछि हिरण्यकशिपुले फेरि प्रह्लादलाई सोध्यो—'बाबु ! गुरुसँग यी दिनहरूमा तिमीले जो शिक्षा पाएका छौ त्यसमध्ये केही असल कुराहरू मलाई पनि भन।'

प्रह्लाद भन्न थाले—'पिताजी, विष्णु भगवान्‌को भक्तिका नौ प्रकार छन्—भगवान्‌को नाउँ-गुण-लीला आदिको श्रवण, कीर्तन, उनको स्वरूपको नाउँ आदिको स्मरण, चरण सेवा, पूजा-अर्चना, वन्दना, दास्य, सख्य र आत्मनिवेदन। भगवान्‌मा समर्पणभावले यो नवधा भक्ति गर्नु सर्वोत्तम अध्ययन हो, यस्तो म मान्दछु।'

नवधा भक्तिद्वारा प्रभु प्रसन्न हुनुहुन्छ। प्रभुको प्रसन्नताले जीवन सफल हुन्छ। भोगोपभोगले मात्र शान्ति पाइँदैन।

छोराको यस्तो कुरा सुनेर हिरण्यकशिपु क्रोधित भयो र उसलाई आफ्नो काखबाट फ्याँकिदियो। सेवकहरूलाई यस बालकलाई मार भनेर आज्ञा दियो। यो मारिने लायक छ। यसले मेरो शत्रुको नाउँको भजन गर्छ। आज्ञा पाउनासाथ दैत्यका सेवक प्रह्लादलाई मार्न भनी दौड़े।

प्रह्लादको दृष्टि दिव्य थियो। उनलाई तरवारमा पनि कृष्णको दर्शन पाइयो र जसको हातमा तरवार थियो त्यस दैत्यमा पनि कृष्णको दर्शन भयो।

संसारमा धेरै किसिमका सुन्दर पदार्थहरू छन् सबैलाई भगवद्भावले हेर। जगत्‌को काम गरिरहे पनि ईश्वरसँग सम्बन्ध बनाइराख। बालकको अपेक्षा बालकृष्णसँग संलग्न रह्यौ भने कृष्ण भेटिनुहुन्छ र साथै लक्ष्मी पनि। लौकिक नामरूपमा फँसिरहेको मन श्रीकृष्णको नामरूपमा लीन भयो भने तब मुक्ति पाइन्छ र मनुष्यको उद्धार हुन्छ।

स्वरूप शक्तिको विना भक्ति फलवती हुन पाउँदैन। सांसारिक विषयहरूमा प्रेम हुनु आसक्ति हो। भगवान्‌का प्रति प्रेम हुनु भक्ति हो। संसारासक्ति बन्धनकर्ता हो। भगवदासक्ति मुक्तिदायक हो।

शुकदेवजी सावधान होऊ भन्नू हुन्छ।

'राजन् ! आँखाहरूमा कामलाई स्थान नदेऊ र मनमा स्वार्थलाई स्थान नदेऊ। जगत्‌लाई समभावले हेर। यदि आँखामा खराबी छ भने जगत् पनि खराबै देखिन्छ, संसारमा प्रेम भयो भने भक्ति हुन सक्दैन। प्रभुको स्वरूपमा आसक्ति हुनु भक्ति हो। भक्ति भयो भने मुक्ति पनि पाउन सकिन्छ। भगवान् श्रीकृष्णका सिवाय अरू कुनै पनि वस्तु सुन्दर छैन।'

दुइ व्यक्ति फूल किन्न भनी बजार गए। एउटालाई भगवान्‌को पूजाका निमित्त लिनु थियो र अर्कोलाई पत्नीको वेणीनिमित्त। पहिलो व्यक्ति भक्त हो र दोस्रो आसक्त। पहिलोको हृदयमा परमात्माको शृङ्गार पर्ने भावना छ, भक्ति छ। दोस्रो भक्त पत्नीको शृङ्गार गर्न चाहन्छ उसको मनमा सांसारिक विलासको आसक्ति छ। दुवै मानिसको क्रिया तर एउटै हो फूलको खरीद। तैपनि एकको क्रियामा भक्ति छ र अर्कोको क्रियामा आसक्ति।

दैत्य प्रह्लादलाई पिट्न थाले र पनि उनलाई अलिकति पनि दुःख भएन। प्रह्लादको भक्ति दिव्य थियो, उनी निर्भय थिए। उनलाई मार्न कति उपाय भयो र पनि मरेनन्। हिरण्यकशिपुलाई लाग्यो ऊ जादूगर होला। उसले आज्ञा दियो प्रह्लादलाई अँध्यारोमा लगेर बन्द गरिदेऊ, त्यहाँ अन्न जलको अभावले मर्ने छ।

प्रह्लादलाई बन्दी बनाए तर पनि उनलाई कुनै किसिमको डर भएन। उनले सोचे—'बेसै भयो। अब म यहाँ शान्तिपूर्वक भजन-कीर्तन गर्न सकुँला।'

सुखमा भगवत्कृपाको अनुभव गर्ने मानिस वैष्णव हो, तर जो दुःखमा पनि भगवत्कृपाको अनुभव गर्छ त्यो महान् वैष्णव हो। दुःखमा पनि जसले सेवा स्मरण छोड्दैन त्यो महान् वैष्णव हो।

देवकी बसुदेवलाई कति कष्ट सहनुपर्‍यो र पनि उहाँहरूले धैर्य छोड्नुभएन। हामी त सानोतिनो दुःखले आत्तिन थाल्छौं र सोच्दछौं 'मैले यति सेवा स्मरण गरेर पनि भगवान्‌ले कष्टमात्रै दिनुभयो।'

अतिशय दुःखदायी अवस्थामा पनि प्रह्लाद यही सोच्छन् मेरा भगवान् मेरा सँगमै हुनुहुन्छ फेरि डराउनु किन?

भयाक्रान्तबाट ईश्वर टाढ़ा हुनुहुन्छ। गीतामा भनेको छ म तिम्रो नजिक छु म तिमीलाई देख्छु र पनि तिमीले मलाई देख्न पाउँदैनौ।

अँध्यारामा पनि प्रह्लाद भयभीत भएनन्। उनी कृष्णको कीर्तन गर्न थाले। उनलाई आज आफ्नो शरीरको भान पनि थिएन।

भगवत्प्रेममा जसलाई देहाभिमान हुँदैन, उसलाई संसारको कुनै पनि विकार प्रभावित गर्न सक्दैन।

आज भगवान्‌ले लक्ष्मीलाई सोध्नुभयो जगत्‌मा कोही जीव भोको बसेको छैन? तब लक्ष्मीजीले भन्नुभयो 'तपाईंको भक्त प्रह्लाद कैदमा भोको परिरहेछ।' भगवान्‌ले भन्नुभयो—देवी उसलाई छिटै प्रसाद पठाइदेऊ। लक्ष्मीले प्रह्लादलाई आफ्नो पुत्र मानेर स्वीकार गर्नुभयो। पार्षदहरूले प्रह्लादलाई भने तिम्रा निमित्त लक्ष्मीजीले यो प्रसाद पठाइदिएको छ।' प्रह्लादले प्रणाम गरे। उनले सोचे 'प्रभुको ममाथि कति कृपा रहेछ, उहाँलाई मेरो कति चिन्ता छ। यता कारावासमा पनि मेरा निमित्त उहाँले प्रसाद पठाइदिनुभयो।'

हिरण्यकशिपुका सेवकहरूलाई आश्चर्य भयो। उनीहरू विचार गर्न थाले हामी यहाँ पाले भै बसेर पनि प्रह्लाद भोजन कसरी गरिरहन्छन्। यो जादूगर पो होकि? तिनीहरूले गएर हिरण्यकशिपुलाई यी कुरा भने। उसले कारावासमा गएर हेर्छ प्रह्लाद प्रसाद खाइरहेछन्। उसले छोरालाई सोध्यो—'प्रह्लाद, साँचो भन् यो भोजन तँलाई कसले दियो? प्रह्लादले भने—माताका गर्भमा जसले मेरो भरणपोषण गरेको थियो, उसैले यहाँ पनि मेरो पोषण गरिरहेछ।

पिताजी, यो कारावासको कोठा तैपनि ठूलो छ, तर गर्भवास कति सानो हुन्छ। त्यहाँ जसले मेरो पोषण गर्‍यो, रक्षा गर्‍यो, त्यसैले यहाँ पनि मेरो पोषण गर्ला।'

हिरण्यकशिपुले सोच्न थाल्यो यो त कुनै उपायले पनि मर्न आँटेन। कहीं मलाई मार्न यो आएको होइन? ऊ आत्तिएर शण्डामर्कछेउ पुग्यो।

राजाको निस्तेज मुख देखेर शण्डामर्कले आश्वासन दिँदै भने—'पाँच वर्षको एउटा सानो बालकले तिमीलाई कसरी मार्न सक्छ। हामी त्यसलाई वरुणपाशले बाँधिदिने छौं। उनीहरूले प्रह्लादलाई वरुणपाशले बाँधेर घर फर्की आए।'

प्रह्लादको दृष्टि यस्तो मङ्गलदायी भइसकेको थियो जो उनलाई सबै जगमा श्यामसुन्दरको मात्र दर्शन हुन थाल्यो।

एक पटक गुरुजी कहीं बाहिर गएका थिए, शिष्यहरूले भकुण्डो खेल्न सोचे। प्रह्लादले उनीहरूलाई भने आज म तिमीहरूलाई एउटा नयाँ खेल खेलाउँछु। उनले ती बालकहरूलाई भागवत धर्मको उपदेश दिए र भने—

कौमार आचरेत् प्राज्ञो धर्मान् भागवतानिह।
दुर्लभं मानुषं जन्म तदप्यध्रुवमर्थदम्॥
(भा० ७-६-१)

मित्र हो। यस संसारमा मानव जन्म अति दुर्लभ छ। यसको सहाराले परमात्मा पनि प्राप्त हुन सक्नुहुन्छ, तर कसैलाई यो थाहा छैन यसको अन्त्य कहिले आउने हो। त्यसकारण बुद्धिमान् पुरुषलाई चाहियो उसले यौवन र वृद्धावस्थाको विश्वास नगरोस् र बाल्यावस्थाबाटै प्रभुप्राप्तिका निमित्त साधन गरोस्।

प्रह्लादको चरित्रले पनि हामीलाई यही सिकाउँछ बाल्यावस्थाबाटै ईश्वरभजनमा लीन हुनुपर्छ। आमाबाबुले आफ्ना सन्तानहरूमा धार्मिक संस्कार उब्जाई दिनुपर्छ।

वृद्धावस्थामा देहको सेवा हुनसक्छ तर देवसेवा हुँदैन।

मानव शरीर भोगोपभोगका निमित्त होइन, यसको प्राप्ति भगवद्-भजनद्वारा प्रभुप्राप्तिका निमित्त भएको छ।

शरीर नाशवान् भएर पनि मनुष्य जन्म दुर्लभ छ। कारण यो हो उसले जन्म इच्छित वस्तु दिन सक्दछ। यस अनित्य र नाशवान् शरीरबाट नित्य वस्तु भगवान्‌को प्राप्ति हुन सक्छ।

यो मानव शरीर ज्यादै मूल्यवान् छ। कतिपटक जन्म-मरणको पीड़ा सहँदै जीव यस शरीरमा आएको छ।

ईश्वर नित्य छ शरीर अनित्य। तर यसै अनित्यबाटै ( शरीरबाटै ) नित्यको प्राप्ति ( ईश्वरको प्राप्ति ) हुन सक्छ। त्यसकारण मानवदेहको पनि ठूलो महिमा छ।

भन्दछन् कुनै वेलामा मानिसको आयु सय वर्षको हुन्थ्यो। आजकल तर त्यस्तो कुरा छैन। आज आधा आयु निद्रावस्थामा, चौथो भागको बाल्यावस्था र कुमारावस्थामा बितिहाल्छ। वृद्धावस्थाको वर्ष पनि निरर्थक हुन्छ, किनभने शारीरिक क्षीणताका कारण वृद्धावस्थामा केही पनि काम हुन पाउँदैन। यौवनको वर्ष कामभोगमै बित्दछ तब अब कति थोरै वर्ष रह्यो ? र यी शेषवर्षमा आत्मकल्याणको साधना कहिले र कसरी हुने ?

त्यसकारण व्यक्तिलाई चाहिन्छ त्यो सदा आत्मकल्याणको प्रवृत्तिमा लागोस्। भनेको छ—

यावत् स्वस्थमिदं कलेवरगृहं यावच्च दूरे जरा,
यावच्चेन्द्रियशक्तिरप्रतिहतायावत्क्षयो नायुषः।
आत्मश्रेयसि तावदेव विदुषा कार्यःप्रयत्नो महान्,
प्रोद्दीप्ते भवने तु कूपखननं प्रत्युद्यमः कीदृशः॥

जबसम्म यो शरीररूपी गृह स्वस्थ हुन्छ, जबसम्म वृद्धावस्थाले आक्रमण गरेको छैन, जबसम्म इन्द्रियहरूको शक्ति पनि क्षीण भएको छैन, आयुष्यको पनि क्षय भएको छैन। विद्वान् व्यक्तिले त्यतिञ्जेलसम्ममा आफ्नो आत्मकल्याणको प्रयत्न गरोस्। अन्यथा घरमा आगो लागिसकेपछि इनार खनाएर पो के काम ?

ततो यतेत कुशलः क्षेमाय भयमाश्रितः।
शरीरं पौरुषं यावन्न विपद्येत पुष्कलम्॥

( भा० ७-६-५ )

हाम्रो मगजलाई कति प्रकारका भयले घेरिरहेका हुन्छन्, त्यसकारण यो शरीर, जो भगवत्-प्राप्तिका निमित्त पर्याप्त छ, रोगग्रस्त भएर मृत्युवश भयोभने, त्यसको अगावै आत्मकल्याणका निमित्त प्रयत्न बुद्धिमान्‌हरूले गर्नुपर्छ।

मानिस दुःख माग्दैन तापनि त्यो अचानक आइहाल्छ। यसैले यस्तो भाकल गर्दैन मलाई ज्वरो आयो भने म सत्यनारायणको पूजा गराउँला। तैपनि ज्वरो आइहाल्छ। प्रयत्नविनै जस्ता

प्रकारले प्रारब्धानुसार दुःख आउँछ त्यस्तै प्रकारबाट सुख पनि आउँछ, सुख-दुःख दुवै प्रारब्धका अधीन छन्। प्रारब्ध अनुसार मात्र ती पाइन्छन्। यसका निमित्त प्रयत्न अनावश्यक छ। पूर्वजन्मकै कर्महरूको फल हो प्रारब्ध। दरिद्र सम्पन्न भइहाल्छ र सम्पन्न दरिद्र। प्रारब्धानुसार जो पाइएला, त्यसका निमित्त प्रयत्न अनावश्यक छ। त्यसकारण सांसारिक सुखभोगहरूको प्राप्तिका निमित्त प्रयत्न नगरेर परमात्मालाई प्रसन्न गर्नलाई मात्र प्रयत्न गर। परमात्मालाई पाउनको निमित्त मात्र प्रयत्न गर।

प्रारब्धद्वारा जो हुने भइरहेछ। त्यसका निमित्त सबै प्रयत्न गर्छन्, तर जसलाई प्रयत्न गर्नुपर्ने हो त्यसलाई कोही पनि प्रयत्न गर्दैन। परमात्माका निमित्त कसैले केही पनि गर्दैन। सत्कर्ममा प्रयत्न प्रधान छ, प्रारब्ध होइन। सत्कर्ममा बाधा गर्ने शक्ति प्रारब्धमा छैन। मनुष्यको आफ्नो दुर्बलताको कारणले प्रभु भजनमा बाधा उपस्थित हुन्छ।

बालकहरूले प्रह्लादजीसँग सोधे—'यदि हामीले वृद्धावस्थामा भजन गर्‍यौं भने नि ?'

प्रह्लादजीले उनीहरूलाई संझाउनुभयो—'भजन यौवनमै हुनसक्छ। वृद्धावस्थामा शारीरिक दुर्बलताको कारण ईश्वरको आराधना हुन पाउँदैन। वृद्धावस्थामा देहको भक्ति हुनसक्छ तर देवको होइन।'

बालकहरूले सोधे—'तब फेरि हामी अहिल्यैदेखि भक्ति किन गरौं ? युवावस्थामै गरौंला ?'

प्रह्लाद भन्नुहुन्छ—'यौवनमा मद उत्पन्न हुन्छ। युवावस्थामा मनुष्य इन्द्रियहरूसँग प्रेम गर्दछ। त्यो इन्द्रियको अधीन हुन्छ। यौवनमा त्यो कति प्रकारको मोहमा फँस्छ। अर्थोपार्जन र इन्द्रियहरूको लालनमै त्यसको आयु नष्ट हुन्छ। यसो तर आत्मा इन्द्रियहरूको स्वामी हो तैपनि मनुष्य इन्द्रियहरूको दास बनिहाल्छ।

यो कुरा सर्वसामान्य छ। बड़ा-बड़ा विद्वान् पनि सारा दिन धनका पछि दौड़धूप गर्छन् र रातमा कामान्ध बन्दछन्। विद्याको फल जन्ममृत्युको व्यथाबाट मुक्ति र परमात्माको प्राप्ति मात्र हो। विद्याको फल धन या प्रतिष्ठा होइन।'

दैत्यबालकहरूले सोधे—'हामीले परमात्मालाई कसरी प्रसन्न गर्ने ?'

प्रह्लादले भन्नुभो—सबैमा एक परमात्माको नै दर्शन गर। जगत्लाई प्रसन्न गर्न कठिन छ, तर कृष्णलाई प्रसन्न गर्न सरल छ—

तस्मात् सर्वेषु भूतेषु दया कुरुत सौहृदम्।
आसुरं भावमुन्मुच्य यथा तुष्यत्यधोक्षजः॥

(भा० ७-६-२४)

त्यसकारण तिमीले आफ्नो दैत्यत्व, आसुरी संपत्ति, आसुरीभावलाई त्याग गरेर सबै प्राणीहरूप्रति दया गर। प्रेमले उनको भलाइ गर। यसैले भगवान् प्रसन्न हुनुहुन्छ।

प्रह्लाद बालकहरूलाई संझाइरहनु भएको छ—'नाम भनेकै ब्रह्म हो। ईश्वरको निर्गुण स्वरूप अति सूक्ष्म छ। मन, बुद्धि जबसम्म अति सूक्ष्म हुन पाउँदैन, तबसम्म ईश्वरको निर्गुण स्वरूपको अनुभव हुन सक्दैन। ईश्वरको सगुण स्वरूप अतिशय तेजोमय छ। प्रभुको सगुण स्वरूपको साक्षात्कार गर्ने शक्ति मनुष्यमा छैन।' अर्जुनले भनेका थिए—'*भयेन च प्रव्यथितं मनो मे*' अर्थात् तपाईंको यो रूप देखेर मेरो मन भयले बहुतै व्याकुल भइरहेछ।

नामब्रह्मको दर्शन र अनुभव सबै गर्न सक्दछन्। कीर्तनमा थपड़ी बजाउनाले नादब्रह्म हुन्छ। नादब्रह्म र नामब्रह्म एक भएपछि परब्रह्मको प्राकट्य हुन्छ। नामब्रह्मका साथ नादब्रह्मको संयोग भएपछि प्रभुले प्रकट हुनैपर्छ।

थपड़ी बजाई-बजाईकन कीर्तन गर। प्रभु सबैलाई हेर्नुहुन्छ। कीर्तनमा जसले थपड़ी बजाउँदैन, उसलाई भगवान् सोच्नुहुन्छ म मूर्ख रहेछु जो मैले यसलाई हात दिएँ तर अर्को जन्ममा म आफ्नो भूल सुधार्ने छु र उसलाई दुइ अरू गोड़ा दिनेछु। प्रभुभजनमा ताली बजाउनमा केको लाज ! पापसँग लाज मान, पाप गर्न मनै नगर। जो प्रभुभजनमा ताली बजाउन सङ्कोच मान्छन्, तिनलाई आगामी जन्ममा परमात्माले हातको साटो दुइ गोड़ा अरू थपिदिनुहुन्छ। त्यसकारण प्रेमसाथ थपड़ी मारेर सङ्कीर्तन गर।

प्रह्लादजीले बालकहरूलाई आज्ञा दिए—'प्रेमसँग कीर्तन गर।'

न दानं न तपो नेज्या न शौचं न व्रतानि च।
प्रीयतेऽमलया भक्त्या हरिरन्यद्विडम्बनम्॥
(भा० ७-७-५२)

भगवान्लाई प्रसन्न गर्नका निमित्त दान, तप, यज्ञ, शौच, व्रत आदिले मात्र पर्याप्त हुँदैन। उहाँ केवल निष्काम भक्तिले मात्र प्रसन्न हुनुहुन्छ। अरू सबै विडम्बना मात्र हो। त्यसकारण भक्ति गर।

प्रह्लादजी सबैसँग कीर्तन-मन्त्रजप गराउन थाल्नुभयो।

हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

यो मन्त्र कलिसन्तरणोपनिषद्को हो। यो महामन्त्र हो। यो जप गर्नलाई कुनै पनि विधिको आवश्यकता छैन। यो मन्त्रको जप जुन स्थितिमा चाहे पनि र स्नानविना पनि हुन सक्छ। बाटामा हिँड्दा-हिँड्दै जुत्ता लगाएर पनि जप गर्न सकिन्छ।

सबै बालकहरू ताली बजाउँदै 'हरे राम हरे राम, राम राम हरे हरे' को कीर्तन गर्न थाले।

कथामा कीर्तन पनि हुनुपर्छ। कीर्तनका विना कथा परिपूर्ण हुन पाउँदैन। कीर्तनले पाप डढ्छ, हृदय विशुद्ध हुन्छ, परमात्मा हृदयमा आएर बस्नुहुन्छ। त्यसकारण कीर्तन प्रेमसाथ गर।

प्रह्लादजी तन्मय हुनुभयो र राधाकृष्णको दर्शन गरी ता थै गरेर नाच्न लाग्नुभो। बालक पनि प्रभुभजनमा मग्न भएर नाच्न थाले। यत्तिकैमा शण्डामर्क आइपुगे। उनले सोचे हिरण्यकशिपुले कहीं यो कुरा थाहा पाए भने बड़ो अनर्थ हुने भो। उनीहरूले प्रह्लादलाई भने 'यो के उधुम मचाइराखेको ? बन्द गर यो भजन।' तर उनको कुरा सुन्ने पो को र? मन चाहिँ श्रीकृष्णमा तल्लीन थियो, प्रह्लादले पनि सुनेनन्। शण्डामर्कले दगुरेर गई प्रह्लादको हात समाते। प्रह्लादको शरीर दिव्य थियो। जसै शण्डामर्कले उनको हात समातेका थिए उनी पनि नाच्न थाले।

त्यही दिन हिरण्यकशिपुले सोचे 'म पनि गएर हेरूँ गुरुजी कस्तो शिक्षा दिइरहेछन्'। उनले त्यहाँ एउटा नोकर पठाए। सेवकले त्यो समूह नृत्य देख्यो तब सोचमा पऱ्यो, नाम सङ्कीर्तनमा लीन भएर गुरुजी र सबै बालक नाचिरहेका थिए। सोच्यो राजालाई यो कुरा मन पर्दैन, यदि उहाँले यो कुरा थाहा पाउनु भयो भने गुरुजीको हत्या गरिदिनु हुनेछ।

सेवकले गुरुजीको हात समातेर आसनमा बसाउन चेष्टा गरे तर गुरुजीको स्पर्शले त्यो पनि नाच्न थाल्यो। उसले यो कुरा बिर्सिहाल्यो ऊ यहाँ किन आएको थियो। सत्सङ्गको महिमा बड़ो अनौठो छ।

सेवकलाई फर्कनमा अबेर भएको हुनाले राजाले अर्को सेवक पठाए। उसले पनि देख्यो त्यहाँ सबै सङ्कीर्तनमा मस्त भएर नाचिरहेछन्। त्यस भजन मण्डलीमा भएका कुनैको स्पर्शबाट त्यो पनि नाच्न थाल्यो।

यसप्रकार राजाले नोकर पठाउँदै रहे तर ती सबै वहाँ पुगेर नाच्न थाले। राजाले सोचे यो के रहस्य हो। उनी स्वयं त्यहाँ दौड़िँदै आए। उनले देखे गुरुजी बालकगण र सबै सेवक नाम सङ्कीर्तनमा लीन भएर नाचिरहेछन्। यो देखेर राजा रीसले चूर भए। उनले ती नाच्नेमध्येबाट एक जनाको हात समातेर तल बसाइदिए। राजालाई भने स्पर्शले केही भएन किनभने त्यो बिजुलीको बिग्रिएको चिमजस्तो थियो। बिजुलीको चिम नजलेको भए मात्र बिजुलीको प्रवाहले असर गर्छ, नत्र गर्दैन।

भजन कीर्तन थामियो। गुरुजीले राजालाई सबै कुरा भने। तब उनी क्रोधित भएर प्रह्लादलाई भन्न थाले अझ पनि मेरो शत्रु विष्णुको कीर्तन गरिरहेछस्। जगत्मा मेरो सिवाय कोही ईश्वर छँदै छैन। दुष्ट, तँलाई म आज मार्नेछु।

मेरो यो बालक स्वयं आफू सुध्रिँदैन र अरू बालकहरूलाई पनि बिगारिरहेछ। यस्तो सोचेर राजाले अगाड़ि बढ़ी प्रह्लादको हात समात्यो। राजामा छोराको भक्तिको रङ्ग चढ्न पाएन। चिमनै खराब भएपछि विद्युत शक्ति के काम लाग्यो र।

राजाले ध्रुवलाई पृथ्वीमा बजाऱ्यो तर धरतीमाताले उनलाई आफ्नो काखमा उठाउनुभयो।

प्रह्लादजीले पितालाई प्रणाम गर्नुभयो। तब हिरण्यकशिपुले भन्यो, 'तँ मलाई प्रणाम गर्छस् तर मैले भनेको चाहिँ मान्दैनस्। भन् तेरो रक्षक विष्णु कहाँ छ ?'

प्रह्लादले भन्नुभो—'पिताजी, मेरा भगवान् सर्वत्र हुनुहुन्छ।

पिताजी, शायद तपाईं यो मान्नुहुन्छ तपाईं वीर हुनुहुन्छ, तर वीर त्यही हो जसले आफ्ना आन्तरिक शत्रुहरूलाई पराजित गरेको छ, तपाईं मान्नुहुन्छ जो आफूले जगत्‌लाई जित्नुभएको छ, तर जगत्‌विजेता त्यही हो जसले आफ्नो मनलाई जितेको छ। काम-क्रोधादि ६ शत्रु तपाईंका मनमा बसेका छन्, जसले तपाईंका विवेक धनलाई लुटिरहेछन्। क्रोध नगर्नुहोस्। तपाईंको मुखमा आज मृत्युको छायाँ देखा परिरहेछ। त्यसकारण रागद्वेषलाई त्यागेर नारायणको आराधना गर्नु, मेरा नारायणको भजन गर्नुहोस्।'

हिरण्यकशिपु क्रोधित भएर कराएर भन्न थाल्यो—मेरो छोरो भएर मैलाई उपदेश दिइरहेछ? कहाँ छ तेरो रक्षक विष्णु?

प्रह्लाद—'मेरा प्रभु सर्वव्यापक हुनुहुन्छ। उहाँ ममा हुनुहुन्छ, तपाईंमा पनि हुनुहुन्छ। तपाईंमा उहाँ भएकाले मात्र तपाईं बोल्न सक्नुहुन्छ। विष्णु सबैमा हुनुहुन्छ। सर्वत्र हुनुहुन्छ।'

हिरण्यकशिपु—'तेरो भगवान् यदि सर्वत्र छ भने यस स्तम्भमा उसको दर्शन किन भइराखेको छैन?'

**क्वासौ यदि स सर्वत्र कस्मात् स्तंभे न दृश्यते।**

'के तेरो भगवान् स्तम्भमा छन्?'

प्रह्लाद—'हो, मेरा प्रभु यसमा पनि हुनुहुन्छ। तपाईंको आँखामा काम छ, त्यसकारण उहाँ देखिनुहुन्न।'

हिरण्यकशिपु—'म यस स्तम्भलाई फोरेर विष्णुको हत्या गर्नेछु।'

राजा तरवार लिन गए। यता प्रह्लाद सोच्न थाल्नुभयो मैले यस स्तम्भमा भगवान् हुनुहुन्छ भनेर भनिदिएँ तर के यसमा उहाँको वास हुन सक्ला? उहाँले जब स्तम्भमा कान थापेर सुन्नुभयो तब भित्रबाट 'गुरु गुरु' को ध्वनि आयो र प्रह्लादलाई विश्वास भयो भगवान् यस स्तम्भभित्र पनि हुनुहुन्छ। उहाँले त्यस स्तम्भलाई अँगालो हाल्नुभयो। भित्रपट्टि नृसिंह स्वामी विराजमान हुनुहुन्थ्यो। उहाँले प्रह्लादलाई आश्वस्त गरिदिनुभयो म यसमा छु र प्रह्लादको रक्षा गर्नेछु।

यता हिरण्यकशिपु हातमा तरवार लिएर दौड़िँदै आयो र कराउन थाल्यो—भन्, तेरो विष्णु कहाँ छ?

प्रह्लाद—'उहाँ यसै स्तम्भमा विराजमान हुनुहुन्छ।'

हिरण्यकशिपुले क्रोधावेशमा त्यस स्तम्भमा तरवारले प्रहार गरे। तुरुन्त श्रीनृसिंह स्वामी 'गुरु' 'गुरु' भन्दै त्यस स्तम्भबाट प्रकट हुनुभयो। उहाँले हात बढ़ाएर हिरण्यकशिपुलाई काखमा बसालेर भन्नुभयो। ''यो न रात छ न दिन, न धरती छ, न आकाश, घरमा पनि होइन, बाहिर पनि

होइन तर सँघारमा तँलाई मार्नेछु। अस्त्र या शस्त्रले होइन, नङ्ग्राले मार्नेछु'' भगवान्‌ले त्यस असुरलाई नङ्ले चिरेर मारिदिनुभयो।

नृसिंह भगवान्‌की जय !

मानिसको दुःखको कारण उसको देहाभिमान हो, शरीर घर हो। शरीर घरसँग बस्ने जिब्रो सँघार हो। त्यसलाई न भित्र भन्न सकिन्छ न बाहिर। यदि अभिमानलाई मार्नु छ भने जिब्रोमा भगवान्‌को नाउँ राख।

आफ्नो भक्त प्रह्लादका वचनहरूलाई कृतार्थ गर्न र आफ्नो सर्वव्यापकता सिद्ध गर्नका निमित्त भगवान्, नृसिंहको स्वरूपमा वैशाख शुक्ल चतुर्दशीका दिन काष्ठ स्तम्भबाट प्रकट हुनु भएको थियो।

पंजाबमा आजको मुल्तान शहरमा हिरण्यकशिपुको राजधानी थियो। जहाँ नृसिंह स्वामीको प्राकट्य भएको थियो। यही कारणले पंजाबवासी आफ्ना नाउँका साथ सिंह शब्दको प्रयोग गर्दछन्। उनीहरू सिंहका समान बलवान् छन्। आजपनि उनीहरू शक्तिशाली छन्। गुजरातका जनता बाख्राझैं डरछेरुवा बनिरहेछन्। सत्त्वहीन भोजन र चियापान गर्ने शक्तिशाली कसरी बन्न सक्दछ ? पंजाबवासी दूध र मोहीको उपयोग धेरै गर्छन्। कुनै गुजराती युवालाई दुइ सेर दूध पिऊ भनेका खण्डमा तब उसले भन्ला—'नाइँ' नाइँ। यतिको दूध म कसरी पिउन सक्छु ? मेरो पेटमा गड़बड़ हुन्छ। जसले दुइ सेर दूध पिउन सक्दैन, त्यसले देशसेवा कसरी गर्ला ?

बलवान् बन। *''नायमात्मा बलहीनेन लभ्यः।''* शक्तिहीन पुरुष आत्मालाई प्राप्त गर्न सक्दैन।

नृसिंह भगवान् पनि ''गुरु-गुरु'' को उच्चारण गर्थे। गुरुका विना भगवान्‌को दर्शन शक्य छैन भन्ने कुरा यसले बताउँछ।

हरकिसिमको साधना गरौं, विवेक वैराग्य पनि होस्, षट्सम्पत्ति आदि पनि होस्, तर जबसम्म कुनै सन्तको, गुरुको कृपा हुँदैन, तबसम्म मन शुद्ध हुँदैन र भगवान्‌को प्राप्ति पनि हुँदैन।

मानिसले जति नै साधना गरोस् तर सन्तको कृपा भएपछि मात्र मन सधैंका निमित्त शुद्ध हुन सक्दछ।

मनले बड़े-बड़े साधुहरूलाई पनि सताएको छ। त्यो बड़ो ज्यादै चञ्चल छ। त्यसकारण मन-शुद्धिविना ईश्वरको साक्षात्कार हुन सक्दैन।

मल, विक्षेप, आवरण आदिबाट मन कलुषित र मलिन हुन्छ।

जस्ता प्रकारले मलिन अथवा चञ्चल जलमा प्रतिविम्ब देखिँदैन सोही प्रकार मलिन, चञ्चल र आवरणयुक्त मनमा परमात्माको प्रतिविम्ब देखिँदैन।

त्यसकारण कुनै सन्तको आश्रय लेऊ। कुनै गुरुको शरणमा जाऊ।

गुरुकृपाविना हृदय शुद्ध हुन सक्दैन। साधना गरेर पनि सद्‌गुरुको कृपाविना काम नबन्ला। साधन साधनाद्वारा मात्र हृदय शुद्ध हुने भएन।

नृसिंह स्वामीले गुरु शब्दको उच्चारण गरेर जगत्‌लाई देखाइदिनुभो सद्‌गुरुको कृपाविना भगवान्‌को साक्षात्कार हुन सक्दैन।

नामदेवलाई पनि गुरुका विना ज्ञान पाइएको थिएन।

आजकलका मानिसहरू पुस्तक पढ़ेर ज्ञानी बन्दछन्। उनलाई गुरुको, ब्रह्मचर्य पालनको, मौनव्रतको, सदाचारको, सन्तसेवाको आवश्यकतै छैन। ओछ्यानमा पल्टिएर पुस्तक पढ़ेर ज्ञानी बन्दछन्।

एकपटक महाराष्ट्रमा सन्तहरूको एउटा मण्डली जस्तो बनेको थियो।

भक्त मण्डलका सन्तहरूको परीक्षा गर्नका निमित्त मुक्ताबाईले गोरा कुम्हालेलाई भनिन्।

नामदेवलाई अभिमान थियो उनी भगवान्‌का प्यारा छन् र उनी भगवान्‌सँग कुरा पनि गर्दछन्।

गोरा कुम्हालेले सबैका शिरमा एक-एक थप्पड़ लगायो। प्रकट रूपले नामदेवले भन्नचाहिँ केही भनेनन्, तर उनको मुख गुत्थ पऱ्यो। उनले अभिमानवश सोचे कहीं माटाको भाँड़ो जस्तो मेरो परीक्षा हुन सक्छ क्या? अन्य भक्तहरूको मुखको भाव जस्ताको तस्तै रह्यो।

गोरा कुम्हालेले आफ्नो निर्णय सुनाए—'सबैका भाँड़ा ( मस्तक ) पाकेका छन् तर यस नामदेवको काँचो छ।'

यो सुनेर नामदेवले भने—'तैरै शिर काँचो छ। तँलाई शिक्षाको आवश्यकता छ।'

नामदेवले विट्ठलनाथजीकहाँ गएर सबै घटना सुनाए।

विट्ठलनाथजीले भन्नुभयो—'नामदेव, यदि मुक्ताबाई र गोरा कुम्हालेले तिम्रो शिर काँचो छ भन्छन् भने अवश्य तिमी काँचै हौला।

नामदेव, तिमीलाई अहिलेसम्म सर्वव्यापक ब्रह्मका स्वरूपको अनुभव भएकै छैन। यसको कारण यो हो तिमीले अहिलेसम्म कुनै सद्‌गरुको आश्रय लिएका रहेनछौ। तिमी मङ्गलवेढ़ामा बस्ने मेरो भक्त विसोवा खेचरकहाँ जाऊ उनले तिमीलाई ज्ञान दिनेछन्।'

नामेदव उनलाई खोज्दै शिवमन्दिरमा पुगे। त्यहाँ के देख्छन् भने विसोवा खेचर शिवलिङ्गमा गोड़ा पसारेर सुतिरहेका छन्।

विसोवाले पहिल्यै थाहा पाइसकेका थिए नामदेव आइरहेछन्, कारण उनलाई शिक्षा दिनका निमित्त मात्र शिवलिङ्गमा गोड़ा पसारेर सुतिरहेका थिए।

नामदेवले यो दृश्य देखेर विचार गर्न थाले जो व्यक्ति भगवान्‌को अपमान गरिरहेछ त्यसले मलाई के शिक्षा दिनसक्ला?

नामदेवले विसोवालाई भने 'शिवलिंग माथिको गोड़ा पन्छाऊ।' विसोवा खेचरले नामदेवलाई 'तैंले मेरो गोड़ा पन्छाएर कुनै यस्तो स्थानमा राखिदे जहाँ शङ्करको अस्तित्व नहोस्।' नामदेवले बिसोवाको गोड़ा यताउति गर्न थाले तर उनी खेचरको गोड़ा जहाँ पनि राख्थे त्यहीं शिवलिङ्ग प्रकट हुन्थ्यो। यसप्रकारले सारा मन्दिर शिवलिङ्गले भरियो।

नामदेव यो देखेर आश्चर्यमा डुबे। विसोवाले उनलाई भने—'तिमी वास्तवमा अझै कच्चै छौ। सबै ठाउँमा तिमी अझ पनि ईश्वरको दर्शन गर्न सक्दैनौ। विश्वमा भगवान् सूक्ष्मरूपले सर्वत्र व्याप्त हुनुहुन्छ। तिमीले सबै जड़-चेतनमा ईश्वरलाई नियालेर हेर।'

यसप्रकार जब भक्ति र ज्ञानको मिलन भयो तब नामदेव सबैमा र सबै ठाउँमा ईश्वरको दर्शन गर्न थाले।

ज्ञान प्राप्त गरेपछि नामदेव फर्किएर आए। फर्कदाखेरि बाटामा एउटा वृक्षका मुनि बसेर उनी भोजन बनाइराखेका थिए एउटा कुकुरले आएर रोटी चोरेर भाग्यो तर आज नामदेवले त्यस कुकुरमा पनि भगवान्को दर्शन पाए। रोटी सुख्खा थियो। त्यसकारण उनी घिउ लिएर त्यस कुकुरका पछि-पछि यस किसिमसँग कराउँदै हिंड़े—'पर्ख, रोटी सुख्खा छ। म त्यसमा घिउ दलेर दिन्छु।'

यदि गुरु स्वयं सांसारिक बन्धनहरूका अरू विषयहरूमा फँसेको छ भने निश्चय यो जान उनले तिमीलाई सांसारिक बन्धनबाट मुक्त गर्न सक्दैनन्।

यदि हामी यो मान्न थाल्यौं भने ईश्वर सर्वत्र व्यापक हुनुहुन्छ तब पाप गर्नलाई कुनै स्थान पाइने छैन।

ईश्वरको सर्व व्यापकताको अनुभव भएपछि पाप गर्नका निमित्त न कुनै स्थान पाइने छ न कुनै समय।

हिरण्यकशिपुको संहार चाहिँ भयो तर नृसिंह स्वामीको क्रोध अझसम्म कायमै थियो। उहाँको क्रोधित स्वरूप देखेर तीनै लोक भयभीत भए। कसैलाई पनि उहाँ समीप जानलाई साहस भएन। ब्रह्माजीले पनि उहाँलाई शान्त हुनलाई प्रार्थना गर्नुभयो। केही लागेन।

आखिर ब्रह्माजीले लक्ष्मीजीलाई भन्नुभयो—माताजी, तपाईं उहाँलाई शान्त गरिदिनुहोस्। देवहरूले पनि उहाँसँग प्रार्थना गर्नुभयो।

लक्ष्मीजीले सोच्नुभयो—उहाँ मेरो स्वामी हुनु भएकाले म उहाँछेउ जान्छु। अनि शान्त भइ हाल्नु होला नि ! मनमा यस्तो अभिमान लिएर उनी उहाँका समीप गइन्। तर भगवान् नम्र व्यक्तिको कुरा मात्र सुन्नुहुने हुनाले अभिमानीको सुन्नु भएन। आज उहाँले पनि लक्ष्मीजीलाई चिन्न नामंजूर गरिदिनुभयो।

अब ब्रह्माले प्रह्लादलाई भन्नुभयो—बाबु, तिम्रा बाबुसँग उहाँ रिसाउनुभएको छ, त्यसकारण तिमी स्वयं उहाँलाई मनाऊ। प्रभु आज तिम्रै निमित्त मात्र प्रकट हुनुभएको छ। यदि तिमी उहाँका समीप गयौ भने उहाँ शान्त हुनुहुने छ।

प्रह्लादले प्रभुका समीप गएर साष्टाङ्ग प्रणाम गरे। उनलाई देखेर प्रभुका हृदयमा आनन्दको सागर उर्लिएर आयो। प्रह्लादलाई काखमा बसाएर वात्सल्यभावले उनको शरीर चाट्न थाल्नुभयो।

प्रह्लाद जस्तै भगवान्को काखमा जो बस्दछ त्यसको कालले पनि केही बिगार्न सक्दैन।

परमात्मालाई प्रसन्न गर्नका निमित्त शुद्ध प्रेम चाहिन्छ। ज्ञान आदिको महत्ता कमै छ। शब्दज्ञानको आवश्यकता छैन। अनेक पटक शब्दज्ञान प्रभुभजनमा बाधक हुन्छ।

अरूहरूको क्षति छोप्नका निमित्त ज्ञानी बनाइन्छ, क्षति खुला गरेर राख्न होइन। प्रेमभक्तिका विना ज्ञान निरर्थक छ।

हिरण्यकशिपुका निमित्त भगवान् भयङ्कर र क्रूर हुनुहुन्छ, तर प्रह्लादजस्ताका निमित्त उहाँ कमलका समान कमलो हुनुहुन्छ।

विष्णु सहस्त्रनाममा पनि भगवान्लाई भयरूप र भयकारकका साथसाथै भयनाशी पनि भनिएको छ।

भगवान् दुष्टहरूका निमित्त भयरूप र भयकारक हुनुहुन्छ तर भक्तहरूका निमित्त उहाँ भयको हरण गर्नेवाला हुनुहुन्छ।

नृसिंह स्वामीले प्रह्लादलाई भन्नुभो—तिम्रो पिताले तिमीलाई धेरै दुःख दिए। मलाई प्रकट हुनको निमित्त जो अबेर भयो त्यसका निमित्त क्षमा माग्दछु।

प्रह्लादको भक्तिको दिव्यता हेर जो आज भगवान् स्वयं उनीसँग क्षमा-याचना गरिरहनु भएको छ।

जस्ता किसिमबाट गाईले आफ्नो बाछालाई चाट्छिन सोही किसिमबाट नृसिंह स्वामीले प्रह्लादलाई चाट्न थाल्नु भयो र विस्तारै उहाँको क्रोध शान्त हुन थाल्यो।

प्रह्लाद सत्त्वगुण हो। हिरण्यकशिपु तमोगुण हो। सत्त्वगुण र तमोगुणको युद्ध हो यो। यसमा भगवान् प्रह्लादको सत्त्वगुणको पक्ष लिनुहुन्छ। शुद्ध सत्त्वगुणको अगाड़ि तमोगुणको नाश अवश्यै हुन्छ।

प्रह्लादजीको वचनको सार्थकताका लागि र आफ्ना सबै व्यापकताका सिद्धिका हेतु नृसिंह स्वामी खम्बाभित्र प्रकट हुनुभएको थियो।

सबै जान्दछन् ईश्वर सर्वव्यापक हुनुहुन्छ, तर यस कुराको अनुभव बहुतै कम व्यक्तिहरूलाई मात्र हुन्छ। यदि ईश्वरको सर्वव्यापकताको अनुभव सबैले गरे भने तब घर स्वतः बैकुण्ठ बन्दछ। घरमा कुनै झगड़ा पनि नहुने र त्यस घरबाट पापको नाउँ स्वतः मेटिने थियो।

सर्वव्यापकको अर्थ हो, सबैमा बसेका, सबैमा अटाएका। यस्तै प्रकारले ईश्वर पनि जगत्का सबै स्थूल-सूक्ष्म पदार्थहरूमा बसेका हुनुहुन्छ। दूधमा नौनी देखिँदैन र पनि त्यसको अणु परमाणुमा त्यो रहेको छ। उनको अभाव कहीं पनि छैन। ईश्वर अणुभन्दा पनि अणु र महान्‌भन्दा महान् हुनुहुन्छ। उहाँको कतै पनि अभाव छैन, त्यसकारण उहाँ सर्वव्यापी हुनुहुन्छ।

जसले ईश्वरलाई सर्वत्र भएको सम्झन्छ, त्यसको जीवनमा दिव्यता पनि आउँछ। सबैमा ईश्वरलाई नियालेर हेर। पहिलो मातृदेव होऊ, त्यसपछि पितृदेव होऊ र अन्त्यमा परस्पर देव होऊ। ईश्वरको पारस्परिक दर्शन गर। मानिसले एक-अर्कालाई भेट्दा राम-राम भन्छन्। यसको अर्थ यो हो ममा र तिमीमा राम हुनुहुन्छ।

प्रत्येक जड़-चेतन पदार्थमा ईश्वरको दर्शन पायौ भने पाप तिम्रो नजीक देखा पर्न सक्दैन। विवाह गरेर आएपछि बुहारीको पूजा लक्ष्मीभावले गरिन्छ, वर नारायण र वधू लक्ष्मी। यदि मानिसले यो सोचोस् हाम्रा घरमा लक्ष्मीनारायण आउनुभएको छ भने घर स्वतः बैकुण्ठ हुने हो।

सबैमा ईश्वरको अनुभव गर्नाले लाभै लाभ छ। यस्तो अनुभव गर्नाले मन विचार-वासनाबाट रहित हुन्छ।

ईश्वर यस्तो वस्तु होइन जो एउटै स्थानमा रहन सकोस्। उहाँ सर्वव्यापी र सर्वत्र हुनुहुन्छ।

ईश्वरको सर्वव्यापकतालाई केवल जान्नाले मात्र विशेष लाभ हुँदैन। त्यसको अनुभव पनि गर्नुपर्छ र त्यसलाई व्यवहारमा ल्याउनुपर्छ।

भगवान्‌लाई केवल चन्दन, फूल आदि अर्पण गर्नु मात्र भक्ति होइन। सबैमा भगवद्भाव राख्नु साँचो भक्ति हो। कुनै मूर्तिमा जो भगवान् तिमीलाई देखिनुहुन्छ उहाँ सर्वत्र व्याप्त हुनुहुन्छ। ईश्वरको सर्वव्यापकताको अनुभव जो गर्दछ या गर्न सक्दछ उसैको जीवन धन्य हो, यस्तो अनुभव गर्नेले कहिल्यै पाप गर्न सक्दैन। तिमी यो निश्चय गर म प्रत्येक व्यवहाहरलाई भक्तिमय बनाउने छु।

शुद्ध व्यवहार मात्र भक्ति हो। जसको व्यवहारमा दम्भ छ, अभिमान छ, त्यसको व्यवहार अशुद्ध हुन्छ। जसको व्यवहार शुद्ध हुँदैन, त्यसले भक्तिको आनन्द पाउनै सक्दैन। ईश्वरको सर्वव्यापकताको अनुभव विना व्यवहार शुद्धि हुन सक्दैन।

सदा यस्तो सोच हाम्रो प्रत्येक व्यवहार र प्रवृत्तिलाई भगवान्‌ले हेरिरहनुभएको छ। कोही पनि यस्तो व्यवहार हुनु हुँदैन जसमा कुनै उपदेश नहोस्।

व्यवसाय कारोबार कुनै अपराध होइन। सेना भगत नाइको काम गर्थे। एक दिन उनले सोचे म मानिसहरूको टाउकोबाट मैलाको बोझ उतार्दछु तर आफ्नो बुद्धिको मलिनता मैले अहिलेसम्म हटाउन सकेको छैन।

केही महापुरुषहरूले आफ्नो व्यवसायबाट ज्ञान पाएका छन्। महाभारतमा यस्ता कति दृष्टान्त छन् जुनमा उल्लेख भएको छ महाज्ञानी ब्राह्मण पनि वैश्यादिको घरमा सतसङ्गका निमित्त जान्थे।

जब महाज्ञानी जालजीलाई आफ्नो ज्ञानमा अभिमान भयो तब उनले आकाशवाणी सुने 'तिमी तुलाधर वैश्यसँग भेट गर।' ऋषि उहाँ गए। कुरै कुरामा थाहा भयो उनी पनि ज्ञानी रहेछन्। तब उनले तुलाधरलाई सोधे उनले यस्तो ज्ञान कहाँबाट पाएको हो। तुलाधरले भने—'त्यसो तर मेरा माता-पिता ब्राह्मण हुनुहुन्छ, तर धेरैजसो ज्ञान मैले आफ्नो व्यवसायद्वारा पाएको हुँ। मेरो व्यवसाय मेरो गुरु हो। श्रमको अनुपातबाटै लाभ लिने गर्दछु। तराजुको डण्डीको समान मैले मनबुद्धिलाई सरल र समान बनाएको छु।' वैश्यले फायदा गरेन भने आफ्नो कुटुम्बको परिपालन कसरी गर्ला ? नाफा कमाउनु अपराध होइन तर अयोग्य नाफा लिनु पाप हो।

वाणिज्य व्यापार पनि भक्ति हो। यस्तो विचार नगर भक्ति केवल मन्दिरमा मात्र गर्न सकिन्छ। भक्ति प्रत्येक स्थानमा गर्न सकिन्छ। ईश्वरसँग अविभक्त भएर गरेको व्यवहार भक्ति हो। ईश्वरसँग कहिले पनि नछुट्टिनु।

शुकदेवजी सावधान गराउनुहुन्छ—

'यदि मनुष्यले ग्राहकमा ईश्वरको दर्शन गरेर व्यापार गर्छ भने उसको त्यो व्यापार पनि भक्ति हो। योग्य लाभ लिनु वैश्यको धर्म हो, तर जहिले पनि ग्राहकका साथ व्यापारी कुरा गर्न थाल्छ तब ऊ यो बिर्सिहाल्छ जबकि यस ग्राहकमा पनि भगवान् हुनुहुन्छ र यस किसिमबाट गरेको त्यो अयोग्य व्यापार पापमय हुन्छ। पसलमा स्थापित प्रभुको उपस्थितिमा धेरै जसो व्यापारी पाप गर्दछन्। पाँचको माल पच्चीसमा दिँदाखेरि भन्छन् म यो माल मूल मोलमा बेचिरहेछु। यस्तो कहिल्यै नगर्नु।'

भागवत-कथा मनलाई सावधान गर्नका निमित्त हो।

अनुभव गर प्रभु सर्वव्यापी हुनुहुन्छ, सर्वत्र हुनुहुन्छ। म जे बोल्दछु, त्यसलाई भगवान्ले सुन्नुहुन्छ र म जो देख्छु त्यसलाई भगवान्ले पनि देख्नुहुन्छ।

मनुष्यको शारीरिक पाप चाहिँ समाजले पनि देख्न सक्दछ तर उसको मानसिक पाप केवल परमात्माले मात्र देख्न सक्नुहुन्छ। मानसिक पाप सबैभन्दा खराब हो। बिलकुलै पाप नगर्नु ठूलो पुण्य हो।

नृसिंह भगवान् आकाशबाट होइन स्तम्भभित्रबाट प्रकट हुनुभएको थियो। चेतनमा मात्र होइन तर जड़मा पनि ईश्वरको दर्शन गर। ईश्वर जड़ र चेतन दुवैमा हुनुहुन्छ। लौकिक दृष्टिबाट पृथ्वी जड़ हो तर यसमा पनि ईश्वरको भावना गर्नुपर्छ।

एक महात्माका दुइ शिष्य थिए। ती दुवै पढ़े-लेखेका थिए र कथाकार पनि थिए। जब महात्माको मृत्यु नजिक आयो तब उनको गद्दीका निमित्त ती दुवै शिष्यहरूबीच झगड़ा शुरू

भयो। महात्मा पनि सोच्न थाले 'उत्तराधिकारी कुनलाई बनाउने?' आखिर उनले दुइ फल झिकाएर दुवैलाई एक-एक फल दिँदै भने 'यस फललाई कुनै यस्तो ठाउँमा लगेर खानू जहाँ तिमीलाई देख्ने कोही नहोस्।'

ती दुवै फल लिएर हिँड़े। एउटा शिष्यले सोच्यो—'म ढोका बन्द गरेर कोठामा खान्छु, किनभने त्यहाँ मलाई कस्ले देख्ने।' उसले कोठा बन्द गरेर खायो।

दोस्रो शिष्य सारा दिन फल लिएर यता-उता घुम्दै रह्यो तर उसलाई एउटा पनि त्यस्तो ठाउँ फेला परेन जहाँ कोई नहोस्। ऊ जहाँ पनि गयो त्यहीं परमात्माको उपस्थितिको अनुभव भयो। वेदहरूमा पनि भनेको छ प्रभु सर्वत्र हुनुहुन्छ र विश्वतोमुखी हुन्। यसप्रकार दोस्रो शिष्यले ज्ञान पाएको थिएन। तर उसले त्यो ज्ञान आत्मसात् गरेर पाएको थियो।

पहिलो शिष्य कथामात्र गर्थ्यो। उसले ईश्वरको व्यापक स्वरूपलाई बुझ्न सकेको थिएन। गुरुजीले त्यो दोस्रो शिष्यलाई आफ्नो उत्तराधिकारी बनाए।

कथा भन्न सजिलो छ, तर ईश्वर सर्वत्र हुनुहुन्छ भन्ठानेर व्यवहार गर्नु कठिन छ।

प्रह्लाद यस्ता निष्ठावान् थिए जो उनी सबैमा ईश्वरलाई मात्र देख्थे।

अनेकमा एक ( प्रभु )-को दर्शन गर्नु भक्ति हो। जसले सबैमा उही तत्त्वलाई देख्दछ, त्यही ज्ञानी हो। ज्ञानी एकमा अनेकलाई लय गरिदिन्छ। तिमीले पनि त्यस्तै किसिमबाट एकमा अनेकलाई लय गर। यो वेदान्तको प्रक्रिया हो। अनेकमा एकलाई देख।

वैष्णव अनेकमा एकलाई देख्छन्। शाब्दिक भिन्नता हुन सक्छ तर ज्ञानमार्ग र भक्तिमार्गमा त्यस्तो कुनै भिन्नता छैन।

हनुमानजीले सीतालाई रामको औंठी दिए तर उनले त्यसमा पनि रामको दर्शन गरे।

परमात्मा मात्र सत्य हुनुहुन्छ जो अनेकमा बस्नुभएको छ।

अनेकमा एक देख्नु भक्ति हो, एकमा अनेकलाई देख्नु ज्ञान हो।

शरीर भएर पनि यदि त्यसमा प्राण-आत्माको अभाव भयो भने त्यस शरीरको मूल्यै के? ज्ञानी बाह्य रूपरङ्ग हेर्दैनन्, बाह्य रूपरङ्गको सुन्दरताको कारणभूत ईश्वरकै चिन्तन गर्छन्।

भगवान् शङ्कराचार्यले दुःखका साथ भन्नुभएको छ—'मानिस मासुको ( देहको ) मीमांसा गर्छन् तर आत्माको मीमांसा कसैले पनि गर्दैन।'

एउटा गृहस्थको स्वभाव यस्तो थियो ऊ साधु-सन्तलाई भोजन नगराइकन खाँदैनथ्यो। एक पटक कोही महात्मा घुम्दै-फिर्दै त्यहाँ आइपुगे। त्यस गृहस्थले उनलाई पूजा गरेर भोजन गराउन बसाल्यो। घरमा दूध थिएन, उसले नोकरलाई भन्यो—'चाँड़ै गएर दूध ल्या। नोकर गयो तर तुरुन्तै फर्केर आई सेठलाई सोध्यो—'काली गाईको ल्याऊँ वा सेती गाईको?' सेठले भन्यो—

'आवश्यकता दूधको छ कालीको होस् वा सेतीको। तर महात्माले भोजन गर्नुभन्दा अघिबाटै ल्याइपुऱ्याउनु।' नोकर दगुरेर गयो। फेरि फर्केर आयो सोध्दछ—'बूढी गाईको ल्याऊँ कि तन्नेरी गाईको।' सेठ रिसाएर पिट्न दगुऱ्यो। महात्माले सेठलाई रिसाउनुको कारण सोधे। सेठले भन्यो—'कति मूर्ख छ यो नोकर, कति पटक दूध लिन पठाएँ तैपनि त्यसले ल्याउन सकेन।'

महात्माले भने—'जो परमात्मा यस सेवकमा छ त्यही तिम्रो शरीरमा पनि छ। हामीलाई शरीरको होइन शरीरमा बसिरहेका परमात्माको आवश्यकता छ। तिमी दुवैमा एकै प्रभुको बास छ। त्यसलाई नपिट।'

सबैमा एकै ईश्वरको वास छ। प्रत्येक स्त्री-पुरुषमा, प्रत्येक जड़-चेतन, स्थावर-जङ्गम वस्तुमा ऊनै प्रभुको दर्शन गर।

जगत्मा मूर्ख कोही छैन। सबै ईश्वरका अंश हुन्। जो अरूलाई मूर्ख मान्दछ त्यो स्वयं मूर्ख हो।

हाम्रा मुलुकमा पशुको पनि पूजा गरिन्छ। भैरवनाथको वाहन कुकुर हो र शीतलामाताको वाहन गधा हो। त्यसकारण कुकुर र गधा पनि तिरस्कार गरिने होइनन्। ईश्वर चैतन्यरूपबाट सबैमा हुनुहुन्छ, त्यसकारण तिमीले यस्तो अनुभव गर यस्तो स्वभाववाला प्रत्येक क्रिया भक्ति र ज्ञानमय हुन्।

नृसिंह भगवान्ले प्रकट हुँदा 'गुरु' शब्दको उच्चारण गरेको थियो। यो सत्य हो ईश्वर सर्वत्र हुनुहुन्छ, तर जबसम्म सद्गुरुका तर्फबाट दिव्यदृष्टि पाईदैन तबसम्म ईश्वरको दर्शन गर्न सकिँदैन। जो जितेन्द्रिय छ, त्यही स्वतन्त्र छ। स्वातन्त्र्यले मानिसलाई स्वेच्छाचारी बनाइदिन्छ। अतः स्वतन्त्र र स्वच्छन्दी नबन।

बुद्धिको कहिल्यै विश्वास नगर। कुनै सन्तलाई गुरु बनाएर उनको अधीनमा बस। जसले तिमीलाई पापबाट रोक्छ त्यस्तो कुनै सन्तको अधीनमा रहू। गुरु बनाउनु चाहिँ पर्छ।

तर गुरु बनाउनुभन्दा अघि राम्ररी यो सोच्नु र जाँच्नुपर्छ जुन व्यक्तिलाई गुरु बनाउन आँटेका छौ, त्यो योग्य र सुपात्र पनि छ या छैन। कसै-कसैले भनेका छन्—

पानी पिना छानके, गुरु करना जानके।

वर्तमान जगत्का कुनै महापुरुषमा यदि तिमीलाई श्रद्धा छैन भने प्राचीन महात्माहरूलाई गुरु मानेर उनको अधीनमा बस। महापुरुष अमर हुन्छन्। शङ्कराचार्य र बल्लभाचार्य जस्ता सन्त अमर छन्। उनलाई गुरु मानेर उनको सेवा गर र उनको आश्रय पनि लेऊ। गुरुका विना कल्याण हुँदैन। कुनै सन्तको चरणको आश्रय लिएपछि सद्गुरुले कृपा गर्नुहुनेछ। यदि उहाँ सन्तले कृपा गर्नुभयो भने तिम्रो मानसिक वासना र विकारहरूको नाश हुनेछ। मन-बुद्धिको वासना सन्त-सेवाविना हट्न सक्दैन। जबसम्म बुद्धिको विवाह परमात्मासँग हुँदैन, तबसम्म त्यसलाई सन्तको अधीनमै राख। सद्गुरुको कृपाविना कहिल्यै कुनै वस्तुमा पनि ईश्वरको दर्शन हुन सक्दैन।

जगत्मा कति सन्तहरू छन् तर ती सबैमा हाम्रो कल्याणको उत्तरदायित्व हुँदैन। हामी जसलाई गुरु बनाऊँछौं तिनै सन्त हाम्रो कल्याणार्थ उत्तरदायी छन्।

हतपताएर विना सोची-संझी कसैको गुरु बन्नु पनि ठीक होइन। गुरु बन्दाखेरि शिष्यका पापहरूको उत्तरदायित्व गुरुको नाउँमा आउँछ। शिष्यका पापहरूको न्याय गर्दा गुरुलाई पनि त्यहाँ बोलाइन्छ र उनलाई सोधिन्छ शिष्यले पाप गर्दाखेरि किन नरोकेको, उसलाई सन्मार्गमा किन नलगेको ? यस किसिमबाट शिष्यका साथ-साथै गुरुलाई पनि दण्डित हुनुपर्ने भो।

मन्त्र, माला र मूर्ति तथा गुरु बारम्बार फेर्ने काम ठीक होइन। आफ्नो माला अरू कसैलाई नदिनु।

नृसिंह स्वामीको प्राकट्य स्तम्भभित्रबाट भएको थियो। तिमी स्वयं विचार गर उहाँ स्तम्भभित्र कसरी रहनुभयो होला। स्तम्भ खँदिलो थियो, खोक्रो थिएन। भगवान् भित्र कसरी पस्नुभयो होला ? भगवान् त्यस स्तम्भमा सूक्ष्मरूपले बस्नुभएको थियो, तर प्रह्लादजीको भक्तिबाट आकर्षित भएर उहाँले स्थूल रूप धारण गर्नुभयो। प्रह्लादको प्रेम यति शक्तिशाली थियो जो प्रभुलाई सूक्ष्मरूप छोड़ेर स्थूलरूप धारण गर्नुपऱ्यो।

शिवजी उमालाई भन्नुहुन्छ—

अगुन अरूप अलख अज जोई।
भगत प्रेम बस सगुन सो होई॥

जब सबै देव सोचिरहेका थिए 'प्रभु कहाँ भेटिनुहुन्छ ?' तब शङ्कर भगवान्ले भन्नुभएको थियो—

हरि व्यापक सर्वत्र समाना।
प्रेम ते प्रकट होहि मैं जाना॥

अतिशय प्रेमविना प्रभु आफ्नो स्वरूपको दर्शन दिनुहुन्न। प्रभुका साथमा प्रेम गर्नुपर्ने छ।

सगुनहि अगुनहि नहिं कछु भेदा।

प्रह्लादजीको प्रेम-भक्तिबाट आकृष्ट भएर भगवान् निराकारबाट साकार बने।

बुद्धि जबसम्म सूक्ष्म हुँदैन, उसबाट ईश्वरको चिन्तन हुन सक्तैन। परमात्मा प्रेमकै कारणले साकार रूप धारण गर्नुहुन्छ। परमात्मा निर्गुण पनि हुनुहुन्छ सगुण पनि। निर्गुण र सगुण तत्त्वतः एउटै हो। निर्गुण स्वतः सगुण बन्दछ। प्रभु स्थूल पनि हुनुहुन्छ र सूक्ष्म पनि। उहाँ कमलो पनि हुनुहुन्छ र कठोर पनि।

वेदान्ती मान्दछन् यी सब धर्म मायाका कारण आभासित हुन्छन्। वैष्णवाचार्य मान्दछन् विरुद्धधर्माश्रयी परमात्मा हुन्। जो नृसिंह स्वामी हिरण्यकशिपुका प्रति कठोर भएका थिए र उनै प्रह्लादका निमित्त कोमल भए।

ज्ञानी पुरुष सबैमा भगवद्दृष्टि राख्दछन्। दृश्य पदार्थबाट दृष्टिलाई हटाएर द्रष्टामा स्थिर गर। दृश्यबाट दृष्टिलाई हटाऊ र सर्वद्रष्टा, सबैको साक्षी परमात्माको स्वरूपमा दृष्टि स्थिर गर।

एकजना महात्मा थिए। उनले जति देख्थे, ईश्वरमय देखिन्थ्यो। उनको नजीक आएर एकजना गृहस्थले सोधे—'म ईश्वरको दर्शन गर्न चाहन्छु।'

महात्मा—'संझ तिमी पनि ईश्वरै हौ।'

गृहस्थ—'म विश्वासपूर्वक भन्दछु म ईश्वर होइन।'

महात्मा—'तिमीलाई दर्शन गर्नुपर्ने होइन ? त्यसकारण तिमी यदि ईश्वर होइनौ भने तिम्रा-सिवाय जे-जति देख्छौ, त्यसैलाई ईश्वर मानिलेऊ। जगत्मा जे चीज पनि दृष्टिगोचर हुन्छ त्यसमा ईश्वरको दर्शन गर र यस्तै मानेर सारा व्यवहार पनि चलाऊ।'

गृहस्थले त्यस्तै गरे तब उनको पापकार्य स्वयं रोकिन गयो। उनको व्यवहार शुद्ध भयो।

एक पटक फेरि तिनै गृहस्थले महात्मालाई सोधे—'सबैमा ईश्वर छ, यस्तो अनुभव गर्नाले शान्ति पाइन्छ, तर कहिलेकाहीं यस्तो शङ्का पनि हुन्छ यो सबै जो देखिइरहेको छ उसमा ईश्वर नभएका खण्डमा म के गरूँ ?'

महात्मा संझाउन थाल्नुभयो—'यदि तिमीले जो देख्छौ र त्यसमा ईश्वर छैन भन्ने ठान्छौ भने र तिमीलाई ईश्वरको दर्शन पनि गर्नुछ भने अब यसो गर जे-जति दृश्यमान छन्, तिनमा ईश्वर छैनन् भन्ठानेर सबै कुराको मोह छोड़िदेऊ र दृश्यमानका साथ प्रेम नगर। दृश्यवस्तु ईश्वर होइनन्। तिमीले द्रष्टाका साथ प्रेम गर। संसारका दृश्यमान पदार्थहरूका बदलामा दृश्यको द्रष्टाका साथ प्रेम गर। संसारका दृश्यमान पदार्थहरूका बदलामा दृश्यको द्रष्टाका साथ प्रेम गर। अब जो अदृश्यमान छ, त्यो ईश्वर हो र ईश्वर द्रष्टा हो, यस्तो मान। ईश्वर दृश्य होइन द्रष्टा हो।'

वेदान्त भन्दछ ईश्वर दृश्य होइन, बरु सबैको द्रष्टा हो। ईश्वरमा दृष्यत्वको आरोप मायाको कारणले हुन्छ। जुन व्यक्तिले सर्वद्रष्टामा दृष्टि स्थिर गर्छ त्यसलाई प्रभु भेटिनुहुन्छ।

महात्माले दुइटा बाटो बताए। (१) जो दृश्यमान छ, त्यो ईश्वर हो। (२) जो अदृश्य छ, त्यो ईश्वर हो। जो सबैको द्रष्टा र सबैको साक्षी छ, त्यसलाई सजिलैसँग कसले चिन्न सक्छ ? पूर्ण वैराग्य विना ज्ञानानुभव हुन पाउँदैन। त्यसकारण हामी साधारण मनुष्यहरूका निमित्त चाहिँ भक्तिमार्ग राम्रो छ। यी जे-जति दृश्यमान छन् सबै ईश्वरमय हुन्।

वैष्णवहरू मान्दछन् सबै पदार्थहरूमा ईश्वर छन्। यस्तो मानेर व्यवहार गर्नाले भक्तिमार्गमा सफलता पाइएला। ईश्वरको कुनै पनि स्वरूपका प्रति आसक्ति नराखे भक्ति पाइने होइन।

शङ्कर भगवान समाधिमा बस्दथे। समाधिमा के छ ? आफ्नो स्वरूपलाई आफैंले हेर्नु भनेकै समाधि हो।

कुनै एउटा बाटो निश्चित गरिहाल। प्रत्येक दृश्य वस्तु विनाशी छ, यस्तो मानेर मोहलाई त्यागेर द्रष्टाका साथ प्रेम गऱ्यौ भने वेदान्तानुसार आत्मसाक्षात्कार हुनेछ। द्रष्टामा दृष्टि स्थिर गर अथवा प्रत्येक पदार्थमा ईश्वरको अनुभव गर।

प्रह्लाद स्तुति गर्नुहुन्छ—हे प्रभु ! बड़ा-बड़ा सिद्ध महात्मा कैयन् वर्ष तपश्चर्या गरेर पनि तपाईंको साक्षात्कार पाउँदैनन् भने राक्षसकुलमा जन्म पाएर पनि आज तपाईंले दर्शन दिएर मलाई ठूलो कृपा गर्नु भयो।

भगवान्लाई प्रसन्न गर्नका निमित्त न धेरै शिक्षाको आवश्यकता पर्छ न धेरै अर्थोपार्जनको। यदि धनको सहाराले परमात्मा मिल्ने भए यी धनी मानिसले लाख दुइ लाखमा प्रभुलाई किन्ने थिए। ज्यादा शिक्षा र ज्ञानबाट पनि भगवान् पाइनुहुन्न। जो ज्यादा ज्ञानी छ, ऊ कति पटक अरूसँग छलकपट गर्न पनि पछि हट्दैन।

परमात्मालाई प्रसन्न गर्नका निमित्त सम्पत्ति, शिक्षा या उच्चकुलमा जन्म हुनु आवश्यक छैन—ब्राह्मणमात्रैले ईश्वर पाउने भन्ने पनि होइन। परमात्मालाई प्रसन्न गर्नका निमित्त आवश्यक छ हृदयको शुद्ध प्रेम।

धेरै कमाउनु र त्यसलाई प्रभुसेवामा लगाउनु ठीक हो तर एक आसनमा बसेर परमात्माको ध्यान गर्नु त्यो भन्दा पनि बढ़ता असल हो।

सम्पत्तिले परमात्मा पाइने कुरा होइन। यसका विपरीत कति पटक धन भगवत् सेवामा, प्रभु-भजनमा बाधारूप पनि बन्छ।

ज्ञानको आधिक्यता तर्क-वितर्कको जन्मदाता हो। त्यसकारण ज्ञानीले भगवानको स्मरण-सेवा ठीकसङ्ग गर्न पाउँदैन। बहुज्ञानी आरम्भमा कुतर्क गर्छ, जबकि आरम्भमा श्रद्धा आवश्यक छ।

पढ़े-लेखेका मानिसहरू धेरै कुतर्क गर्छन्। उनीहरू भन्छन् 'पहिले चमत्कार देखाऊ अनि हामी भगवान्लाई नमस्कार गर्नेछौं। अर्कालाई खुशी तुल्याउनका निमित्त चमत्कारबाट प्रारम्भ गर्ने काम वेश्याको हो किनभने उसलाई अरूको आवश्यकता छ, ईश्वरलाई कसैको पनि आवश्यकता छैन यदि तिमीलाई ईश्वरको आवश्यकता छ भने श्रद्धापूर्वक सेवा-स्मरण गर र पछिबाट चमत्कार हेर। जादूगर पनि चमत्कार देखाउँछ, किनभने उसलाई धनको आवश्यकता छ। पहिले चमत्कार अनि पछि नमस्कार यो नियम यस जगत्को व्यवहारको हुन सक्छ तर भगवान्का व्यवहारको हुन्न।'

परमेश्वरको व्यवहार हो पहिले नमस्कार अनि पछि चमत्कार। विना चमत्कारको नमस्कार मानवता हो। चमत्कार पछिको नमस्कार अभिमान हो। अलिकति विचार गर। यो जगत् पनि एक चमत्कार मात्रै हो। पुष्पमा सुगन्ध छ तर बीउमा वटवृक्ष। आमाको स्तनमा दूध कसले बनाउँछ होला ? सारा जगत् ईश्वरकै चमत्कारै मात्रै हो।

श्रद्धा र अन्धश्रद्धा हाम्रा व्यावहारिक जीवनमा पनि कहाँ छैन ? कति पटक डाक्टरबाट काम बिग्रिन्छ र पनि हामी उसको कुरामा श्रद्धा राख्दछौं। ऊसङ्ग हामी भन्न सक्दैनौं पहिले चमत्कार गरेर देखाऊ। डाक्टरका प्रति श्रद्धा भएन भने ऊ औषधि दिँदैन, औषधि नभईकन रोग कसरी हट्ला ?

यस्तै किसिमले सेवा-मार्गमा पनि प्रथम आवश्यकता श्रद्धा छ। परमार्थमा श्रद्धा आवश्यक छ।

आजका शिक्षित मानिस यो पनि कुतर्क गर्छन् भगवान् आहार गर्नुहुन्न तर उहाँलाई भोग किन लगाइन्छ ? थालमा तर केही कम भएको हुँदैन ठीक हो, तर भगवान् भोजन गर्नुहुन्न भन्ने कुरा हामीलाई थाहा छ। उहाँ सारतत्त्वको आहार गर्नुहुन्छ। उहाँ रसभोक्ता हुनुहुन्छ। यदि उहाँले साँच्चै भोजन गर्न थाल्नुभयो भने तब यस कलियुगमा कसैले भोग लगाउने हुन् वा होइनन् यसमा सन्देह छ।

ईश्वरलई प्राप्त गर्नका निमित्त अतिज्ञानको आवश्यकता छैन। अन्त्यकालमा ज्ञानले कतिपटक विश्वासघात गरेको छ। ज्ञानलाई यदि भक्तिको साथ छ भने तब कुरा ठीक हो।

बिरामी त शरीर हुन्छ आत्मा होइन, यस्ता कुराहरू वेदान्ती पनि गर्न सक्दैन, किनभने यदि वेदान्ती बिरामी भयो भने तब उसलाई पनि औषधि र फलादिको आवश्यकताले सताउँछ।

वेदान्तको सिद्धान्त निरर्थक होइन, तर उसको अनुभव भक्ति र प्रेमको अभावमा हुन सक्दैन। प्रेमको, भक्तिको आवश्यकता ज्ञानीलाई पनि पर्दछ।

ज्ञानको उपयोग ईश्वरको व्यापकताको अनुभव गर्नका निमित्त हो।

ईश्वर सर्वत्र हुनुहुन्छ, यस्तो मानेर गरेको व्यवहार भक्ति बन्दछ।

स्वामी रामदासले 'दासबोध' मा भन्नुभएको छ 'जो व्यवहारकुशल छैन, त्यसले परमार्थ कसरी प्राप्त गर्न सक्ला ?' तर जसको व्यवहार अतिशय शुद्ध छ, त्यसले परमार्थ ठीकसँग गर्न सक्दछ। जसको व्यवहार शुद्ध छैन, त्यसले भक्ति कसरी गर्न सक्ला ?

व्यवसाय या धन्धा गर्नु कुनै पाप होइन, तर व्यवसायमा वा धन्धामा ईश्वरलाई बिर्सिदिनु पाप हो।

साधन-भक्तिमा सबै सन्त पनि आफ्ना-आफ्ना काम-काज गर्थे। सेना नाई कपाल खौरने काम गर्थ्यो तर गोरा कुम्हाले माटाका भाँड़ा बनाउँथ्यो।

गजेन्द्र अनपढ़ पशुसरह थियो। त्यसले न तपश्चर्या गरेको थियो न अष्टाङ्गयोगको साधना। तर त्यसको पनि प्रेम-पुकार सुनेर, उसको भक्तिका कारण भगवान् उसमाथि प्रसन्न हुनुभएको थियो।

भक्तिद्वारा परमात्मा भेटिनुहुन्छ। ईश्वरसँग प्रेम-भाव राखेर सेवा-स्मरण गर्दै रहु। यदि भक्ति भएन भने ज्ञानीको ज्ञान र तपश्चर्याको कुनै सार्थकता छैन। ज्ञान जतिसुकै होस् तर प्रभु प्रेम भएन भने त्यस ज्ञान र तपश्चर्याको कुनै मूल्य छैन।

सबै साधन र साधनाको फल हो श्रीकृष्ण-प्रेम। जुन साधनाले प्रभुप्रेम जगाउन सक्दैन, त्यस साधनाको कुनै मूल्य छैन।

प्रभुमिलनलाई जो आतुर छैन यस्ता ब्राह्मणको अपेक्षा प्रभुमिलनका निमित्त आतुर क्षुद्र व्यक्ति पनि श्रेष्ठ छ।

प्रभुलाई प्रसन्न गर्ने दुइ साधन छन्—सेवा र स्मरण। प्रतिदिन तीन घण्टा प्रभुको सेवा र स्मरण गर। यी दुइ साधनद्वारा भगवान् अवश्य मिल्नु हुनेछ। अरू कुनै वस्तुको आवश्यकता छैन। दक्षिणा दिनाले पुण्य पाइने होइन, यसो गर्नु धनको सदुपयोग हो तर स्वयंले पनि सेवा-स्मरण गर्नु आवश्यक छ। परमात्मालाई प्रसन्न गर्ने साधन हो प्रेम। सेवा र पूजामा धन होइन मन प्रधान हो। स्नेह मात्र मुख्य वस्तु हो।

श्री गोसाईंजी महाराजको ''दो सौ बावन वैष्णवनकी वार्ता'' भन्ने पुस्तकमा पद्मनाभदासको कथा छ। उनी गरीब थिए, त्यसकारण भगवान्‌लाई चनाको बोक्रा भोगमा दिने गर्थे। भगवान्‌ले त्यसलाई पनि मिष्ठान्नको अनुभव गर्नुहुन्थ्यो।

भगवान् यो हेर्नुहुन्न कसले के दिन्छ ? उहाँ केवल यही हेर्नुहुन्छ कस्तो भावले दिइएको छ।

सेवा, स्मरणद्वारा भगवान् सेवाका अधीन बन्नुहुन्छ।

एकनाथ महाराज सारा दिन लगातार प्रभु-सेवा र भजन गरिरहन्थे र थाकी पनि हाल्थे। उनको यस्तो अविराम सेवाबाट प्रभु दयार्द्र हुनु भयो। उहाँ सोच्न थाल्नुभयो मेरो भक्त मेरा निमित्त कति परिश्रम गर्दछ। विचरा थाकेर चूर हुन्छ। लौ ! म त्यसलाई केही सहायता गर्छु जसबाट उसको केही श्रम कम भइजाला।

यो सोचेर भगवान्‌ले ब्राह्मणको रूप धारण गरेर एकनाथनजिक आएर भन्नुभो—भाइ, मलाई तिमी आफ्नो सेवक बनाउँछौ ?

एकनाथले भने—'मलाई नोकरको आवश्यकतै कहाँ छ र ? म आफ्नो सारा दिन प्रभुको सेवा र स्मरणमा बिताइरहन्छु।'

भगवान्—'म तिमीलाई भगवान्‌को सेवा गर्नमा मद्दत गर्ने छु।'

एकनाथ—'जस्तो तेरो इच्छा। अँ तेरो नाउँ के हो ?'

भगवान्—'मेरो नाउँ हो शिखण्डयो।'

यस्ता प्रकारले सेवा गर्दा-गर्दा बाह्र वर्ष बितिसक्यो।

जसलाई चन्दनका टीका लगाइन्थ्यो, त्यो स्वयं नै चन्दन घोट्न थाल्यो। 'तुलसीदास चन्दन घिसे, तिलक लेत रघुवीर' वाला कुरा उल्टा भयो। यही हो भक्तिको महिमा।

रुक्मिणीले सेवाद्वारा प्रभुलाई प्रसन्न गरेर अधीन गरिसकेकी थिइन्, तर तौलिनेहरूमा एकमात्र तुलसीदलसँग प्रभुको तौल भएको थियो। श्रीधर स्वामीले ''हरिविजय'' मा एक प्रसङ्ग वर्णन गर्नुभएको छ—

एक पटक सत्यभामाको मनमा अभिमान भएर आयो प्रभुलाई उनी मात्र सबैभन्दा प्रिय छिन्। एक दिन नारदजी घुम्दै-फिर्दै त्यहाँ आइपुगे। सत्यभामाले उनलाई भनिन्—'मैले प्रत्येक जन्ममा यिनै पति कसरी पाउँला—यस्तो कुनै उपाय भन्नुहोस्।'

नारदजी—'तपाईं जुन वस्तुको दान गर्नुहुन्छ त्यही मात्र आउने जन्ममा तपाईंले पाउनुहुने छ। त्यसकारण श्रीकृष्णलाई आगामी जन्ममा पतिको रूपमा पाउन खोज्नुहुन्छ भने उहाँलाई दान गरिदिनुहोस्।'

यस्तो दान दिनका निमित्त सत्यभामा तयार भइन् तर यस्तो दानलाई कसले लिने ?

कोही मानिस पनि त्यो दान लिन तयार भएनन्।

अन्तमा नारदजीलाई नै लिनुहोस् भनेर संझाइयो। उहाँ राजी हुनुभयो।

सत्यभामाले सङ्कल्प गरेर श्रीकृष्णको दान नारदजीलाई गरिदिइन्।

श्रीकृष्णलाई दानमा पाएर नारदजी उहाँलाई सँगै लैजान थाल्नुभयो।

सत्यभामा नारदजीलाई सोध्नथालिन्—'मेरा पतिलाई तपाईं कहाँ लिएर जान थाल्नुभएको ?'

नारदजी—'तपाईंले अहिले उहाँको दान मलाई दिनुभएको होइन ? त्यसकारण उहाँ मेरो हुनु भयो। दानमा दिएको वस्तु दान लिनेको हुन्छ। अब कृष्णका ऊपर मेरो अधिकार भयो।'

अब सत्यभामालाई आफ्नो भूल संझना भयो। उनी श्रीकृष्णलाई माग्न थालिन् र नारदजी दिन स्वीकार गर्नुहुन्न।

जब यो समाचार सबै रानीहरूमा पुग्यो, तब सबै दगुरेर आए तर एउटी रुक्मिणी आइनन्।

सबै रानीहरू नारदजीलाई बिन्ती गर्न-थाले उनका पति फिर्ता दिनुपर्‍यो।

नारदजी—'सत्यभामाले श्रीकृष्णलाई दान दिइसक्नुभएको छ। त्यसकारण उहाँ मेरो भइसक्नुभयो। अँ, फेरि पनि तपाईं उहाँलाई फिर्ता लिन चाहनुहुन्छ भने उहाँको जति तौल हुन्छ त्यति सुवर्ण मलाई दिनुहोस् म उहाँलाई फिर्ता गरिदिने छु।'

सत्यभामा प्रसन्न भइन्। उनले विचार गरिन् 'मसँग थुप्रो गहनापात र स्यमन्तक मणि पनि छ। पतिको तौल होला पो कति र !' उनीले आफ्ना सारा गहनाहरू लिंएर आइन्।

तर यो के भयो ? सत्यभामाले हीरा, मोती, स्यमन्तक मणिसहित आफ्ना सबै आभूषण तराजुमा राखिदिइन्, तैपनि श्रीकृष्णको तराजुको पल्ला तलको तलै रह्यो। अब सबै रानीहरू पनि आत्तिए र दौड़ेर गई आफ्ना-आफ्ना आभूषण लिएर आए। ती आभूषण पनि तराजुमा राखिए, तैपनि श्रीकृष्णको पल्ला तलको तलै रह्यो।

जीव जब अभिमानी हुन्छ तब भगवान् पनि भारी भइहाल्नुहुन्छ। उहाँका सामुन्ने हीरा, मोती, सुवर्णको मोल के होला र?

रानीहरूले आभूषणहरूद्वारा श्रीकृष्णको मोल गर्न खोजे, हजारौं मन आभूषण राखिदिएर पनि त्यसको वजन श्रीकृष्णको वजनभन्दा थोरै भयो।

सत्यभामाको अभिमान नाश गर्नका निमित्त यो सारा लीला रचिएको थियो।

सबै रानीहरू सोचमा डुबिरहेका थिए अब के गर्ने? सत्यभामाले श्रीकृष्णलाई दान गरेर ठूलो अनर्थ भएको थियो।

अन्तमा सत्यभामाले रुक्मिणीको भर गरिन्। रुक्मिणी त्यहाँ आइन्।

रुक्मिणीले सारा कुरा बुझेकी थिइन् भगवान्को तौल किन भएन।

रुक्मिणीले अरू रानीहरूलाई भनिन्—'भगवान्को तौल के सुनले हुनसक्छ?'

उनले प्रेमपूर्वक एउटा तुलसीको पात तराजुमा राखिदिइन् तब भगवान्को तौल पूर्ण भयो। रुक्मिणीले प्रेमसहित तुलसीदल अर्पण गरेकी थिइन् र भगवान्को पल्ला माथि उठेर आयो।

यस्तै प्रकारले बोडाणाका निमित्त भगवान् सवा वाल (एक धान्यविशेष)-का बराबर हुनुभएको थियो—

धन्य धन्य बोडाणा की नारी,<br>
सवा वाल भए वनमाली।

ईश्वर कहिल्यै यस्तो इच्छा गर्नुहुन्न कसैले उहाँको सेवा गरिदिऊन्। उहाँ निजीलाभबाट परिपूर्ण हुनुहुन्छ, उहाँलाई कुनै पनि वस्तुको अपेक्षा छैन। उहाँ स्वयं आनन्दरूप हुनुहुन्छ। उहाँलाई यस्तो इच्छा या अपेक्षा छैन जो वैष्णवले भोग लगाऊन्। उहाँलाई भोजनको इच्छा पनि हुँदैन। उहाँ निष्काम हुनुहुन्छ। भक्तहरूलाई प्रसन्न राख्नका निमित्त मात्र उहाँ भोजन गर्नुहुन्छ।

भगवद्-निवेदन नगरी भोजन कहिल्यै गर्नुहुन्न। ईश्वरलाई उहाँकै पदार्थ अर्पण गर्नु छ। प्रेमले अर्पण गर्‍यौं भने प्रसन्न हुनुहुन्छ। ईश्वरलाई अर्पण नगरिकन खाने मानिस भोकै बस्छ। तिमीले उहाँलाई अर्पण गर्‍यौ भने उहाँले कैयौं गुना बढाएर फिर्ता गरिदिनुहुन्छ। उहाँ भन्नुहुन्छ 'मैले बनाएका वस्तुहरू मैलाई अर्पित गरेमा कुनै ठूलो कुरा भएन, तर मलाई अर्पण नगरिकन खानुचाहिँ अनधिकृत खाना हो।'

भगवानको घरमा कुनै कमी छैन। उहाँ केवल तिम्रो भावना मात्र हेर्नुहुन्छ।

भगवान्‌ले जो दिनुभएको छ त्यही उहाँलाई अर्पण गर्नुपरेको छ। जीवले कुनै पनि वस्तु उत्पन्न गर्न सक्ने होइन, सबै कुरा श्रीकृष्णकै हो।

दीयो सल्काउनाले या आरती गर्नाले भगवान्को घर प्रकाश हुने होइन त्यो तर तिम्रो हृदय प्रकाशित गर्नका निमित्त हो। ईश्वर स्वयं प्रकाश हुनुहुन्छ।

सेवा गर्नाले सेवकलाई सुख हुन्छ। भगवान्‌लाई के सुख पाइएला ? उहाँ परमानन्दस्वरूप हुनुहुन्छ।

जीवलाई दिने ईश्वरै मात्र हुन्, तर मनुष्यको निवेदनबाट उहाँ प्रसन्न हुनुहुन्छ।

सेवा र पूजामा भेद छ। जहाँ प्रेमको प्राधान्य छ, त्यो सेवा हो र जहाँ वेदमन्त्रको प्राधान्यता छ, त्यो पूजा हो।

पूजा गर तर प्रेमसाथ गर। अन्यथा स्नेहादिको समर्पण व्यर्थ हुनेछ। आफ्नो लुगा नबिग्रियोस् भन्ने डरले कति मानिस मन्दिरमा साष्टाङ्ग दण्डवत् प्रणामसम्म पनि गर्दैनन्।

नर कपड़नकों डरत हैं,
नरक पड़नको नाहिं।

जे पनि छ, त्यो ईश्वरकै हो। केवल उहाँलाई अर्पित गर्नु छ। अर्पण गर्ने रीतिबाट तिम्रो मनको भावनाको पत्ता उहाँलाई लाग्छ।

दक्षिणमा एउटा कथा प्रचलित छ।

कुनै पनि शुभ कार्यको आरम्भमा विघ्ननाशका निमित्त गणपतिको पूजा गरिन्छ।

कुनै एक गाउँमा एउटा गृहस्थको घरमा विवाह हुने भएछ। ब्राह्मणले देखेछन् गणपतिको मूर्ति छैन, अब के गर्ने ? उनी ज्ञानी थिए। उनले विचार गरे ईश्वरको प्रतिष्ठा कहीं पनि गर्न सकिन्छ। सुपारीमा पनि भगवान् बस्नुहुन्छ। उत्तमोत्तम वस्तु भगवान्‌लाई अर्पण गर्नु भक्ति हो।

त्यसकारण ती ब्राह्मणले नैवेद्यका निमित्त राखेको सख्खरमध्येबाट गणपति बनाए। यजमानद्वारा पूजा गराइयो। धूप दीप पनि भयो। अब नैवेद्यको वेला आयो। नैवेद्यबाट गणपति बनाइसकेको थियो। अब के गर्ने ? तब ती ब्राह्मणदेवले सख्खरको त्यस गणपति मूर्तिबाट अलिकति सख्खर झिकेर नैवेद्य बनाए—

गुणाचा गणपति, गुणाचा नैवेद्य।

गणपति पनि गुड़को र नैवेद्य पनि गुड़कै। यस्तो पूजाबाट पनि गणपति प्रसन्न हुनुभयो। त्यस यजमानको कार्य निर्विघ्न सिद्ध भयो। किनकि कार्यको भावना चाहिँ शुद्ध थियो।

महत्व वस्तुको हुँदैन भावनाको हुन्छ। सद्भावनापूर्वक सेवा गर्‍यौ भने त्यो सेवा सफल हुनेछ। सेवा गर्दाखेरि आङ सिरिङ्ग गरोस्, आँखाबाट अश्रुधारा बग्न थालोस् तब मात्र संझ त्यो साँचो सेवा भयो।

सेवा मात्र क्रियात्मक होइन, भावनात्मक पनि हुनुपर्छ। सेवा गर्दा आनन्द मिलोस् त्यही सेवा हो। जे पनि गर, प्रेमसहित गर। भगवान्‌का निमित्त भोजन बनाऊ। भगवान्‌लाई अर्पण गरेपछि भोजन गर।

साथै प्रार्थना पनि गर—'हे नाथ ! तपाईं विश्वम्भर हुनुहुन्छ। सबैको स्वामी हुनुहुन्छ। तपाईंलाई कसले ख्वाउन सक्छ ? तैपनि यी पदार्थ तपाईंलाई मनले अर्पण गर्छु।'

जो ईश्वरको हो, त्यही मात्र उहाँलाई समर्पण गर्नु छ। यो जीवले अरू दोस्रो कुरा ल्याउँछ पनि कहाँबाट ? केवल भावनाको मूल्य हो। परमात्मा स्वयं परिपूर्ण हुनुहुन्छ। उहाँमा कुनै अपेक्षा छैन। उहाँलाई कुनै पनि वस्तुको क्षुधा छैन। उहाँ केवल भावनाको भोको हुनुहुन्छ। उहाँलाई तिमीले भावपूर्वक अर्पित गर्‍यौ भने उहाँले त्यसको कैयौं गुना धेरै बनाएर तिमीलाई फर्काइदिनुहुन्छ।

भक्तिमार्गमा भावका विना सिद्धि प्राप्त हुँदैन। ज्ञानमार्गमा त्याग र वैराग्य आवश्यक छ।

पिताले पुत्रलाई रुपियाँ दिन्छ। उसले कहिले फिर्ता दे भन्छ पनि, यदि छोराले रुपियाँ नफर्काओस् तब पितालाई दुःख हुनेछ जबकि मैले उसलाई दिएको हो तर पनि ऊ फर्काउँदैन। तर बालकले रुपियाँ फर्कायो भने पितालाई हर्ष हुनेछ। रुपियाँ उसैको हो, तैपनि रुपियाँ पाएर उसलाई सन्तोष हुन्छ।

ईश्वर जीवमात्रका पिता हुनुहुन्छ। उहाँले जो हामीलाई दिनुभएको छ त्यही हामीले उहाँलाई दिनु छ। प्रतिज्ञा गर अब भगवान्‌लाई अर्पण नगरिकन केही पनि खाने छैनौं।

कति पटक यस्तो देखिएको छ घरका सबै मानिस भोजनका निमित्त कतै बाहिर जान लागेका छन् भगवान्‌लाई भोग दूधमात्र दिन्छन् र भन्छन् 'नाथ ! दूध खानुहोस्, आज हाम्रो मोहनथाल खाना बाहिर भइरहेछ।' तर यस्तो कुनै राम्रो कुरा भएन। घरमा सम्पूर्ण मानिसले भोजन नगरे पनि, भगवान्‌का निमित्त केही बनाउनै पर्छ।

कथा सुनेर यदि कुनै शुभ सङ्कल्प हुन सक्दैन भने श्रोताले सुनेको र वक्ताले भनेको दुवै निरर्थक हुन्छ। कथा सुनेर त्यसलाई हृदयमा राख।

कुनै पनि स्वरूपको मूर्तिको स्थापना गरेर त्यसको प्रेम र भावपूर्वक सेवा गर। चित्त-स्वरूपको अपेक्षा मूर्ति-स्वरूप ज्यादा असल हुन्छ। सेवा गर्दाखेरि मनमा यस्तो भाव हुनुपर्छ, उहाँ साक्षात् परमात्मा हुनुहुन्छ। सेवाका आरम्भमा ध्यान गर। सम्पत्तिअनुसार खर्च पनि गर। राम्रो सिंहासन बनाऊ। ध्यानपूर्वक भावना गर भगवान् बैकुण्ठबाट यसतर्फ आइरहनुभएको छ र मेरो घरको सेव्य स्वरूपमा प्रविष्ट भइरहनुभएको छ। सेवा गर्दा कुनै व्यक्तिका साथ कुराकानी नगर। उसलाई पनि नमस्कार मात्र गर्नु।

न कोही परमात्माभन्दा श्रेष्ठ छ न कोही परमात्माको समान छ।

सेव्यमा मनलाई लगाइराख्नु सेवा हो। तिमी आफ्ना शरीरका साथ जस्तो प्रेम गर्छौं, त्यस्तै प्रेम भगवान्‌को स्वरूपमा पनि राख। परमात्माका अनन्त उपकार छन्। सदा यस्तै विचार गर मलाई कति पटक प्रभुले रक्षा गरिदिनुभएको छ। म भगवान्‌को सेवक हुँ, दासानुदास हुँ। म तिम्रै हुँ। सेवामा दास्य भाव मुख्य हो। दास्यभावले हृदय छिट्टै नम्र बन्दछ। सेवामा दैन्यभाव आउनाले

हृदय पग्लिन्छ। कृष्णसेवामा जबसम्म हृदय पग्लँदैन तबसम्म सेवा सफल हुन सक्दैन। दास्यभावका विना सेवा फल्दैन। सेवा स्नेह र समर्पणभावले गर। जबसम्म मूर्तिका प्रति भगवद्‌भाव जाग्दैन तबसम्म प्रत्येक पदार्थका प्रति पनि ईश्वरभाव जाग्दैन। सेवा गर्दाखेरि लक्ष्यमा त्यही होस् यो प्रत्यक्ष ईश्वर हो।

कुनै दिन तिमीबाट केह पाप भएको छ भने, त्यस दिन सेवागर्दा प्रभु अप्रसन्न जस्तो लागिनुहुन्छ। जीवले पाप गऱ्यो भने उहाँलाई दुःख हुन्छ, कष्ट हुन्छ। त्यस कारण शुद्ध भावले सेवा गर। जबसम्म मन मलिन हुन्छ, तबसम्म आनन्दको प्राप्ति हुँदैन। मनबाट मलिनता हटाऊ।

प्रभुसेवामा भावना र अटलता कस्तो हुनुपर्छ यस विषयमा नामदेव महाराजको एक जीवन प्रसङ्ग द्रष्टव्य छ। नामदेव महाराजको घरमा प्रतिदिन विट्ठलनाथजीको सेवापूजा गरिन्थ्यो। जब नामदेव तीन वर्षका बालक थिए त्यस वेलाको कुरा हो। उनका पिताजीलाई एकपटक कहीं बाहिर जानुपर्दा सेवा-पूजाको काम उनले नामदेवलाई सुम्पिएर गए। पिताले नामदेवलाई भने—'बाबु विट्ठलनाथजी घरका स्वामी हुनुहुन्छ। उहाँको सेवा नगरिकन भोजन गर्नु पाप हो। यो सुनेपछि नामदेवले सेवा गर्ने तरीका सोचे।'

पिताजीले भने—'श्री विट्ठलनाथ घरको प्रत्येक वस्तुका स्वामी हुनुहुन्छ। त्यसकारण उनको प्रसादको रूपमा ग्रहण गर्नलाई दोष छैन। प्रभु भगवान्‌लाई अर्पण नगर्नु पाप हो।'

वेदान्ती ब्रह्मको कुरा गर्छन्। जीव ब्रह्म हो। जीव चाहे ब्रह्मरूपनै होस्, तर मानव शरीरका कारण आज यो प्रभुको दास मात्र हो। परमात्माले उसलाई, थाहा छैन कहिले आफ्नो बनाएर ब्रह्मरूप तुल्याइदिनुहुन्छ। तबसम्म त्यो दास मात्र हुनेभो।

दास्यभावले जीवन सुध्रिन्छ र मृत्यु पनि सुध्रिन्छ। भागवतमा वात्सल्यभाव, मधुरभाव आदिको वर्णन छ। तर ती सबै दास्यभावले मिश्रित छन्। दास्यभावको विना ईश्वरलाई जीवमाथि दया आउँदैन।

पिताजीले भने—'बाबु, प्रातःकालमा छिटै ब्यूँझिएर स्नानादि गरेर पवित्र भएपछि भगवान्‌को प्रार्थना गर्नु। प्रार्थना गरेर उहाँलाई जागा गराउनु।'

उत्तिष्ठ मम गोविन्द उत्तिष्ठ गरुडध्वज।
उत्तिष्ठ कमलकान्त त्रैलोक्यं मङ्गलं कुरु॥

प्रथम भोग सामग्री तयार पार्नु।

वैष्णवहरूको हृदयमा प्रेमभाव जागेपछि मात्र ठाकुरजीलाई भोक लाग्दछ।

भगवान्‌को चरण विस्तार-विस्तार धुनु जसमा कि उहाँलाई कुनै कष्ट नहोस्। किनभने—

यथा देहे तथा देवे यथा देवे तथा गुरौ।

स्नान गराएपछि विस्तार-विस्तार उहाँको दर्शन गर्नु। सद्भावले सेवा गर्नु। त्यसपछि उहाँको शृङ्गार गर्नु। उहाँलाई सोध्नु आज तपाईं कुनचाहिँ पीताम्बर लाउनुहुने हो ?

शृङ्गारकर्ता भगवान्‌का साथ भइहाल्छ। प्रभुले दिएको छ भने फेरि उहाँका निमित्त खर्च गर्नमा किन संकोच ? योगीलाई जो आनन्द समाधिबाट पाइन्छ, सोही आनन्द भक्तलाई ठाकुरजीको शृङ्गार गर्दा प्राप्त हुन्छ। खुला आँखाले मात्र समाधि जस्तो आनन्द पाइन्छ। योगी प्राणायाम, प्रत्याहार आदि गर्दछन्, तैपनि उनको मन कति पटक फर्किन्छ।

कृष्ण भगवान्‌लाई बारम्बार बोलाएपछि मात्र बोल्ने हुन्। जगत्‌लाई बिर्सिएर परमात्मामा तन्मय हुनाले आनन्द प्राप्त हुन्छ। शृङ्गारपछि दूध र भोग अर्पण गर्नु। भगवान् बड़ो लाज मान्नु हुन्छ। बारम्बार बिन्ती गरेपछि उहाँ भोजन गर्नु हुन्छ। उहाँसँग प्रार्थना गर्नु तपाईंलाई कुनै आवश्यकता नभए पनि भोग चाहिँ अवश्य स्वीकार होस्। जब यस किसिमले धेरै पटक प्रार्थना गर्नेछौ अनिमात्र भगवान्‌ले दूध स्वीकार गर्नु हुने छ।

सेवा-भक्तिमा प्रेम मुख्य हो। सेवा भावसहित गर्नुपर्छ—'हे नाथ। तपाईंले अजामिल जस्ताहरूको पनि उद्धार गर्नुभयो, तब के मेरो गर्नु हुन्न ? म अधम छु, तर अजामिलजति चाहिँ छैन। अजामिल वेश्याका साथ बस्थ्यो। मैले त्यस्तो कर्म केही गरेको छैन। तब के ममाथि कृपा नगर्ने ? स्तुतिपश्चात् भगवान्‌लाई वन्दना गर्नु। स्तुतिमा केही त्रुटि भएको रहेछ भने पनि प्रणाम गर्नाले सबै कुरा ठीक हुन्छ। सेवाको समाप्तिमा बालकृष्णलाई साष्टाङ्ग प्रणाम गर्नू।'

नामदेव भोलाभाला बालक थिए। उनले पिताजीका वाक्यलाई अक्षरशः सत्य मानेका थिए।

साना बालकलाई राम्ररी संझाइएको छ भने उसलाई मूर्तिमा पनि भगवान् देखा पर्नुहुन्छ। ठूलो भएपछि संझाउन लागेमा उसले तर्क गर्न थाल्छ। त्यसकारण बाल्यावस्थामा भक्तिको संस्कार दृढ़ गराइदिनुपर्छ।

नामदेवको मनमा पनि यो कुरा गढ्यो अब विट्ठलनाथले दूध अवश्य पिउनुहुने छ र भोजन पनि गर्नुहुने छ।

भक्त बन्दैनन् या बनाइँदैनन्। भक्त जन्मना हुन्छन्। नामदेव बाल्यावस्थादेखिनै भक्त थिए।

जुन दिन पिताजी बाहिर गए, विट्ठलनाथको सेवाको धूनमा मस्त भएकाले नामदेवलाई निद्रा परेन। ती बालक प्रातःकाल चार बजेदेखिनै प्रभु सेवामा लीन भए। उनले प्रभुलाई प्रेमपूर्वक जागा गराए।

बालक भएर भगवान्‌को सेवा गर। बालक प्रायः निर्दोष हुन्छन्। निर्दोषितापूर्वक सेवा गर।

नामदेवले भगवान्को चरणलाई धोएर उनको सुन्दर शृङ्गार गरिदिए। भगवान् प्रसन्न देखिनुहुन्थ्यो। नामदेव गरीब घरका थिए। तुलसीको माला, जो प्रभुलाई प्रिय लाग्छ, लगाइदिए।

अलिकति दिए पनि धेरै मानिलिने ईश्वर हो र धेरैलाई थोरै मान्ने त्यो जीव हो।

नामदेवले भगवान्लाई गोपिचन्दनको तिलक लगाइदिए। शृंगारका पछि भगवान्लाई भोक लाग्दछ।

हाम्रा हृदयमा यदि प्रेम छ भने भगवान्को मूर्तिमा चेतना आउँछ। प्रेमले जड़लाई चेतन र प्रेमको अभावमा चेतनलाई पनि जड़ बनाउन सक्दछ।

नामदेवले दूध ल्याएर प्रभुलाई अर्पण गर्दै भने—'विट्ठलनाथ, तपाईं त जगत्का पालनहर्ता हुनुहुन्छ, त्यसकारण म तपाईंलाई के खुवाउन सक्छु? तपाईंको जो थियो त्यही तपाईंलाई दिइरहेछु।'

**त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पये।**

नामदेव बारम्बार प्रभुलाई मनाउन थाले, बिन्ती गर्न लागे, तर नामदेवको प्रेम देखेर विट्ठलनाथ दूध खानुसाटो बालकको मुख हेर्न थाल्नुभयो।

भगवान्ले दूध नपिएको देखेर नामदेव भन्छन्—'म बालक हुँ। मैले आजसम्म कहिले पनि सेवा गरेको थिइनँ, त्यसकारण तपाईं मसँग रिसाउनु भएको होइन? तपाईंले दूध किन नपिएको? तपाईंलाई भोक लागेको होला। दूध पिउनुहोस्।'

कहीं दूधमा गुलियो कम भएन?

यो सोचेर उनले घरबाट ल्याएर अलिकति सख्खर थपिदिए।

नामदेवले फेरि भने—'विट्ठलनाथ, यदि दूध पिउनुहुन्न भने, म पनि दूध पिउन छोड़िदिन्छु। तपाईं दूध पिउनुहुन्न भने म तपाईंको चरणमा आफ्नो शिर फोरिदिनेछु।'

बालक व्याकुल थियो विट्ठलनाथजी दूध नपिउने भएमा पिताजी उसमाथि क्रोधित होलान्। बालक आफ्नो शिर फोर्नै के लागेका थिए परमात्माले दूधको भाँड़ो उठाउनुभयो। आज जड़मूर्ति पनि चेतन भइगयो। नामदेवको प्रेमले विट्ठलनाथजी प्रसन्न हुनुभयो। विट्ठलनाथजीलाई दूध पिउँदै गरेको देखेर बालक प्रसन्न भए।

बालकलाई यो आशा थियो विट्ठलनाथको केही न केही प्रसाद पाइएला अवश्यै, तर आज विट्ठलनाथले सबै दूध पिउने इच्छा गरिरहेथे। यो देखेर नामदेवले भने—तपाईंलाई आज के भएको छ? के तपाईं मात्र सबै दूध पिउने हो? के मलाई अलिकति पनि नदिने?

यो सुनेर विट्ठलनाथले नामदेवलाई उठाएर आफ्नो काखमा लिनुभयो र फेरि दुवैले एक अर्कालाई दूध पियाए। यसप्रकार सेवाक्रम बताइएको छ।

प्रेम र सेवाका विना भक्ति सफल हुन पाउँदैन। यस प्रेममा यस्तो बल छ जो निष्कामलाई सकाम र निराकारलाई साकार बनाउनुपर्दछ। ईश्वरका साथ प्रेम गर। ईश्वर जीवसित पनि प्रेम माग्दछ। प्रेम गर्ने योग्य ईश्वर मात्रै हुनुहुन्छ। सेवा गर्दा-गर्दै यदि हृदय पग्लियो भने आँखाबाट अश्रुधारा बग्यो भने मात्र मान सेवा साँच्चैको हो।

ज्ञानद्वारा वस्तुको स्वरूपमा परिवर्तन हुन सक्तैन।

तर भक्तिमा त्यस वस्तुको स्वरूपको, पदार्थको ज्ञान हुन्छ, तर ज्ञानद्वारा त्यस वस्तुको स्वरूपमा पनि परिवर्तन गरिदिने शक्ति हुन्छ। प्रेममा, भक्तिमा जड़मूर्तिलाई पनि चेतनमय बनाइदिने शक्ति हुन्छ।

विम्बको शृङ्गार गर्‍यौ भने प्रतिविम्ब पनि राम्रो देखिन्छ। ईश्वरलाई दियौ भने उहाँले पनि तिमीलाई कैयौं गुना बढ़ाएर फर्काइदिनुहुन्छ।

द्रौपदीको लाज परमात्माले राखिदिनु भयो। ती दुवैको कुनै स्थानमा मिलन भयो। मिलेपछि द्रौपदीले भगवान्‌को आभार मानिन्। तब भगवान्‌ले भन्नुभयो—'आभार? उपकारको केही कुरै छैन। म आज तिम्रो ऋण तिरेरै मुक्त भएँ। शायद तिमीले यो कुरा बिर्सिसकेकी हौली, तर मलाई संझना छ। एक पटक मेरो औंलाबाट रगतको धारा बगेको थियो, सारा रानीहरू महलमा पट्टी खोज्न भनी निस्किएका थिए, त्यसवेला तिमीले आफ्नो वस्त्र च्यातेर मलाई पट्टी बाँधिदिएकी थियौ। त्यो पट्टीमा नौसय उनान्सय धागाहरू थिए, तब त्यसैवेलामा मैले विचार गरेको थिएँ म आफ्नी बहिनीलाई नौ सय उनान्सय वटा सारी दिनेछु। त्यो दिएर आज म ऋणमुक्त भएँ।'

मनुष्यले ईश्वरलाई जति पनि दिन्छ, ईश्वर उसलाई अनन्त गुना बढ़ाएर दिनुहुन्छ। परमात्मा निजलाभ परिपूर्ण हुनुहुन्छ, त्यसकारण परमात्मा आफूलाई समर्पित गरेको वस्तुभन्दा कैयौं गुना बढ़ता गरेर फर्काउनु हुन्छ। उहाँ आफ्नो शिरमा कसैको पनि ऋण राख्नुहुन्न। यति मात्र होइन उहाँले त्यो ऋणलाई ब्याजका साथ फर्काउनुहुन्छ।

प्रह्लादजी स्तुति गर्नुहुन्छ—'प्रभु, तपाईंका माङ्गलिक सद्‌गुणहरूको वर्णन म कसरी गरूँ? ब्रह्मादिदेव पनि तपाईंको लीलाको पार पाउन सक्दैनन्। तपाईं शान्त भइदिनु होस्। मेरा पिताको जो जगत्‌का निमित्त कंटक समान हुनुहुन्थ्यो तपाईंले बध गरिदिनुभयो, त्यो राम्रै भयो।'

तपाईंको यस भयङ्कर स्वरूपलाई देखेर देवताहरूलाई डर लागिरहेछ, तर मलाई केही भय लागेको छैन। मलाई तपाईंको उग्र स्वरूपको कुनै डर छैन। मलाई तर यस संसारकै भय छ—

त्रस्तोऽस्म्यहं कृष्णवत्सल दुस्सहोग्र संसार चक्रगदनाद्‌ग्रसतां प्रणीतः।
बद्धः स्वकर्म भिरुशत्तम तेडघ्रिमूलं प्रीतोऽपकर्गशरणं ह्वयसे कदा नु॥

(भाषा०-७-९-१६)

हे दीनबन्धु मलाई यो असत्य र उग्र संसार-चक्रमा दलिन जाने मात्र भय छ। मेरा कर्मपाशहरूद्वारा बाँधेर मलाई यी भयङ्कर जन्तुहरूका बीच छोड़िदिइएको छ। सबै जीवहरूका एकमात्र शरण र मोक्षस्वरूप यस्ता आफ्ना चरणहरूमा, हे नाथ, प्रसन्नतासाथ तपाईंले मलाई कहिले बोलाउनु होला ?

तपाईं सबैको आश्रय हुनुहुन्छ। तपाईं हाम्रा प्रिय सुहृद् हुनुहुन्छ। तपाईं मात्र सबैका परमाराध्य हुनुहुन्छ। तपाईंको लीलाकथाको गान गर्दै म बड़ो सरलतापूर्वक यस संसारका कष्टहरूलाई पार गरौंला।

दृष्टामया दिवि विभोऽखिलधिष्ण्यपानामायुःश्रियो विभव इच्छति याञ्जनोऽयम्।
येऽस्मत्पितुः कुपितहासविजृम्भितभ्रूर्विस्फूर्जितेन लुलिताः स तु ते निरस्तः॥
(भा० ७-९-२३)

हे भगवान्, जसलाई प्राप्त गर्नका निमित्त संसारी मानिसहरू उत्सुक रहन्छन्, स्वर्गमा प्राप्त सबै लोकपालकहरूको आयु, लक्ष्मी र वैभव मैले देखिसकें। मेरा पिताका निमित्त के वस्तुको कमी थियो ? आँखाको एकमात्र इसाराले सबै कुरा ल्याइदिने सामर्थ्य थियो। स्वर्गको सारा सम्पत्ति पनि उहाँलाई प्राप्त थियो, तापनि उहाँको नाश भयो। भोगोपभोगको यस्तो विनाशकारी परिणाम मैले देखिसकें। त्यसकारण म भोगोपभोग, दीर्घायुष्य, लक्ष्मी, ऐश्वर्य, इन्द्रिय-भोग्य वस्तु या ब्रह्माको वैभव आदिको इच्छा गर्दिनँ। म भन्दछु—

आयुः श्रियं विभव मैन्द्रियमाविरिञ्चात् न इच्छामि ते।

भगवान् यो संसार अन्धकारले भरिएको एउटा यस्तो इनार छ जसमा टोक्नका निमित्त सँधै तत्पर एउटा काल सर्प घुमिरहन्छ। यस इनारमा विषय भोगको इच्छा गर्ने मानिसहरू फँसेका छन्।

हे बैकुण्ठनाथ, म यी सब कुरा जान्दछु तापनि मेरो मन तपाईंका लीलाहरूको कथामा लाग्दैन। मेरो मनको दुर्दशा भएको छ। त्यो पाप वासनालाई आतुर रहन्छ। त्यो हर्ष-शोक, लोक-परलोक, धन, पत्नी, पुत्र आदिका चिन्तामा डुबिरहन्छ। मन यताउति भौंतारिन्छ र त्यसलाई नियन्त्रण गर्नु बड़ो कठिन छ। त्यो कामातुर छ, भयत्रस्त छ र भाँति-भाँतिका इच्छाहरूद्वारा दूषित र दुःखी छ।

मनका यी विशेषणहरूको विषयमा विचार गर—मन 'दुरितं दुष्टम् असाधु तीव्रम् कामातुरं हर्षशोकभयैषणार्त' छ।

त्यसकारण तपाईंका कथाहरूका प्रति मेरो मन उदासीन छ। मनको यस्तो स्थितिको कारण म दीन बनेको छु। यस्तो दशामा म तपाईंको तत्त्वको विचार कसरी गरूँ ?

हे नाथ ! मेरो यस्तो मनलाई नियन्त्रण गर्ने शक्ति मलाई दिनुहोस् र मेरो रक्षा गर्नुहोस्।

नृसिंह स्वामीले भन्नुभयो—'बाबु, बिग्रेको मन भगवान्‌को नामजपका विना सुध्रिँदैन। प्रह्लाद, तिम्रो मन शुद्ध छ र तिमीले मेरो दर्शन गर्न सक्यौ।'

मनको दशाको कुरा सबै भयो। अब इन्द्रियहरूका दशालाई हेरौं।

प्रह्लाद भन्नुहुन्छ—त्यसो तर म पाँच वर्षको मात्र छु तापनि मेरा पाँच स्त्रीहरूका साथ विवाह भइसकेको छ। यी पाँच पत्नीहरूले मलाई आरामसँग बस्न दिँदैनन्। यिनले मलाई नचाइरहन्छन्। यी सदा अतृप्त रहन्छन्।

भोजनले तृप्ति भएन। भोजनले मात्र यदि तृप्ति हुन सक्ने भए यो जीवन कति जन्महरूदेखि भोगोपभोग गर्दै आएको छ तापनि त्यसलाई तृप्ति भएको छैन। तृप्ति भोगबाट हुँदैन त्यागबाटै मात्र हुन सक्छ।

यो लुलो जिब्रो मलाई धेरै नचाउँछ। जब यसलाई राजी गराउँछु तब आँखाले सताउन थाल्दछ अलिकता सिनेमा देखाइदेऊ।

के सिनेमाले मनोरञ्जन प्राप्त हुन सक्दछ ? मनोरञ्जन त्यसै वेला पाइन्छ जब मन निर्विषय बन्दछ र इन्द्रियहरू आत्मस्वरूपमा लीन हुन्छन्। साँचो आनन्द तर त्यसैवेला पाइन्छ।

मानिस यो जान्दै जान्दैन साँचो सुख र साँचो आनन्द कहाँ छ ?

आँखालाई सँझाउछु तर कानले सुख लिन दिँदैन। त्यसलाई रेडियोद्वारा सिनेमा संगीत सुन्नु छ।

जो व्यक्ति मानवजीवन सफल गर्ने इच्छा राख्छ, त्यसले शृङ्गारी गीत कहिल्यै नसुन्नु।

स्पर्श सुखले पनि मलाई दुःख दिन्छ। म जान्दछु मेरो शरीर हाड़-मासुका सिवाय अरू केही छैन तापनि म लाचार छु। मेरो बुद्धि नजाने कहाँ बिलाएर जान्छ ?

यी इन्द्रियहरूले अनेक पत्नीवाला पतिको जस्तो मेरो दुर्दशा गरिदिएका छन् ? मेरो दुर्दशा हेर—

जिह्वैकतोऽच्युत विकर्षति मावितृप्ता शिश्नोऽन्यतस्त्वगुदरं श्रवणं कुतश्चित्।
घ्राणोऽन्यतश्चपलदृक् क्व च कर्मशक्तिर्बह्व्यः सपत्न्य इव गेहपतिं लुनन्ति॥

(भा० ७-९-४०)

हे अच्युत ! सँधैं अतृप्त रहने यो जिब्रो मलाई स्वादिष्ट रसका तर्फ खिँच्तछ, जननेन्द्रिय विषयभोगका निमित्त सुन्दर स्त्रीका तर्फ, त्वचा कोमल स्पर्श सुखका निमित्त, पेट भोजनका तर्फ, कान मधुर संगीतका तर्फ, नाक मन्द-मन्द सुगन्धका तर्फ र चपल नेत्र सौन्दर्यका तर्फ मलाई आकर्षित गर्दै रहन्छन्, कर्मेन्द्रियहरू पनि आफ्ना-आफ्ना विषयहरूका तर्फ मलाई खिँचिरहन्छन्। मेरो दशा यस्तो भइरहेछ जो धेरै पत्नी हुने पुरुषलाई सबै पत्नीहरूले आफ्ना-आफ्ना शयन-गृहतिर तानिरहेका छन्।

कुनै एक चोर कसैको घरमा चोरी गर्न भनेर पस्यो। त्यो कुनै साहेबको घर थियो। त्यहाँ त्यसका दुइ पत्नीहरू थिए। एउटीले साहेबको कपाल समातेर मास्तिर तानिरहेकी थिई र अर्कीले गोड़ा समातेर तल्तिर तानिरहेकी थिई। चोरले जब यो दृश्य देख्यो तब उसले हाँसो थाम्न सकेन र त्यो हाँस्नाको कारणले समातियो र त्यसलाई राजाका नजीक लगे। चोरले राजासँग बिन्ती गऱ्यो— 'मलाई जेसुकै दण्ड दिए पनि हुन्छ तर दुइ पत्नीवाला त्यो साहेब जस्तो दण्ड चाहिँ नपाऊँ।'

यो कथा कुनै अन्य साहेबको होइन जीवमात्रको हो।

पाँच इन्द्रियहरूका पाँच विषय सच्चा पति होइनन् तर पति हुन चाहन्छन्। त्यसो त पाँच इन्द्रियहरूका पति परमात्मा मात्रै हुन्। इन्द्रियहरू परमात्माकै साथमा सुत्छन्, तिनीहरू विषयहरूका साथ सुत्न सक्दैनन्।

तृप्ति भोगमा हुन्न, त्यागमा हुन्छ। इन्द्रियहरूका आवेगलाई सहेर त्यसलाई नियन्त्रित गऱ्यौ भने सुखी हुनेछौ।

भोगहरूद्वारा वासना बढ्छ। भोगोपभोगद्वारा इन्द्रियहरूको रक्षा होइन तर क्षय मात्र हुन्छ। भक्ति-रसद्वारा मात्र इन्द्रियहरू पुष्ट हुन सक्छन्। विषयहरूलाई चिन्तन गर्नाले शक्तिको क्षय हुन्छ। ईश्वरस्मरणद्वारा शक्तिको प्राप्ति हुन्छ।

प्रह्लाद अगाड़ि भन्नुहुन्छ—

'प्रभु, तपाईं भन्नुहुन्छ संसारको मोह त्यागेर मेरो मात्र भजन गर, तर भजन गरौं भने कसरी गर्ने ? तपाईंले यस संसारमा विषयहरूको यस्तो आकर्षण रच्नुभएको छ जो बड़ा-बड़ा ज्ञानीहरू पनि अल्मलिन्छन्। मायाले यस संसारमा विषयहरूको यस्तो आकर्षण रचेको छ जसमा धेरै विद्वान्हरू पनि अल्मलिन्छन्। संसारको सुख हुन चाहिँ विष हो, तर अमृतजस्तै लाग्छ। संसारको विषय यस्तो आकर्षक तपाईंले किन बनाउनुभएको ? जगत्मा यस्ता सुन्दर पदार्थहरूलाई उत्पन्न किन गरेको ? यिनै कारणहरूले इन्द्रियहरू लोभिन्छन् अनि फँस्न जान्छन्।'

नाथ ! म बालक हुँ, मेरा त्रुटिहरू क्षमा गर्नुहोस्, तर म भन्छु जगत्लाई सुन्दर बनाए मात्र इन्द्रियहरू मोहग्रस्त हुन्छन्। यस जगत्को विषय यति सुन्दर छ जो आँखाले देख्यो भने चित्त चञ्चल भइहाल्छ। संसारलाई यस्तो सुन्दर नबनाएको भए कति असल हुँदो हो ? तपाईं इन्द्रियहरूलाई वशमा राख्नका निमित्त भन्नुहुन्छ तर यी सुन्दर दृश्यलाई देखेर चतुऱ्याइँ हावा भइहाल्छ।

परमात्माले सोची-संझीकनै संसारलाई सुन्दर बनाएको छ, जसबाट उहाँका सन्तान सुखी होलान्। तर मर्यादाको उल्लङ्घन गरी आसक्तिपूर्वक भोगोपभोग गरेर मनुष्य दुःखी भयो भने तब त्यसका निमित्त ईश्वरले के गरून्। यसमा ईश्वरको के दोष ?

जीव मर्यादालाई तोड़ेर विषयहरूको भोग गर्छ र दुःखी हुन्छ भने त्यसमा ईश्वरको के दोष ?

नृसिंह भगवान् प्रह्लादलाई संझाइरहनुभएको छ—

जीवहरूलाई मात्र सुखी गराउनकै निमित्त मैले संसारका सारा पदार्थ उत्पन्न गरेको छु। मानिस यदि अमर्यादापूर्वक, आसक्तिपूर्वक पदार्थहरूको उपभोग गरी दुःखी भइरहन्छ भने यसमा मेरो के दोष ? मर्यादापूर्वक पदार्थहरूलाई र विषयहरूलाई भोग्ने मानिस सुखी हुन्छ।

विषयहरूको उपभोगको समयमा मनुष्यले यो बिर्सनुहुन्न जो संसारनिर्माता भगवान् हुनुहुन्छ। संसार त्यागेर मानिस कहाँ जाने ? म पनि रहनेछु र संसार पनि रहला। संसारलाई भोगदृष्टिबाट होइन भगवद्दृष्टिबाट मनुष्यले हेर्छ भने त्यो सुखी हुन्छ। तिमी आफैंलाई सुधार। तिमी सारा संसारलाई कसरी सुधार्न सक्छौ र ?

एक पटक अकबरकी छोरीको पैतालामा काँड़ा बिझ्यो। अकबरले बीरबललाई बोलाएर आज्ञा दिए 'मेरा साम्राज्यको सारा भूमिमा छालाले ढाकिदेऊ जसबाट भविष्यमा फेरि कहिल्यै शाहजादीको पैतालामा काँड़ाले नघोचोस्।' बीरबल कपाल कन्याउन थाले अब छालाको यति ठूलो टुक्रा कहाँबाट ल्याउने, जसले सारा साम्राज्यको भूमिलाई ढाकिदेवोस्। राजा केही तरङ्गी जस्ता हुन्छन्। बीरबलले सोचे अब सारा भूमिमा छालाले ढाक्नुभन्दा राजपुत्रीको गोड़ामा मात्र किन छालाले नढाकिदिनु। बीरबलले जुत्ता बनाएर राजपुत्रीलाई लगाइदिए।

जगत्मा काँड़ाहरू छन् र रहन्छन् पनि, तर जसका गोड़ामा जुत्ता हुन्छन् त्यसलाई काँड़ा कहिल्यै बिझ्दैन। विवेकपूर्वक मर्यादामा बसेर मनुष्यले सुखको भोग गर्‍यो भने सुखी हुन सक्दछ। सुखहरूको उपभोगमा मर्यादा र विवेकको अनादर गरेमा मनुष्यले दुःखी हुनुपर्छ।

सबैका सुखको निमित्त संसारको निर्माण भएको हो, तर मनुष्य विवेकपूर्वक उसको उपयोग गर्न सक्दैन, त्यसकारण दुःखी हुन्छ।

कुनै एउटा गाउँमा पिउने पानीको बड़ो दुःख थियो। अन्नदानभन्दा पनि जलदान श्रेष्ठ भनिएको छ। त्यसकारणले कुनै एक सेठले रुपियाँ खर्च गरेर जनताको हितार्थ एउटा इनार बनाइदियो। मानिसहरूले जलको उपयोग गर्दै सेठलाई आशीर्वाद दिन लागे।

एक दिनको कुरा हो अकस्मात् खेल्दै-कुदै कुनै केटो इनारमा खसी पानीमा डुबेर मर्‍यो। अति दुःखमा विवेक रहँदैन। त्यो मृतक बालकको बाबुले सेठसँग झगड़ा गर्न थाल्यो। उसलाई गाली गर्न लाग्यो र भन्यो यदि सेठले इनार नबनाएको भए मेरो छोराको ज्यान जाँदैन थियो। अब तपाईं स्वयं सोच्नुहोस् के सेठले कुनै व्यक्तिको छोरालाई मार्न इनार बनाएको थियो ? यस्तो परोपकारी काम गरेवापत सारा गाउँ उसको प्रशंसा गर्दथे र आभारी थिए। जुन केटो मरेको थियो, यो कुरा राम्रो चाहिँ भएन, तर यसमा सेठको के दोष ?

यो संसार पनि एउटा इनारै हो, तर कसैलाई डुबाउन भनी इनारको निर्माण भएको चाहिँ होइन।

प्रह्लादजी भन्न थाल्नुभयो—'प्रभु, तपाईंलाई अपराधी कसले भन्दछ तर यी विषयहरूलाई सुन्दर बनाएर ठीक गर्नुभएन। त्यसकारण अब तपाईंले हामीलाई यही संझाउनुहोस् जसले यस संसारका विषयहरूमा मन फँस्न नपाओस्, यसका निमित्त हामीले के गर्ने ?'

नृसिंह भगवान् भन्न थाल्नुभयो—'यस जगत्लाई सुखी तुल्याउनका निमित्त मैले दुइ अमृत बनाएको छु। तिनको पान गर्नाले तिम्रो मन विषयतर्फ आकर्षित हुँदैन र इन्द्रियहरूले पनि तिमीलाई सताउने छैनन्। यी दुइ अमृत हुन् : ( १ ) नामामृत र ( २ ) कथामृत।'

जहिले पनि मनमा विषयका पापको प्रवेश होस्, तब कथामृत र नामामृतको आश्रय लेऊ। मनुष्यलाई विषयले सताउन नसकोस्, यस हेतुले मैले यी दुइ अमृत बनाएको हुँ। तिनको नित्य सेवन गर।

स्वर्गमा जो अमृत मिल्दछ, त्यसलाई पिउनाले सुख प्राप्त हुन्छ तर भन्दछन् त्यसले पुण्यको पनि क्षय हुन्छ। कथामृत स्वर्गको त्यो अमृतभन्दा पनि श्रेष्ठ हो। यसलाई पिउनाले पापको क्षय हुन्छ। लीला-कथा र नाउँ अमृत हुन्। यिनले पापलाई भस्मीभूत गरेर जीवनलाई शुद्ध गर्दछन्।

मृत्यु सबैलाई भक्षण गर्दछ तर श्री रामचन्द्र मृत्युभक्षकको पनि काल हुनुहुन्छ। रावणलाई मार्नका निमित्त रामचन्द्रले यी सब किन गर्नुपर्‍यो ? रावणको हत्याका निमित्त रामलाई यस्तो लीला किन रच्नुपर्‍यो ? राम चाहिँ कालका पनि काल हुनुहुन्छ, ईश्वर तर अनन्त शक्तिशाली हुनुहुन्छ। उहाँले सङ्कल्पमात्रले रावणलाई मार्न सक्नु हुन्थ्यो, तर रामचन्द्रले यी सारा लीलाहरू यस निमित्त रच्नुभएको थियो सारा जगतले रामायणको पाठ गरून्। 'रामायण श्रवणका समय पनि मानिसले जगत्लाई बिर्सने छन्।' उहाँले रावणको हत्या गर्न निमित्त होइन तर कलियुगका मानिसहरूलाई लीला श्रवणमा तल्लीन गराउनका निमित्त जन्म लिएको थियो। लीला-कथा मोक्षदाता हो।

प्रत्येक इन्द्रियलाई प्रेमपूर्वक आफूपट्टि तानेर गोपिनीहरूलाई परमानन्दको दान दिनका निमित्त श्रीकृष्णको लीला भयो। उहाँ चाहनुहुन्थ्यो गोपिनीहरूले मेरो लीला सुनून्, देखून् र जगत्लाई बिर्सिदिऊन्। उहाँले गोपिनीहरूलाई परमधाम जानुभन्दा अघि परमानन्दको दान दिनुभयो। रामलीला कामविजयको लीला हो। श्रीकृष्ण भगवान्को कामदेव उपरको यो विजय हो। जगत्का सारा विषयहरूलाई मले बिर्सिदियो भने मनको निरोध हुन्छ र त्यो ईश्वरमा लीन भइहाल्नेछ। कृष्णलीलाको प्रयोजन यही हो जसले मनुष्यले कुनै पनि तरिकाबाट जगत्लाई बिर्सिदेवोस् र श्रीकृष्णलीलामा तन्मय भइहालोस्। गोपिनीहरू यस्तै किसिमबाट सबै लीलाहरूको श्रवण-स्मरण गर्दै प्रभुमा लीन भएका थिए।

नामब्रह्म र नादब्रह्म एक हुन्छन् अनि परब्रह्मको प्राकट्य हुन्छ। नामामृत जे पनि गर्नसक्छ, यसका निमित्त के अशक्य छ र ?

श्री राम नाम जपनसे सारे कष्ट जायें,<br>
श्री राम जपनसे सारा शुभ हो जाये।<br>
श्री राम रसना रटे जो सदा,<br>
श्री राम राममय विश्व सारा सुहाये।

मीराबाईले भनेकी छन्—

मेरो मन राम ही राम रटै रे,
रामनाम जप लीजै प्राणी, कोटिक पाप कटै रे।

राम जप्नामा, राम भजनमा त्यस्तो कुनै कुराको पनि आवश्यकता छैन। मीराबाईले एउटा भजनमा भनेकी छन्—मेरा पास कुनै साधन छैन। म बिलकुल साधनरहित छु। मेरा निमित्त बस् एउटा तिम्रो नाउँ मात्र सबै कुरा छ—

डंको नाम सूरतकी डोरी, कलियाँ प्रेम चढ़ाऊँ ए माय,
प्रेमको ढोल बन्यो अति भारी, मगन होय गुण गाऊँ ए माय।
तन करूँ ताल मन करूँ ढपली, सोती सुरत जगाऊँ ए माय,
कीर्तन करूँ मैं प्रीतम आगे, सो अमरापुर पाऊँ ए माय।
मो अवला पर कृपा की जो, गुण गोविन्दका गाऊँ ए माय,
मीरा के प्रभु गिरधर नागर रज चरणों की पाऊँ ए माय।
राम नाम मेरे मन बसियो राम रसियो रिझाऊँ ए माय,
राम रसियो रिझाऊँ ए माय।

यी दुइ अमृत मैले निःशुल्क दिएको छु। यी दुइ अमृत श्रेष्ठ छन्। कृष्णाको नाउँ स्वर्गको अमृतभन्दा पनि ठूलो छ। देव स्वर्गको अमृत पान गर्छन् र पनि उनलाई शान्ति छैन। कथामृतको पानले विषय शान्त हुन्छन्। नामामृत र कथामृतको पान गर। जब जब मनमा पाप देखा पर्छन्, आँखाहरूमा विकार आउँछ तब तब यी दुइ अमृतहरूको पान गर। यी पान गर्नाले विषयले तिमीलाई सताउँदैन, भोगी कहिल्यै योगी हुन सक्दैन। कलिकालमा मनुष्य भोगी हो। त्यसकारण यदि मनुष्य योगी बन्ने प्रयत्न गर्छ तापनि उसले सफलता तुरुन्त पाउँदैन। यसका निमित्त नामामृत र कथामृत मात्र सरल उपाय हुन्।

कथामृत र नामामृतको पानले संसार सुखदायी र ब्रह्मरूप लाग्दछ।

अज्ञानीलाई संसार दुःखरूप लाग्दछ किनभने उसको दृष्टिमा विकार छ ज्ञानीलाई संसार सुखरूप छ, किनभने उसको दृष्टि ब्रह्ममय हुन्छ।

प्रह्लाद भन्नुहुन्छ—'प्रभु, तपाईंले दुइ अमृत बनाउनुभएको छ, त्यो ठीक छ, तर मलाई यसले केही लाभ भएन। म जान्दछु भगवान्को कथा र नाम अमृत हुन् तर मेरो मन यस कथा-कीर्तनमा स्थिर हुनै पाउँदैन।'

कीर्तनविना कथा परिपूर्ण हुन सक्दैन। कीर्तनविना कथा अपूर्ण छ। अतिशय पापीले कृष्ण कीर्तनबाट आनन्द पाउँदैन। पाप र अभिमानलाई हटाउनका निमित्त कथा सुन्न जानुपर्छ। अभिमान जस्तो शत्रु कोही छैन।

विवाह, मृत्यु र भोजनमा साटासाट ( एकका सट्टामा अर्को व्यक्ति ) चल्न सक्दैन भने भजनमा कसरी चल्न सक्ला ? विवाह, मृत्यु र भोजनको जस्तै भजन पनि स्वयं गर्नुपर्छ।

ज्ञानमात्र निरर्थक छ। जीवनमा ज्ञानलाई जति ज्यादा लागू गराउन सक्यौ त्यति सार्थक हुनेछ। भागवत व्यक्तिलाई मृत्युपछि पनि मुक्ति दिने कुरा गर्दैन। त्यसले तर मृत्युभन्दा पहिल्यै यसै जीवनमा मुक्ति दिन्छ। इन्द्रियहरूका समुदायलाई शुद्ध गर। गो-इन्द्रियहरू र कुल-समुदाय। इन्द्रियहरू शुद्ध भएपछि तिम्रो हृदयमै गोकुल बन्ने छ र त्यसमा परमात्मा विराजमान हुनुहुनेछ।

प्रह्लाद भन्नुहुन्छ—'नाथ, म जान्दछु नामामृत र कथामृतको पानले मन शुद्ध गर्छ र शुद्ध मनलाई जगत् ब्रह्ममय दृष्टिगोचर हुन्छ तर मेरो मन यस्तो विचित्र छ जो अमृतहरूको छिट्टै भर पर्दैन।'

सोचिहेर, के प्रह्लादजीको मन अशुद्ध थियो ? थिएन। उहाँले तर हामीजस्ता साधारण व्यक्तिहरूको कुरा गरिरहनुभएको थियो। यो चाहिँ उहाँले हाम्रो मनलाई भनेको हो।

सांसारिक विषयहरूको चिन्तनबाट हाम्रो मन विकृत भएको छ। त्यसकारण जगत् पनि हामीलाई विकृत जस्तो लाग्छ। सिद्ध ज्ञानीलाई जगत् विकृत होइन तर ब्रह्मरूप देखिन्छ, किनभने तिनीहरूले परमात्माको सतत चिन्तन गर्छन्। साधकलाई पनि जगत् देखिँदैन किनभने ऊ साधनामा लीन भएको हुन्छ।

जो ईश्वरबाट विमुख हुन्छ, त्यसैलाई मात्र जगत् बिग्रिएको छ। नाउँको आश्रय लिनाले मन सुध्रिन्छ। हामीजस्ता साधारण मानवहरूका निमित्त अरू कुनै बाटो छैन। संसारको चिन्तन गर्नाले मन बिग्रिरहेको हुन्छ। श्रीकृष्णको स्वरूपको चिन्तन र स्मरण गर्नाले यो मन सुध्रिन सक्छ।

जब हामी कथा सुन्न बसेका हुन्छौं तब हाम्रो दृष्टि बारम्बार घड़ीपट्टि दगुर्छ। तर जब कुरा गरिरहेका हुन्छौं तब हातमा भएको घड़ी पनि हेर्न नभ्याएर रातको डेढ़ बज्न जान्छ। समयको नाश सर्वस्वको नाश हो। मर्ने बखतमा यदि कुनै लखपतिले पनि भगवान्सङ्ग यो भनोस् म लाख दुइ लाख रुपियाँ दिन तयार छु मलाई अरू दुइ दिन दिनुहोस् भन्दा के भगवान्ले त्यसको आयु बढ़ाइदिनुहोला ? बढ़ाउनुहुन्न किनभने भगवान् समयको दान दिनमा बड़ो कृपण हुनुहुन्छ।

यो मन बड़ो दुष्ट छ, कामातुर छ, सदा कामसुखको चिन्तन गरिरहन्छ। विषयोपभोगको अपेक्षा कामसुखको चिन्तन धेरै खराब हो। मन यस्तो बिग्रिएको हुन्छ जो कथामा स्थिरै रहँदैन। हर्ष, शोक र भयले युक्त मन अलिकति पनि फायदा हुने भयो भने खुशीले उफ्रिन थाल्छ र अलिकति नोक्सान भयो भने पनि आँसु चुहाउन थाल्दछ।

कुनै ठाउँमा यस्तो लेखेको छैन जो भगवान्‌का कृपाले धन पाइन्छ। भागवत्‌को आठौं स्कन्धमा भनिएको छ म ( प्रभु ) जसमाथि कृपा गर्छु, त्यसको सारा सम्पत्तिको नाश गर्दछु। भगवत्कृपाको फल धन होइन। धन तर प्रारब्धले पाइन्छ। भगवान्‌को कृपाले चाहिँ मनको शुद्धि हुन्छ। भगवान् जसमाथि कृपा गर्नुहुन्छ त्यसलाई सम्पत्ति होइन दरिद्रता दिनुहुन्छ। प्रभुको कृपा भएमा तब सत्कर्म गर्ने इच्छा हुन्छ।

जीव यति दुष्ट छ जो साधारण आनन्दबाट पनि पागल हुन्छ र अलिकता दुःख परेमा रुन थाल्छ।

संसारमा पाप छ भनेर यस्तो कल्पना कहिल्यै नगर। तिमीलाई संसारको होइन, आफ्नो मनभित्र लुकिरहेको पापको उत्तर दिनुपर्नेछ। तिमीले जगत्‌को पाप दूर गर्न सक्तैनौ।

प्रह्लाद भन्नुहुन्छ—मेरो मन असाधु छ। मेरो मन कामातुर छ। तपाईंको कथामा तपाईंको नाम स्मरणमा त्यो स्थिर हुन पाउँदैन। कृपया तपाईंले मेरो मनलाई सुधारिदिनुहोस्।

अपकारको बदला उपकार गरेर दिनु साधुता हो।

भगवत्सेवाबाट विमुख व्यक्तिलाई देखेर मलाई दुःख लाग्छ। संसारका प्रायः सबै मानिस जति श्रम गरेर कष्ट उठाउँछन्, त्यत्तिकै श्रम यदि भगवत्सेवामा गरे भने ती सुखी भइहाल्दछन्।

यो संसारको सुख कस्तो हो ? संसारको सुख लुतो कन्याए जस्तो हो। मैथुनसुख र अरू अन्य इन्द्रियसुख पनि यसै कोटिको हो। जबसम्म लुतो कन्याउँदै रहन्छौ तबसम्म शान्ति भएको जस्तो लाग्छ तर नडको विषले लुतो बढ्दै जानेछ र ज्यादा दुःख पनि दिनेछ। यो सबै सुख तुच्छ र दुःखदायी हो।

यन्मैथुनादिगृहमेधिसुखं हि तत् तुच्छं कण्डूयनेन करयोरिव दुःखम्।

गीतामा पनि भनेको छ—

येहि संस्पर्शजा भोगा दुःखयोनय एवते।
आद्यन्तवन्तः कौन्तेय न तेषु रमते बुधः॥

( गी० ५-२२ )

इन्द्रियहरू तथा विषयहरूका संयोगबाट उत्पन्न भएका भोग निःसन्देह दुःखका कारण हुन्। ती आदि र अन्त मुक्त अर्थात् अनित्य छन् अतः हे अर्जुन, ज्ञानी मानिस यी सुखहरूमा कहिल्यै अल्मलिँदैनन्। तिनीहरू यस्तो सुखको इच्छा पनि गर्दैनन्।

जब तिमीलाई इन्द्रियहरूले लोभ्याउन थाल्दछन्, त्यस वेला यदि मनलाई शान्त राख्यौ र सावधान भयौ भने तिमी सुखी हुन सक्छौ।

प्रह्लाद प्रार्थना गर्न थाल्नुभयो—'हे नाथ ! म यी सबै झन्झटहरूबाट थाकिसकेको छु।'

तब प्रभुले भन्नुभयो—'हिँड़ ! म तिमीलाई आफ्नो धाममा लैजान्छु।'

प्रह्लाद—'म त्यहाँ एक्लै जान सक्दिनँ। म यति स्वार्थी छैन जो आफ्ना यी बालमित्रलाई छोड़ेर तपाईंसँग एक्लै जाऊँ ? म एक्लै मुक्ति पाउन चाहन्नँ।'

प्रह्लादजी आफ्ना सहपाठी असुरबालकहरूको पनि विचार गर्नुहुन्छ। उहाँ सबैको मुक्ति चाहनुहुन्छ।

आफ्नो कल्याणार्थ मात्र वनमा साधन गर्ने मानिस स्वार्थी हो। एकान्तमा तप, साधन, भजन, जप गर्ने मानिस मात्र आफू स्वयंको उद्धार गर्न पाउँछ। आफ्नो स्वयंको मात्र उद्धार गर्ने मानिस स्वार्थी हो।

आफ्ना संसर्गमा, साथमा जो कोही आए, त्यसको पनि उद्धार गर्नेलाई सच्चा वैष्णव भन्छन्।

आफ्नी जन्मभूमिलाई, जगत्को अन्य कुनै पनि जीवलाई सन्मार्गका तर्फ नलैजाने मानिसले एकान्तमा बसेर तप ध्यान गर्दै रहोस् तापनि जत्तिसुकै ज्ञानी किन नहोस् त्यो स्वार्थी मात्र कहलिन्छ।

त्यसकारण हे प्रभु ! म स्वार्थी होइन। म तपाईंको धाममा आएँभने यी सबै मित्रहरूलाई लिएर आउनेछु।

'नाथ, म तपाईंको के स्तुति गर्न सक्छु ? वेद पनि तपाईंको स्तुति ठीकसँग गर्न सक्तैनन् भने म एउटा बालक मात्रै हुँ।'

अनन्य भक्तिका ६ साधन छन्—( १ ) प्रार्थना, ( २ ) सेवापूजा, ( ३ ) स्तुति, ( ४ ) वन्दन ( पापलाई संझिँदै वन्दन ), ( ५ ) स्मरण ( व्यावहारिक कामकाज गर्दै पनि प्रभुको स्मरण ) र ( ६ ) कथाश्रवण। यी ६ साधनहरूद्वारा परमहंसगति पाइन्छ। अलिकति साधन गर। साधनका विना अनुभव हुँदैन। यी साधनहरूको आश्रय लिने मानिसले प्रभुको चरण भेट्टाउँछ।

स्तुतिको अन्तिम श्लोकमा प्रह्लादजीले यी ६ साधनहरू बताउनुभएको छ। जसले यी साधनहरूलाई कार्यान्वित गर्दछ, त्यसलाई परमात्माको चरणमा अनन्य भक्ति प्राप्त हुन्छ।

( १ ) प्रार्थना—प्रातःकालमा आँखा उघारेपछि भगवान्को स्मरण गर, प्रार्थना गर। करदर्शन पनि गर र पृथ्वीमातालाई प्रणाम गर।

बिहानै कर-दर्शन गर अर्थात् हातहरूलाई हेरेर विचार गर जो यी हातहरूबाट आज पवित्र कर्म मात्र गर्नेछु जसबाट परमात्मालाई मेरो घरमा आउने इच्छा होस्। हात क्रियाशक्तिको प्रतीक हो, यी हातहरूबाट म सत्कर्म मात्र गर्नेछु।

**शिवो भूत्वा शिवं यजेत्।**

कल्याणरूप बनेर त्यस कल्याणको पूजा गर।

प्रातःकालमा यस श्लोकको पाठ गर—

कराग्रे वसते लक्ष्मीः करमूले सरस्वती।
करमध्ये तु गोविन्दः प्रभाते कर दर्शनम्॥

आजकल प्रातःकाल एकदम ओछ्यान छोड़ेपछि करदर्शनको बदलामा कप दर्शन गर्न लागिएको छ। बिउँझनासाथ मानिस चियाको कप मुखमा हाल्छन् र चियाका साथ बिस्कुट खाएपछि मात्र अन्य कामहरूमा लाग्दछन्।

प्रभातमा ओछ्यान छोड्नुभन्दा अघि परमात्मालाई वन्दना गर। उनीसँग प्रार्थना गर म तपाईंको हुँ र तपाईं मेरो हुनुहुन्छ। मेरो हृदयमा राज होस् र मेरा शरीर रथको सञ्चालन गरिदिनुहोस्।

प्रातःकालमा दीनतापूर्वक प्रभुसँग प्रार्थना गर—'हे कृष्ण ! तपाईंले जसरी अर्जुनको रथ चलाइदिनुभएको थियो त्यस्तै किसिमबाट मेरो शरीररथको स्वामी बनिदिनुहोस्। भौंतारिने इन्द्रियहरूलाई रोकिदिनुहोस्।

मेरा इन्द्रियरूपी घोड़ालाई सम्हालिदिनुहोस्। मेरो रक्षा गरिदिनुहोस्।'

यदि श्रीकृष्ण तिम्रो शरीररथको सारथी बन्नुभो भने रथ तोकिएको ठाउँमा पुग्नेछ तर तिम्रो मन सारथी भयो भने तब रथ खाड़लमा खस्नेछ।

भगवान् जीवसँग भन्नुहुन्छ—'यदि तिमी आफ्नो रथ मेरा जिम्मा दिन्छौ भने तिम्रो इन्द्रियरूपी घोड़ालाई नियन्त्रित गर्नेछु, सम्हाल्नेछु र दिव्य मार्गतिर तिमीलाई लैजानेछु।'

जस्ता प्रकारले अर्जुनले आफ्नो रथको लगाम प्रभुका हातमा दिएका थिए सोही प्रकारले तिमीले पनि आफ्नो रथको डोरी उहाँको जिम्मा लगायौ भने उहाँले तिम्रो रथ पारि लगिदिनुहुने छ। ( २ ) सेवापूजा—स्नानादिबाट निवृत्त भएर एकान्तमा प्रभुको सेवा र उपासना गर। ( ३ ) स्तुति—'नाथ, तपाईंले जब अजामिलजस्तो पापीको उद्धार गरिदिनुभयो तब फेरि मेरातर्फ किन हेर्नुहुन्न ?' ( ४ ) कीर्तन—स्तुतिका पछि एकान्तमा बसेर प्रभुको नाम कीर्तन गर। आफ्नो कामकाज गर्दा पनि प्रभुलाई स्मरण गर्दै रहू। ( ५ ) कथा श्रवण—प्रभुका प्यारा सच्चा सन्तहरूको सङ्गत गर। उनका श्रीमुखबाट कथा सुन। यदि कथा सुन्न सकेनौ भने रामायण, भागवतको कथाको पाठ गर। प्रेमपूर्वक त्यसको पाठ गर। ( ६ ) स्मरण—समस्त कर्मचारीहरूको समर्पण—राती सुत्नुभन्दा पहिले कर्महरूको विचार गर जो प्रभुलाई मन पर्ने के यस्तो कर्म मेरा हातबाट आज भएको छ। यदि मित्रबाट नकारात्मक उत्तर मिल्यो भने मान त्यो दिन बाँचेर होइन मरेरै बितेको छ। यदि कुनै पाप भइसकेको भए प्रायश्चित गरेर गरिएका सम्पूर्ण कर्महरूको फल परमात्मालाई अर्पित गरिदेऊ।

यी ६ साधनहरूको विधिपूर्वक पालन गर्नाले जीवन सुध्रिन्छ र अनन्य भक्ति प्राप्त हुन्छ।

जसका आँखा स्नेहपूर्ण, हृदय विशाल छ, भगवान्‌लाई त्यो बड़ो प्यारो लाग्छ।

जीवको बानी केही यस्तो छ जो कसैको उपकार ऊ बिर्सिदिन्छ, तर अपकार संझिरहन्छ।

जीवले जे इच्छा गर्छ ती सबै कहिल्यै पूर्ण हुँदैनन्। भगवान् जो चाहनुहुन्छ त्यही हुन्छ। ईश्वरसँग केही पनि नमाग। यदि केही माग्यौ भने त्यो व्यापारजस्तो भइहाल्छ।

नृसिंह स्वामीले प्रह्लादलाई केही वरदान माग भन्नुभयो। प्रह्लाद तर निष्काम भक्त हुनुहुन्थ्यो, त्यसकारण उहाँले कुनै भोगादि माग्नुभएन।

जसले प्रभुको सेवा गर्छ र त्यसको साटोमा केही माग्छ भने तब त्यो बनियाँ हो। भगवान्को भक्ति भावका निमित्त गर्नु छ भोगका निमित्त होइन। भोगार्थ व्यक्ति भक्त हुँदैन, बनियाँ हो। बनियाँ त्यो हो, जो दिन चाहिँ अलिकति दिन्छ तर पाउन भने धेरैको इच्छा गर्छ।

आफ्ना निमित्त भगवान्लाई कहिल्यै दुःख नदेऊ।

नृसिंहस्वामीले भन्नुभयो—'प्रह्लाद, तिमीलाई इच्छा नभए पनि मलाई खुशी तुल्याउनका निमित्त मात्र केही माग।'

प्रह्लाद भन्नुहुन्छ—'प्रभु ! मलाई यस्तो कृपा गर्नुहोस् जो संसारको कुनै पनि सुख पाउने विचार पनि मेरा मनमा नआओस्। कुनै प्रकारको इन्द्रिय-सुखको भोगैषणा मेरा मनमा नजागोस्, यस्तो गरिदिनुहोस्।'

**कामानां हृद्यसंरोहं भवतस्तु वृणे वरम्।**

मेरा हृदयमा कहिल्यै कुनै किसिमको कामनाको बीज पनि अंकुरित नहोस्, मेरा हृदयमा कुनै पनि कामनाको अंकुर नरहोस्, यस्तो वरदान पाऊँ।

प्रह्लादले भगवान्सँग जो मागेका थिए त्यही तिमी पनि माग। प्रह्लादले 'कामस्य' होइन 'कामानाम्' भनेका थिए। इन्द्रियसुखको मनमा इच्छा पनि जगाउनु भएन। यस्तो सादा जीवन बिताऊ जसले मनमा कुनै सुखको वासना पनि नजागोस्। वासना खराब हो। वासनाका अनुसार विषयसुखको उपभोग नगरेमा मन व्यग्रत हुन्छ, तर वासनालाई तृप्त गरेमा त्यो अरू धेरै दन्किन्छ।

सांसारिक सुखको उपभोग गर्ने इच्छा चाहिँ महादुःख हो। जसलाई कुनै पनि सुखको इच्छा हुँदैन, त्यो मात्र सच्चा सुखी हो, सांसारिक सुखको इच्छा कहिल्यै हुन नपाओस्, यस्तो संझनु पनि सुख हो। सुखको इच्छा हुनासाथ मनुष्यको बुद्धि-शक्ति क्षीण हुनथाल्छ। मनमा सदा भक्तिको अंकुश राख।

प्रह्लादले वरदान पनि मागे तर कस्तो ? वासनाको जागृतिले तेजको नाश गर्छ, त्यसकारण यस्तो कृपा गर्नुहोस् जसले मेरो मनमा वासना जाग्दै नजागोस्। गीतामा भनेको छ—'सबै काम्य कर्महरूको र सबै इच्छाहरूको त्याग मात्र संन्यास हो, यस्तो महात्माहरू भन्दछन्।'

**काम्यानां कर्मणां न्यासं संन्यासं कवयो विदुः।**

जीव निष्काम हुन्छ तब उसको जीवभाव नष्ट हुन्छ र फेरि भगवान्का साथ एक हुन्छ। जीव ईश्वरस्वरूप बन्दछ। पुण्य पनि मुक्तिबाधक छ। विवेकद्वारा पुण्यहरूको क्षय गर। मेरो स्वरूपको

प्रह्लाद तिमी अशांत नहोऊ। तिम्रो पिताको उद्धार भइसकेको छ र साथ-साथै तिम्रा एक्काईस पुस्ताहरू पवित्र भइसकेका छन्।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

'राजन्, अब तिमीलाई विश्वास भयो होला भगवान्को दण्डमा पनि करुणा हुन्छ। भगवान् जुन दैत्यलाई मार्नु हुन्छ उसको उद्धार पनि गर्नु हुन्छ।'

निष्काम भगवान्को कामभावले चिन्तन गर्ने गोपिनीहरू भगवान्मय बने, शिशुपाल क्रोधाभावले प्रभुको चिन्तन गर्दथ्यो र पनि त्यो प्रभुमय भयो। कंस पनि भयले प्रभुको चिन्तन गर्दै प्रभुमय भयो।

भगवान्को ध्यानमा गोपिनीहरू कामभावले, शिशुपाल वैर-द्वेष भावले, कंस भयले तन्मय भएको थियो। अटल वैर-भाव, वैरविहीन भक्ति-भाव, भय, स्नेह या अन्य कुनै पनि भाव-कामनाले भगवान्मा पूर्णतः मन लगाउनुपर्छ। भगवान्को दृष्टिबाट यी भावहरूमा कुनै भेद छैन।

कुरा यति हो कुनै पनि किसिमबाट भगवान्मा तन्मयता होस्।

भगवान्का द्वारपाल जय र विजयका तीन अवतार भएका थिए—( १ ) हिरण्याक्ष र हिरण्यकशिपु—यो लोभको अवतार थियो, ( २ ) रावण र कुम्भकर्ण—यो काम र प्रमादको अवतार थियो र ( ३ ) शिशुपाल र दन्तवक्र—यो क्रोध र अभिमानको अवतार थियो।

प्रह्लादजीले आफ्नो पिताको मृतदेहको अग्नि-संस्कार गर्नुभयो। ब्रह्माजीले प्रह्लादको राज्याभिषेक गर्नुभयो। प्रह्लादले नृसिंह स्वामीलाई प्रणाम गर्नुभयो, नृसिंह स्वामी प्रसन्न हुनुभयो।

नारदजीले प्रेमपूर्वक प्रह्लादको चरित्रकथा धर्मराजलाई सुनाउनुभयो र पनि नारदजीले धर्मराजको मुखमा ग्लानि छाएको देख्नुभयो। अझपनि धर्मराज किन उदास हुनुहुन्छ भनी नारदजी सोचमा डुब्नुभयो। के कथाको भनाइमा कुनै क्षति भयो कि ? किन कथाबाट आनन्दित नहुनु भएको।

धर्मराजलाई नारदजीले सोध्नुभयो—'तिम्रो मुखमा आनन्द देखिँदैन, किन हो ? तिमीलाई केको पीर छ ?'

धर्मराज भन्नुहुन्छ—पाँच वर्षको प्रह्लादको ज्ञान, वैराग्य र प्रेमलाई हेर। धन्य छन् प्रह्लाद र उनको बालकपन अनि उनको प्रेम, जुन कारणले प्रभु स्तम्भबाट प्रकट हुनुभयो। म पचपन्न वर्षको भैसकें र पनि एक पटक प्रभुको दर्शन गर्नसकेको होइन। मेरो जीवन पशुजस्तै बित्यो। धनका पछि दगुरें, भोक लागे खानेकुरा खाएँ, निद्रा लागे सुतें, वासना जागे कामान्ध भएँ। अवतार मानिसको पाएको छु र पनि प्रभुहितार्थ एउटा पनि सत्कर्म गरिनँ। धिक्कार छ मलाई। मेरो जीवन कुकुरको झैं बित्यो। म अझ पनि प्रभुमा लीन हुन सकिनँ, प्रभुप्रेममा पागल हुन सकिनँ, मलाई अहिलेसम्म भगवान् भेटिनुभएको छैन, जबकि ती पाँच वर्षका प्रह्लादले भगवान्लाई पाइसकेका थिए।

निरन्तर ध्यान गर। पाप फलामको सिक्री हो र पुण्य सुवर्णको जंजीर हो। यी दुवैलाई नष्ट गरेर मात्र तिमीले मेरो धाममा आउनु छ।

यो स्तुतिलाई पाठ गरेर मलाई र तिमीलाई जसले संझना गर्ला त्यो कर्मबन्धनबाट मुक्त हुनेछ।

प्रह्लाद—'नाथ, यस्तो कृपा गर्नुहोस् जसले मेरा पिताको पनि दुर्गति हुन नपाओस्।' नृसिंह 'तिम्रो पितालाई सद्‌गति दिने सामर्थ्य ममा छैन। तिम्रा सत्कर्महरूका प्रतापले मात्र तिम्रो पिताको सद्‌गति हुनेछ। तिमी जस्ता पुत्रले एक्काईस पुस्ताको उद्धार हुन्छ—आमा पक्षका सात, बाबु पक्षका सात र ससुरा पक्षका सात।'

प्रह्लाद, आजसम्म मैले रावण-शिशुपाल या अन्य कुनै दैत्यलाई आफ्नो काखमा बसाएको छैन। तिमी जस्तो भक्तले पिताको पनि उद्धार गर्छौ, यसमा कुनै सन्देह छैन।

आमा-बाबु दुराचारी हुन् र यदि छोरो सदाचारी छ भने उनको पनि उद्धार हुन्छ। तर यदि आमा-बाबु सदाचारी हुन् र पुत्र दुराचारी भयो भने उनको उद्धार हुँदैन, दुर्गति हुन्छ।

एक जोड़ी हाँस आनन्दसाथ बस्थे। हँसिनी खूब राम्री थिई। एकपटक घुम्दै-फिर्दै जाँदा साँझ पर्‍यो र ती एउटा रूखमा बसे। त्यहाँ एउटा कागको गुँड़ थियो। हाँसले कागसँग रातीका निमित्त बास माग्यो। हँसिनीको सुन्दरतालाई देखेर कागको मति भ्रष्ट भयो।

शास्त्रमा भनेको छ जो व्यक्ति आफ्ना आँखाले पाप गर्छ त्यसलाई आगामी जन्ममा काग बन्नुपर्छ।

कागले हाँस-हँसिनीलाई रातभर बस्न दियो। भोलिपल्ट तिनीहरू हिंड्न आँटेका थिए कागले हँसिनीलाई रोक्न लाग्यो। हाँसले भन्यो—'हँसिनी मेरी हो' तर उता काग पनि मेरी भन्न थाल्यो। अन्तमा दुवै न्याय माग्नका निमित्त न्यायाधीशनजिक गए।

न्यायाधीशले भने—'म दुवै थरीको कुरा सुनेर मात्र निर्णय गर्छु।' त्यो काग बड़ो चलाख थियो। काग पितृदूत मानिन्छ। त्यसकारण ऊ न्यायाधीशको घरमा गएर भन्न थाल्यो तिम्रा माता-पिता कुन योनीमा छन् त्यो म जान्दछु। त्यसकारण मेरो काम गरिदियौ भने म तिम्रो काम गरिदिनेछु। तिमी हँसिनी मलाई दिलाइदेऊ र म तिमीलाई यो भनिदिनेछु कि तिम्रा माता-पिता कुनचाहिँ योनीमा छन्। न्यायाधीशले कागको कुरा सुन्यो। त्यसले भोलिपल्ट न्याय गर्दै भन्यो—'हँसिनी उसकै हो जो उड्दै अगाड़ि पुग्छ।' हाँसको अपेक्षा काग ज्यादा गतिले उड्दछ। काग उड्दै हँसिनीको अगाड़ि आइपुग्यो तब न्यायाधीशले हँसिनी उसैको जिम्मा लाइदियो।

अब न्यायाधीशले कागसँग आफ्नो आमा-बाबुका विषयमा सोध्यो। कागले उसलाई एउटा फोहोर ढिस्को नजिक लगेर भन्यो—'यी दुइ जन्तु तिम्रै माता-पिता हुन्।'

अन्यायी पुत्रका माता-पिताको यस्तै दुर्गति हुन्छ।

बाबुको शिरमा बड़ो जिम्मेदारी हुन्छ, यदि उसले आफ्नो पुत्रलाई कुसंस्कारी बनायो भने त्यसकै पुत्र वैरी बन्दछ।

मलाई जगत्मा प्रतिष्ठा-मान चाहिँ मिल्यो तर भगवान्लाई पाउन सकिनँ त्यसकारण उदास छु।

भक्तिको विना, भगवान्को दर्शन विना मेरो जीवन वृथा नै बित्यो। यसै कारणले मलाई दुःख छ। मैले त्यसोत धेरै गरें तर जे गर्नुपर्थ्यो त्यही चाहिँ गरिनँ। मैले भगवान्लाई केही पनि गरिनँ।

**शरीरं सुरूपं नवीनं कलत्रं धनं मेरुतुल्यं यशश्चारुचित्रम्।**
**हरिरंध्रिपद्मे मनश्चेन्नलग्नं ततः किं ततः किं ततः किं ततः किं॥**

सुन्दर शरीर, नयाँ पत्नी, मेरु पर्वत जति धन र पुष्कल कीर्ति पनि होस् तर मन प्रभुचरणमा लागेको छैन भने ती सबले के लाभ ? यसले के भयो ? के पाइयो ? केही पनि भएन।

जगत्को प्रतिष्ठा, धन या विद्वत्ता अन्तकालमा केही काम आउँदैन।

जो विद्या अन्तकालमा निरर्थक र निरुपयोगी नै रह्यो भने त्यसले लाभ चाहिँ के हुने ?

एक पटक एउटा नाउमा केही विद्वान् सुधारक यात्रा गरिरहेका थिए। कुराकुरामै तिनीहरूले माझीलाई सोधे—'तिमीले कतिसम्म पढेलेखेका छौ ?'

माझी—'कस्तो पढाइ र कस्तो लेखाइ ? म केवल नाउ चलाउन जान्दछु।'

विद्वान्—'तिमीलाई इतिहासको केही जानकारी छ के ? इङ्गलैण्डमा कति एडवर्ड भए ?'

नाविक—'म इतिहास जान्दिनँ।'

पण्डित—'त्यसो भए तिम्रो एक चौथाई जिन्दगी सित्थैमा बित्यो। के तिमीलाई भूगोलको ज्ञान छ ? लन्डन शहरको आबादी कति छ ?'

नाविक—'म भूगोल पनि जान्दिनँ।'

पण्डित—'ओहो ! तब तिम्रो आधी जिन्दगी त्यसै खेर गयो। तिमीलाई साहित्यको ज्ञान छ ? शेक्सपियरको कुनचाहिँ नाटक तिमीले पढ़ेका छौ ?'

माझी—'मैले साहित्य पनि पढ़ेको छैन।'

यत्तिकै नदीमा आँधी आयो र नाउ यताउति गेरेर हल्लन लाग्यो।

माझीले ती विद्वान्हरूसँग सोध्यो—'महाराज, विचार गर्दा मेरो नाउ पानीमा डुब्लाजस्तो लाग्छ। के तपाईंहरू पौड़ी खेल्न जान्नुहुन्छ ?'

सबै पण्डितहरूले भने—'अहँ ! हामी पौड़न जान्दैनौं।'

माझी—'हरि हर ! तपाईंहरू पौडिन जान्नुहुन्नभने, तपाईंहरूको सारा जिन्दगी अहिल्यै पानीमा डुब्ने भयो।'

भयो पनि यस्तै, आँधीमा नाउ डुब्यो र तिनका साथ विद्वान् पनि डुबे तर माझी पौड़ी खेल्दै बाहिर निस्कियो।

रामकृष्ण परमहंस यस दृष्टान्तलाई सुनाइरहनुहुन्थ्यो।

संसार पनि एउटा समुद्र हो। यस भवसागरलाई येनकेन प्रकारेण पार गर्नैपर्छ। जुन विद्याले संसारपारि तर्ने कला सिकाउन सक्छ त्यही नै साँचो विद्या हो। भवसागर पौड़नका निमित्त भजन एकमात्र साधन हो। यस भजनरूपी विद्यालाई सिक्नुको साटो सांसारिक विद्या सिकेर पण्डित्याइँको अभिमान गर्ने व्यक्ति यस सागरमा डुबिजान्छ।

जुन विद्याले अन्तकालमा परमात्माको दर्शन गराउन सक्तैन त्यो विद्या केही होइन।

संयोगमा दोष-दर्शन र वियोगमा गुण-दर्शन जीवनको स्वभाव हो।

धर्मराजको सभामा स्वयं कृष्ण भगवान् राज हुन्थ्यो, तर पनि धर्मराज उहाँको स्वरूपदेखि अज्ञात थिए। भगवान् आफ्नो स्वरूप लुकाइरहनु हुन्छ।

कृष्ण भगवान् भन्नुहुन्छ—'म एक नौनीचोर हुँ। जसको मनको म चोरी गर्दछु त्यसैले मलाई चिन्नसक्दछ।' कृष्ण गुप्त बस्न खोज्नुहुन्छ।

परमात्मा गुप्त रहन चाहनुहुन्छ, तर जीव प्रकट। ईश्वरले भाँति-भाँतिका फूल, फल आदि नजाने कति वस्तुहरूको सृष्टि गरेर पनि तिनमा कहीं आफ्नु नाम लेखिएको छैन। मनुष्यले तर घरदेखि लिएर औंठी जस्ता साना वस्तुहरूमा र आफ्नो शरीरमा पनि नाउँ लेखिदिन्छ। हे भाइ ! शरीरमा पनि नाउँ किन लेख्दछौ ?, त्यसलाई कसले लैजान्छ ? घरमा नाउँ किन लेख्छौ ? मनोहर निवास। तर यो मनोहर कति दिन बाँच्ने हो। घरमा नाउँ लेख्नु छ भने राम निवास, कृष्णभवन लेख। यी सबै कुरा भगवान्का हुन्। यति हुँदाहुँदै मानव नाम-रूपमा फँसेको छ।

आजकल मानिस सेवा पनि कमाउनका निमित्त मात्र गर्दछन्, पुण्य-लाभका निमित्त होइन। मन्दिरमा कुनै वस्तु दिन्छन् तब त्यसमा पनि पहिले आफ्नो नाउँ लेखिदिन्छन्। याद राख अतिशय प्रसिद्धिले पुण्यको पनि क्षय गरिदिन्छ।

कृष्ण पाण्डवहरूका बीचमा बस्नुहुन्थ्यो र पनि उहाँलाई कसैले चिन्न सक्दैनथे। उहाँलाई चिन्नु पनि क.सरी ? युधिष्ठिरको राजसूय यज्ञको भोजको अवसरमा जूठो टपरी उठाउने जस्तो काम उहाँले गर्नुभएको थियो।

गीता-गायक श्रीकृष्णको यही हो दिव्य कर्मयोग। उहाँले आफ्नो वाणी आफ्नो जीवनमा कार्यान्वित पनि गर्नुभयो।

प्रभुले धर्मराजसित भन्नु भएको थियो—'महाराज तपाईंले आफ्नो यज्ञमा अलिकति काम गर्न मलाई पनि अवसर दिनुहोस्। म जूठो सफा गर्दै रहुँला।' कृष्ण यस्तो काम गर्नुहुन्थ्यो, धर्मराजले मान्नुभएको थियो यी मामाका छोरा हुन् त्यसैले काम गर्दछन्।

ईश्वर स्वयं यस्तो अनुभव गर्दैनन् म ईश्वर हुँ। यदि ईश्वरले यस्तो गरे भने तब उनको ईश्वरत्व नष्ट हुन्छ।

धर्मराजले यो कुरा बिर्सिएका थिए स्वयं श्रीकृष्णका कुरा गरिरहेको छु, त्यसैले उनी भन्दछन् 'भगवान्को दर्शन अहिलेसम्म पाएको छैन।'

नारदजी धर्मराजसँग भन्नुहुन्छ—ती ठूलाठूला मुनिहरू तपाईंका घरमा आएका छन्। उनलाई दक्षिणाको लोभ छैन, यी दुर्वासा र जमदग्नि निःस्पृह छन्।

धर्मराजकहाँ विशाल जनसमुदाय एकत्रितभ एको थियो। त्यसकारण दुर्वासालाई शङ्का थियो कहीं अधर्माचरण नहोस् र यस्तो आशङ्काको कारणले उनी भोजन पनि गर्दैनथे।

श्रीकृष्ण भगवान् दुर्वासालाई ब्रह्मविद्या गुरु मान्नुहुन्छ।

एक दिन रुक्मिणीले कृष्ण भगवान्लाई भन्नुभयो—'नाथ, दुर्वासा तपाईंका गुरु हुनुहुन्छ र बड़ा तपस्वी पनि। किन हामीले यस्ता पवित्र ब्राह्मणलाई भोजन नगराउनु ?'

कृष्ण—'यी टाढ़ै रहून्, त्यही ठीक छ। घरमा आए गड़बड़ गर्नेछन्।

रुक्मिणीले अति आग्रह गरिन्। कृष्ण-रुक्मिणी दुर्वासालाई निम्ता दिन पिण्डारक तीर्थ गए। दुर्वासाले भने—भोजनको कुरा छोड़िदिऊँ। मेरो आशीर्वाद छ तपाईंलाई म क्रोधी छु। कहीँ क्रोधवश केही सराप नदिऊँ।'

रुक्मिणीले ज्यादै आग्रह गर्नाले दुर्वासा आउन तयार भए। रथमा बसे दुर्वासाले उनको परीक्षा गर्ने विचार गरे र कृष्णलाई भने—'म हुँ ब्राह्मण र तिमी हौ क्षत्रिय। के यो योग्य होला हामी दुवै एकै आसनमा बसौं। त्यसकारण यी गोरुहरूलाई हटाएर तिमी स्वयं रथ तान तब म आउँछु।'

कृष्ण र रुक्मिणी रथ तान्न थाले। रुक्मिणी थाकिन् र तिर्खा लाग्यो। उनले भनिन्—'ब्राह्मण बड़ा विचित्र हुन्छन्। म ब्राह्मणको घरमा बस्न चाहन्नँ।' कृष्णले भन्नुभयो अब धेरै बेर छैन, धैर्य गर। तब रुक्मिणीले भनिन्—'म धैर्य गर्न सक्दिनँ र यस प्रदेशमा पनि बस्दिनँ।'

कृष्ण—'होइन, होइन। यस प्रदेशलाई कहिल्यै नछोड्नु, यस गुजरातमा सदा बास गर्नु।' यसैले लक्ष्मीजी गुजरातमा बसिन्।

प्रभुको लीला हो। दुर्वासाको हृदयमा पनि श्रीकृष्ण हुनुहुन्छ। रुक्मिणी पानी खान गइरहेकी थिइन् तब दुर्वासा समाधिबाट बिउँझे। दुर्वासाले क्रोधसँग भने ब्राह्मणलाई भोजन गराउनुअघि तिमी जलपान गरिरहिछौ, त्यसकारण मेरो सराप छ तिमी दुवैको वियोग होस्।' कृष्णले भन्नुभयो—'तपाईंको सराप शिरोपर छ तर तपाईं हाम्रो घर हिँड्नुहोस्।'

दुर्वासाले विचार गरे मैले सराप दिएर अलिकति अनुचित गरें। त्यसकारण उनले भने—'म बाह्र वर्षपछि आएर तिमी दुवैको विवाह गराउनेछु।

नारदजी धर्मराजसँग भन्न लागे—यी ऋषि तिमीकहाँ केही खान वा लिन आएका होइनन्। यी परब्रह्म परमात्माको दर्शनका निमित्त पो आएका हुन्। चिन्तन गरेर पनि उनको ध्यानमा परमात्माको स्वरूप आउन सकेन, त्यसकारण उनी उनको दर्शन गर्नका निमित्त तिम्रो यज्ञमा आएका छन्। यिनलाई दर्शनको लोभ छ।'

राजन्, तिमी प्रह्लादभन्दा पनि ज्यादा भाग्यशाली छौ। परमात्मा तिम्रो नातेदार भएर तिम्रै घरमा बस्नुहुन्छ।

हाम्रा घरमा पनि भगवान् हुनुहुन्छ तर नारदजी जस्ता सन्तद्वारा दृष्टि पाए मात्र उहाँको दर्शन हुन सक्छ।

राजन् तिमी भाग्यशाली छौ परमात्मा तिम्रो सभामा राज भएको छ।

नारदजीको वचन सुनेर धर्मराज राजसभामा चारैतर्फ हेर्न थाले, तर कहीं पनि उनले परमात्मालाई चिन्न सकेनन्। द्वारकानाथलाई देख्थे, तर उनी मेरा मामाका छोरा हुन् भन्थे।

यता कृष्ण सोच्नुहुन्छ नारदजी अब चुप लागिदिए बेस हुन्थ्यो। होइन भने उनले मलाई प्रसिद्ध गरिदिने भए। उहाँले नारदजीलाई भन्नुभयो—'नारद, तिमीले मलाई प्रकट नगर। आफ्नो कथा मात्र पूरा गर।'

नारदजीले भन्नुभयो—'यस सभामा जगत्का जन्मदाता उपस्थित हुनुहुन्छ। ब्रह्माजीले मान्नुभयो नारदजीले मेरो नाउँ घोषित गर्नुहुनेछ र मैले प्रसिद्धि पाउने छु।'

ईश्वरले जीवलाई अपनाओस् तब जीव ईश्वर बन्दछ।

राजन् जगत्द्रष्टा र ब्रह्माका पनि जो पिता हुनुहुन्छ उहाँ यस सभामा बसिरहनु भएको छ।

धर्मराज नारदजीसँग सोध्छन्—'भगवान् कहाँ हुनुहुन्छ? कहाँ हुनुहुन्छ परब्रह्म? मलाई उहाँ किन देखिनुहुन्न।'

अब नारदजीलाई नअटाइसक्नु भयो। आज किन अप्रसन्न नहुनुहोस्, मलाई उहाँलाई प्रसिद्ध गराउनै छ।

नारदजीले श्रीकृष्णप्रति ईशारा गर्दै भन्नु भयो—'अयम् ब्रह्म।' उपनिषद्मा इदम् ब्रह्मका कुराहरू छन् र यहाँ ''अयम् ब्रह्म'' का।

**यूपं नृलोके वत भूरिभागा लोकंपुनाना मुनयोऽभियन्ति।**
**येषां गृहानावसतीति साक्षाद् गूढंपरंब्रह्म मनुष्यलिङ्गम् स वा अयम् ब्रह्म॥**

(भा० ७-१०-४०)

यिनकै दर्शनार्थ यी सारा मुनि यहाँ आएका छन्।

प्रभुले शिर झुकाएर मुख लुकाउनुभयो—'म ब्रह्म होइन। नारद असत्य बोलिरहेछन्।'

नारदजीले भन्नुभयो—'अयम् ब्रह्म।' यहाँलाई असत्य बोल्ने स्वभाव जस्तै छ। भगवान् कहिलेकाहीं लीला गर्दा असत्य बोल्नुहुन्छ। उहाँले बाल्यावस्थामा पनि आफ्नी आमा यशोदासँग एकपटक भन्नुभएको थियो—'नाहंभक्षितवानम्ब एते मिथ्याभि शेषिनः।' मैले माटो खाएकै छैन। यी सबै बालक झूटो बोलिरहेछन्।

आत्मानुभूति कतिपटक भए पनि दृढ़ता आउँदैन। दृढ़ता सद्गुरुकृपाबाट आउँछ।

नारदजीले धर्मराजलाई भगवान् नारायणको दर्शन गराउनुभयो र सारा कुरा खोलेर बताइदिनुभयो।

अब मिश्रवासनाको प्रकरणको आरम्भ भइरहेछ। सातौं स्कन्धको ११ देखि १५ अध्यायमा मिश्रवासनाका कुराहरू छन्।

मनुष्यको वासना मिश्रवासना हो। पहिले म स्वयं उपभोग गर्नेछु र तैपनि यदि केही बाँकी बच्यो भने मात्र अरूलाई दिनेछु ! यही हो मिश्रवासना। सन्तको वासना सद्भावना हो र राक्षसको असद्भावना। दुर्जन जो भन्दछ, त्यो मलाई मन पर्दैन र वैष्णव जो भन्छन्, त्यस्तो हाम्रो जीवन छैन।

प्रह्लादको चरित्र सुनेपछि धर्मराजले नारदजीलाई मनुष्यधर्म संझाउनुहोस् भन्नुभयो।

११ देखि १५ अध्यायसम्म धर्मको कथा छ। प्रथम चार अध्यायमा साधारण धर्म र पाँचदेखि पन्द्र अध्यायसम्म विशिष्ट धर्मको वर्णन छ।

मनुष्यको साँचो मित्र धर्म हो। जब कसैले साथ दिँदैनन् तब धर्मले साथ दिन्छ। चाहे धनसम्पत्ति नष्ट होस्, तर धर्मको नाश हुन दिनुहुन्न। मनुष्य धनलाई मात्र सारा सुखहरूको साधन मान्दछ, तर यो असत्य हो, अज्ञान हो। सबै सुखहरूको साधन धन होइन, धर्म हो। मानव सञ्चालनका निमित्त भगवान्ले जो विधि-विधान बनाउनुभएको छ, त्यही धर्म हो।

आजकलको काइदा कानूनमा कतिपटक परिवर्तन गर्नुपर्छ किनभने यी बनाउनेहरू विलासी छन्। रामराज्यमा वशिष्ठको वचन कानून बन्दथ्यो।

प्रथम साधारण धर्मका तीन लक्षणहरूको वर्णन छ। साधारण धर्म अर्थात् सबको धर्म, मनुष्यमात्रको धर्म।

नारदजी भन्नुहुन्छ—'यस धर्मको कथा बड़ो लामो छ। मैले यसलाई नारायणको मुखबाट सुनेको हुँ। धर्मका तीस लक्षण छन्। प्रथम लक्षण हो सत्य र अन्तिम लक्षण हो आत्मसमर्पण।'

(१) सत्य—धर्मकथाको आरम्भ सत्यबाट हुन्छ र समाप्ति आत्मसमर्पणबाट।

सत्य चाहिँ ईश्वरको स्वरूप हो। धर्मको गति सूक्ष्म छ। असत्यको समान अरू कोही पाप छैन।

सत्य त्यो साधन हो, जसका सहाराले मनुष्य सत्यनारायणमा लीन हुन्छ।

हरिश्चन्द्रले पत्नी बेचेर पनि सत्यको निर्वाह गरेका थिए।

सत्यमा अटल श्रद्धा राख। यथार्थको नाउँ सत्य हो। महाभारतका अनुसार जसबाट सबैको कल्याण हुन सकोस् यस्तो विवेकपूर्ण वचन नै बोल।

**सत्यं भूतिहितं प्रोक्तम्।**

श्रीकृष्णको असत्य वचन पनि सत्य हो, किनभने ती बहुजनहिताय छन्।

महाभारतको युद्धमा द्रोणाचार्यको प्रसङ्गमा श्रीकृष्णलाई असत्य बोल्नुपरेको थियो। द्रोणाचार्य भीषण युद्ध गरिरहनुभएको थियो। उहाँका हातमा जबसम्म शस्त्र थियो, तबसम्म उहाँलाई मार्न असम्भव थियो। के गर्ने ? अश्वत्थामा नामक हात्तीलाई मारेर द्रोणलाई भने— 'उनका पुत्र अश्वत्थामा मारिइए।' द्रोणाचार्यले यो कुरा झूटो माने। उनले सोचे—'श्रीकृष्ण जस्तो पनि झूटो बोल्न सक्छन्, तर धर्मराज कहिल्यै असत्य बोल्दैनन्। म उनीसँग सोधिलिऊँ। उनले युधिष्ठिर नजिक गएर भने—'यदि मेरो पुत्र गै मरेको भए मलाई शस्त्र त्याग गर्नुपर्ला। के साँच्चिनै मेरो पुत्र मारिएको हो ?'

श्रीकृष्णले युधिष्ठिरलाई भनिदिएको थियो भनिदिनु 'अश्वत्थामा हतः'। सत्यं वदको नियम मैले बनाएको हो त्यसकारण यसमा परिवर्तन गर्ने अधिकार मलाई छ। सत्य त्यही हो जसले विवेकद्वारा बोलिनाले सबैको कल्याण होस्। द्रोणाचार्यको शस्त्रत्यागले कौरवहरूको पराजय हुनेछ र पाण्डवहरूलाई राज्य मिल्ने छ। दुर्योधनको हत्याले धेरै पाप हुने छैन, तर यसले स्वयं दुर्योधनको कल्याण हुनेछ।

कसैले प्रश्न गर्ला सबैको कल्याण हुने हो तर द्रोणाचार्यलाई के लाभ हुने थियो ?

द्रोणाचार्य देवसम्पन्न ब्राह्मण हुन्। ब्राह्मणलाई युद्ध गर्ने अधिकार छैन। यदि उसलाई कहिले युद्ध गर्नुपरेछ भने पनि धर्मको रक्षाका निमित्त मात्र गर्नुपर्छ। ब्राह्मण भएर पनि द्रोणाचार्य युद्ध गर्छन् ? त्यसकारण उनको शस्त्रत्यागले उनकै कल्याण हुने हो।

म द्रोणाचार्यलाई नरसंहारको पापकर्मबाट रोक्न चाहन्छु। त्यसकारण मेरो यो आज्ञा हो।

धर्मराजले द्रोणाचार्यलाई सुनाए—'अश्वत्थामा हतः।' तर मधुरोस्वरमा फेरि भने—'नरो वा कुञ्जरो वा।'

धर्मराजको शब्दलाई सुनेर द्रोणाचार्यले शस्त्रहरूलाई त्यागिदिए, श्रीकृष्णले धृष्टद्युम्नलाई द्रोणाचार्यको शिर उड़ाइदिनू भनेर आज्ञा दिनुभयो। उनको मृत्यु भयो र सबैको कल्याण भयो।

( २ ) दया—दया धर्मको दोस्रो लक्षण हो। जहाँसम्म हुन्छ, अरूको भलाइ गर। प्रत्येक दिन सोच के आज मैले कसैको केही काम गरिदिएको छु ? के मैले परमात्मालाई मन पर्ने त्यस्तो कुनै काम गरेको छु ?

तुलसीदासजीले पनि भन्नुभएको छ—

तुलसी दया न छोड़िए जब लग घट में प्रान।

जो साधक यसै जन्ममा ईश्वरको साक्षात्कार गर्न चाहन्छ त्यसले सोची-संझीकन दया गर्नुपर्छ। कहिलेकाहीं दयाभावले भजनमा विक्षेप गर्दछ।

( ३ ) पवित्रता—पवित्रता सबैको धर्म हो। आजकल मानिस शरीरलाई ज्यादै शुद्ध गर्छन्, तर मनलाई शुद्ध राख्दैनन्। मनशुद्धि, चित्तशुद्धि आवश्यक छ। मन मृत्युका पछि पनि सँगसँगै जान्छ। मनका सिवाय अरू कुनै चीज साथमा जाँदैन, त्यसकारण यसलाई पवित्र राख्नुपर्छ।

शरीरको अपेक्षा पाप मनले धेरै हुन्छ। जो मनले पाप गर्छ, त्यसको मन ईश्वरको ध्यानमा स्थिर हुन पाउँदैन। व्यवहारबाट आत्मा यति घुले-मिलेको हुन्छ मनको पापको उसलाई ध्यानसम्म रहँदैन।

( ४ ) तपश्चर्या—विचार, वाणी र व्यवहारलाई शुद्ध राख्नु तपश्चर्या हो।

( ५ ) तितीक्षा—भगवत्कृपाबाट जे पनि दुःख पाइएला, त्यसलाई सहन गर। शत्रुका प्रति सद्‌भाव बनाइराख। तब परमात्मा तिम्रो पक्षमा हुनुहुनेछ र तिम्रो शत्रुलाई दण्ड दिनुहुनेछ।

एउटा महात्मा जप गर्दै गइरहेका थिए। बाटामा कुनै धोबीले सुकाउन भनी लुगा फिँजाएको थियो। ती महात्माको गोड़ा त्यसमा पर्न गयो। धोबीले यो देखेर महात्मालाई लट्ठीले पिट्न लाग्यो।

भगवान्‌ले सोच्नुभयो 'त्यो महात्माले मेरै नाउँ जपिरहेको छ, त्यसकारण मैले त्यसको रक्षा गरिनँ भने मेरो प्रतिष्ठा चाहिँ के हुने होला ?' महात्माका निमित्त भगवान् बैकुण्ठबाट पृथ्वीमा ओर्लिनुभयो।

यता महात्माको सहनशीलताको बाँध टुट्यो। उनले सोचे 'यो धोबीभन्दा म बलियो छु।' उनले धोबीलाई पिट्न भनी लट्ठी उझाए। प्रभुले यो देख्नुभयो तब फर्केर गइहाल्नुभयो।

भगवान् तुरन्तै फर्केर आएको देखेर लक्ष्मीजीले कारण सोध्नुभयो। भगवान्‌ले भन्नुभयो—'अब त्यहाँ महात्मा छैनन् दुइ धोबी लड़िरहेछन्। महात्माले सहनशीलतालाई त्यागेर त्यसै धोबीको जस्तै आचरण गरिरहेछन्। अब मलाई त्यहाँ गर्नु पो के छर ?'

मनुष्य अपमानको कारण त्यसवेला दुःखी हुन्छ जब ऊ अभिमानी हुन्छ। जीवले दीन भएर ईश्वरको चरणमा शरण पर्न गयो भने त्यसमा अपमानको कुनै असर पर्दैन।

सहनशक्ति भनेकै तितीक्षा हो।

( ६ ) अहिंसा—मन, वचन र कायाद्वारा कसैलाई दुःखी नपार्नु अहिंसा हो। सन्त त्यही हो जसको साथमा आउनेको स्वभाव बदलिन्छ, सुध्रिन्छ। ऋषिहरूको आश्रममा हिंस्रक पशु पनि शान्त भइहाल्थे।

( ७ ) ब्रह्मचर्य—शारीरिक ब्रह्मचर्य पालन कति मानिस गर्छन् तर आँखा र मनबाट ब्रह्मचर्यको पालन गर्ने मानिस बहुतै थोरै हुन्छन्। कुनै स्वास्नी मानिसले पुरुषको चिन्तन गर्नु पनि ब्रह्मचर्य भङ्ग गर्नु हो। कामभावको गीत सुन्नु पनि ब्रह्मचर्य भङ्ग हो। ब्रह्मचर्य मनलाई स्थिर गर्ने साधन हो।

( ८ ) त्याग—केही कुरा त्याग गर्नु धर्म हो।

( ९ ) स्वाध्याय—सद्‌ग्रन्थको चिन्तन, मनन गर्नु स्वाध्याय हो, जुन सबैको धर्म हो।

( १० ) आर्जवम्—स्वभावलाई सरल राख्नु पनि धर्म हो।

( ११ ) सन्तोष—ईश्वरले जे-जति दिएको छ, त्यसबाट सन्तुष्ट हुने व्यक्ति श्रीमन्त हो र असन्तुष्ट रहने दरिद्र हो।

एउटा माग्नेले बाटामा रत्न जड़ेको औंठी फेला पारेछ। उसेले विचार गरेछ जो मभन्दा पनि गरीब होला त्यसलाई यो औंठी दिनेछु। जाँदा-जाँदा एक ठाउँमा उसले यस्तो देख्यो एउटा पाँचवटा बङ्गलाको मालिक छैटौं बङ्गला बनाउन थालेको रहेछ र ज्यामीहरूसङ्ग पैसाको कुरामा झगड़ा गरिरहेछ। काम पूरा गराउँछ, तर ज्याला पूरा दिँदैन। त्यस माग्नेले त्यसलाई औंठी दियो। धनी भन्न थाल्यो—'मसँग धेरै कुरा छन्, म भिक्षा माग्ने होइन। यो औंठी मलाई किन दिइरहेको तैंले ?'

तब त्यस माग्नेले भन्यो—'यदि तपाईंसँग सबैथोक छ भने फेरि ज्यामीहरूसँग किन झगड़ा गरिरहनुभएको, लोभ किन गर्नुहुन्छ ? तपाईं सन्तोषी हुनुहुँदो रहेनछ। त्यसकारण माग्नेनै हुनुहुँदो रहेछ।'

अब तपाईं विचार गर्नुहोस् सच्चा माग्ने को भयो र सच्चा धनी को थियो।

( १२ ) समदृष्टि—सबैमा सबैका प्रति समदृष्टिले हेर्नु सबैको धर्म हो। कुनै कारणवश व्यावहारिक विषमता गर्नुपरे तापनि भावनात्मक विषमता कहिल्यै हुनुहुन्न।

( १३ ) मौन—विना कारण, व्यर्थ केही पनि नबोल्नु मौन हो र यो पनि सबैको धर्म हो। मौन मनबाटै हुनुपर्छ। मौनबाट मनलाई शक्ति पाइन्छ र मानसिक पापहरूको पनि नाश हुन्छ। वाणीमाथि बुद्धिपूर्वक नियन्त्रण राख।

( १४ ) आत्मचिन्तन—प्रतिदिन विचार गरिरहू म को हुँ ? म शरीर होइन। म परमात्माको अंश हूँ। जन्मनुभन्दा अघिबाट न कोही नातेदार थियो र न मरेपछि कोही नातेदार रहला। यी दुवैको बीचको समयमै नातेदार हुन्छन्। यी को हुन् ? कहाँबाट आउँछन् ? यो सब भगवान्‌को माया हो। आत्मस्वरूपलाई बराबर चिन्नेले मात्र आनन्द पाउन सक्छ। यो जगत् सत्य होइन, यस्तो अनुभव मनुष्यले गर्न सक्छ, तर स्वयंको अनस्तित्वलाई गर्न सक्दैन। ऊ परमात्माको अंश हो, उसलाई शरीरबाट भिन्न हुनुपरेको छ।

दृश्य मध्येबाट दृश्यलाई हटाएर सबैको साक्षीरूप द्रष्टामा मन स्थिर गरेका खण्डमा साँच्चिनै आनन्द पाइनेछ।

आत्मा-अनात्माको विवेक पनि सबैको धर्म हो। जगत् अपूर्ण छ, आत्मा परिपूर्ण। मनुष्यले जबसम्म आफ्नो स्वरूपलाई स्वयं देख्न पाउँदैन तबसम्म उसले आनन्द पाउँदैन।

देवको वाणी अतिगुह्य छ।

एउटा सेठले आफ्नो खातामा गङ्गा-यमुनालाई हुने गरी मैले लाख रुपियाँ छोड़ेको छु भनेर लेखेको रहेछ। जब उसका पुत्र दरिद्र भए तब तिनीहरूले पुराना खाता हेर्दाहेर्दै यो पनि देखे तर अर्थ बुझ्न सकेनन्। एकजना उनका पिताका पुराना कारिन्दा कहींबाट आइपुगे तब उनीसँग खाताको कुराको अर्थ सोधे। उनले भने तिम्रा दुइ गाईहरू छन् यमुना र गङ्गा। यी जहाँ बाँधिन्छन् त्यहाँ रुपियाँ गाड़ेर राखिएको छ।

अब यस दृष्टान्तको आध्यात्मिक अर्थ हामीलाई बुझ्नु छ। गङ्गा र यमुना हुन् हाम्रा इड्गला र पिङ्गला नाड़ीहरू। यी दुइ नाड़ीहरूका बीचमा सुषुम्ना नाड़ी हुन्छ। जबसम्म कुनै सद्गुरुद्वारा यो सुषुम्नानाड़ी जागृत हुन पाउँदैन तबसम्म ब्रह्मको दर्शन पाइँदैन।

ज्ञानीजन निधारमा ब्रह्मको दर्शन गर्छन्, उता वैष्णवजन हृदयसिंहासनमा चतुर्भुज नारायणको दर्शन गर्दछन्।

साधु हुनु त्यत्तिको कठिन छैन जति सरल हुनुमा छ।

( १५ ) पञ्च महाभूतहरूमा ईश्वरको भावना गर्नु सबैको धर्म हो।

( १६ ) कृष्णाकथाको श्रवण गर्नु पनि सबैको धर्म हो।

( १७ ) कृष्णाकीर्तन, स्मरण, सेवा, पूजा, नमस्कार र उनका प्रति दास्य, साख्य र आत्मसमर्पण—यो पनि सबैको धर्म हो।

म परमात्मा हुँ, यस्तो सदा चिन्तन गर्नाले जीवलाई उहाँले आफ्नो तुल्याउनुहुन्छ। सँधैं यो संझिराख भगवान् एक क्षण पनि मनबाट टाढ़ा हुनुहुन्न। जसले ईश्वरलाई आफ्ना साथमा राख्छ त्यो निर्भय हुन्छ।

परमात्माका पनि आत्मसमर्पण गर्नु सबैको धर्म हो।

यसका अगाड़ि विशिष्ट धर्महरूको वर्णन छ। ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र यी चारै वर्ण ईश्वरका अंगहरूबाट उत्पन्न भएका छन्। यी सबै एक ईश्वरको स्वरूपमा छन् भनी यस्तो भावना गर। चार वर्ण र चार आश्रमहरूको वर्णन छ।

ब्रह्ममयी दृष्टि र अद्वैत निष्ठा सिद्धि भएपछि त्यो व्यक्तिले भेदभावको पालन गरेन भने कुनै आपत्ति छैन।

शास्त्रमा कहीं पनि हरिजनहरूको निन्दा गरिएको छैन।

सबैले आ-आफ्ना धर्महरूको अर्थात् कर्तव्यहरूको पूर्णतया पालन गर्नुपर्छ। ब्राह्मणको धर्म हो अध्ययन, अध्यापन, दान लिनु, यज्ञ गर्नु र यज्ञ गराउनु। क्षत्रियहरूको काम हो पूजाको रक्षा गर्नु। वैश्यहरूको धर्म हो गोपालन, कृषि र व्यापार। शूद्रहरूको कर्तव्य हो समाजका सबै वर्गको सेवा गर्नु।

यसपछि स्त्रीहरूको धर्म वर्णन गरिएको छ। स्त्रीले पतिमा ईश्वरको भाव राख्नुपर्छ। उसलाई मुक्ति पनि तब छिटै पाइन्छ। स्त्रीको हृदय ऊर्मिप्रधान र आर्द्र हुन्छ, त्यो कृष्णप्रेममा चाँडै द्रवित हुन्छ। सती अनसूयाको जस्तो नारीले पातिव्रत्यको पालन गरेर ब्रह्मा, विष्णु र महेश जस्ता देवहरूलाई बालकरूपमा पाउन सक्छिन्।

अनि आश्रम धर्मको कुरा आउँछ। आश्रम चार छन्। मनुष्यको आयु सय वर्ष मानिएको छ। आजकलको समयको दृष्टिबाट हेर्‍यौं भने मानिसलाई २३ वर्षसम्म ब्रह्मचर्य पालन गरेर २४ देखि

४० वर्षसम्म गृहस्थाश्रमी र ४१ देखि ५० वर्षसम्म वानप्रस्थाश्रमी बनेर ५१ वर्षपछि संन्यासाश्रममा प्रवेश गर्नुपर्छ।

ब्रह्मचर्याश्रम वृद्धि हो र गृहस्थाश्रम क्षय। वानप्रस्थाश्रममा संयम बढ़ाएर फेरि शक्ति बढ़ाउनु छ, शक्तिको गुणाकार गर्नु छ। संन्यासाश्रममा भागाकार छ। नैष्ठिक ब्रह्मचारी सदाका निमित्त ब्रह्मचर्यको पालन गर्दछ।

महाप्रभुले गृहस्थाश्रममा प्रवेश गरेर संन्यास लिनुभएको थियो।

वर्णाश्रमको रचना क्रमशः विस्तार-विस्तार जीवलाई ईश्वरको नजिक लैजाने सिँढ़ी हो।

ब्रह्मचारीले सदा मितभोजी हुनुपर्छ। ज्यादा भोजन गर्नेले ब्रह्मचर्यको पालन गर्न सक्दैन। त्यसको आहार अति सात्त्विक हुनुपर्छ। उसले इन्द्रियहरूको बिलकुलै विश्वास गर्नु हुँदैन। बड़ा-बड़ा ऋषिहरू अलमलिए भने तब साधारण मानवको झन कुरै के ? भागवतमा पनि भनेको छ जो ब्रह्मचर्यको पालन गर्न चाहन्छ उसले नारीसँगको सहवास छोड्नुपर्छ।

कामान्ध व्यक्ति अविवेकी हुन्छ। त्यसकारण सावधान हुनु आवश्यक छ। ज्ञानी पनि कहिलेकाहीं मोहित हुन्छ। उसले आफ्नो संयम स्थायी गर्न सक्दैन। कामको मूल सङ्कल्प हो। लौकिक कामनाले काम बढ्दछ र अलौकिक कामनाले काम कम हुन्छ। कामले क्रोधलाई उत्पन्न गराउँछ। एकान्तमा सताउँछ। एकान्तमा भजन गर। जगत्मा सबै अनर्थ कामकै कारणले हुन्छ। काम यदि मऱ्यो भने श्रीकृष्ण टाढ़ा हुनुहुन्न। हेर्ने दृष्टि बदलियो भने कामको पनि नाश हुनेछ।

संन्यास लिनुभन्दा अघि गृहस्थले वानप्रस्थ धर्मको पालन गर्नुपर्छ र पवित्र ग्रन्थहरूको अध्ययन गर्नुपर्छ। वैराग्य दृढ़ भएपछि संन्यास ग्रहण गर्नुपर्छ।

परमात्माको प्राप्तिका निमित्त सबै सुखहरूको न्यास, त्याग गर्नु संन्यास हो।

प्रह्लाद र दत्तात्रेयको एउटा प्रसङ्ग छ। दत्तात्रेयसँग प्रह्लादले सोध्नुभयो—'तपाईं कुनै सुख चयनसँग बस्नुहुन्न र पनि यस्तो हृष्ट-पुष्ट कसरी हुनुभयो ?'

दत्तात्रेयले उत्तर दिए—'जगत्को कुनै पनि जड़ पदार्थमा आनन्द छैन। सुखको इच्छा गर्नु दुःख हो। मभित्र रहेको आत्मानन्दको म उपयोग गर्छु। म आफ्नो आनन्द आफ्नो आत्मस्वरूपबाटै प्राप्त गरिलिन्छु। प्रारब्धलाई भोगेर पूरा गर्दछु। मेरो आत्मनिष्ठा दृढ़ छ। मेरा दुइ गुरु छन्।'

मेरो पहिलो गुरु हो मधुमक्षिका। माहुरीको जस्तै मानिसहरूले पनि धेरै कष्ट सहेर धन चाहिँ एकत्र गर्छन् तर माहुरीको महजस्तै त्यस धनको उपभोग चाहिँ कोही अरूले गर्दछन्।

मेरो दोस्रो गुरु हो अजिङ्गर। उसको जस्तै निश्चेष्ट भएर बसिरहन्छु र प्रारब्धभोगबाट जे पाइन्छ त्यसैमा सन्तुष्ट रहन्छु।

यी दुइ गुरुबाट मैले वैराग्य र सन्तोषको शिक्षा प्राप्त गरेको छु। एकै ठाउँमा बसेर सतत् ब्रह्मचिन्तन गर्छु।

जसबाट मनमा विक्षेप आउला यस्तो व्यवहारबाट म टाढ़ै रहन्छु र ॐकारको सतत् जप गर्छु।

अब आउँछ गृहस्थधर्मको कथा। पति-पत्नीले सावधानीपूर्वक पवित्र जीवन बिताए भने संन्यासाश्रम जस्तै आनन्द गृहस्थाश्रममा पनि पाउन सकिन्छ। पवित्र जीवनयापन गर्ने दम्पत्ती साधुसन्तहरूको सेवा गरेर परमात्मालाई पुत्ररूपमा पाएर आफ्नो काखमा उनको लालन-पालन गर्नेछन्। जबकि संन्यासी ब्रह्मचिन्तनमा मात्र लीन हुनेछ।

गृहस्थाश्रममा यो कुरा ध्यान दिनुपर्नेछ पत्नी कामभोगका निमित्त होइन तर धर्मको साधन हो, पत्नी गृहस्थाश्रमकी सहायिका हुन्। पत्नीसँग सत्संग बनिरह्यो भने गृहस्थाश्रमले दिव्यता धारण गर्छ। गृहस्थलाई धर्मले मात्र बनाएर राख्छ। संन्यासी गृहस्थको आश्रममा आउँछन्, त्यसकारण गृहस्थाश्रम श्रेष्ठ हो।

पति र पत्नी दुवै सुपात्र भए भने धर्मपालन हुनसक्नेछ। गृहस्थाश्रम सर्वश्रेष्ठ हो। गृहस्थलाई सावधान भएर बस्नुपर्छ कहीं उसबाट पापाचार हुन नपाओस्। उसले भित्रबाट अनासक्त भएर बाहिरबाट सबैसँग प्रेम राखोस्।

जो पात्रमा, थालमा छ त्यो सबै कुरा आफ्नो होइन, तर जति पेटमा अटाउन सक्छ त्यति मात्र आफ्नो हो र पेटमा जो गएको छ, त्यसमध्ये जति पच्न सक्छ त्यतिनै आफ्नो हो।

गृहस्थीले न धेरै कठोर हुनुहुन्छ न धेरै सरल। स्त्रीसँग ज्यादा ममता नराख्नु। स्त्रीको अधीन रहनु अयोग्य हो। जो स्त्रीको आवश्यकताभन्दा बढ़ी अधीन रहन्छ त्यसलाई हेर्नु पनि पाप हो।

एक राजा थिए जो पशु-पक्षीको भाषा पनि बुझ्दथे। एकपटक राजारानी भोजन गरिरहेका थिए एउटा कमिलाले भोजनको एक दाना रानीको थालबाट उठाएर राजाको थालमा राखिदियो। यो देखेर एउटा कमिलाले अर्को कमिलालाई भन्यो—'यो अधर्म हो। स्त्रीको जूठो अन्न पुरुषलाई खुवाउनु अविवेक हो।'

यी दुइटा कमिलाको कुरा सुनेर राजालाई हाँसो उठ्यो। रानीले हाँस्नुको कारण सोधिन्। राजाले भने—'छोड़ यस कुरालाई, सुन्यौ भने अनर्थ हुनेछ।'

जुन महात्माले राजालाई पशु-पक्षीको बोली जान्ने विद्या सिकाएका थिए उनले भनेका थिए मैले यो विद्या जुन सिकाएँ तर तिमीले यदि यसको कुरा अरू कसैसँग गऱ्यौ या सिकायौ भने तिम्रो मृत्यु हुनेछ।

राजाले पत्नीलाई धेरै संझाए तर स्त्रीहठले गर्दा उनी भन्न थालिन्—'तपाईंको मृत्यु किन नहोस् म तर कुरा बुझ्न चाहन्छु। राजा सीधा र पत्नीका अधीन थिए। राजाले हामी दुवै काशी जाऔं, त्यहाँ पुगेर सबै कुरा भन्नेछु ' भने। राजाले सोचे—'मर्नु छ भने पनि काशीमा मरेर मुक्ति किन नपाउनु ?'

ती दुवै काशीतर्फ हिँड़। बाटामा वनमा एक बाख्राको जोड़ी भेटियो। बाख्रीले पनि बोकोसँग भन्न थाली—'इनार नजिकै गएर मेरा निमित्त हरियो घाँस ल्याइदेऊ। होइन भने म डुबेर मर्नेछु।' बोकोले संझायो—'मेरो गोड़ा चिप्लियो भने इनारमा खसेर मर्नेछु।' बाख्रीले भनी—'जे सुकै होस् म तर घाँस खान्छु।'

बाख्राले आँखीभूइँ टेढ़ो पारेर रिसाएर भन्यो—'म त्यो राजा जस्तो मूर्ख छैन जो प्रभुभजनलाई पाएको शरीर यस स्त्रीको मूर्खतापूर्ण हठका खातिर त्यसको नाश गर्न तयार भए।' बोकाको कुरा सुनेर धिक्कार छ मलाई ! मभन्दा बरू बोको बेस छ। उनले रानीलाई दृढ़तापूर्वक भन्दिए—'म केही पनि भन्न चाहन्नँ। तिमी जे मन लाग्छ गर।' रानीलाई आफ्नो हठ छोड्नुपर्‍यो।

हृदयबाट राम जानुभयो भने तब मानिस कामान्ध बन्दछ।

गृहस्थाश्रमलाई आदेश छ उसले दान गरोस्, किनभने दानबाट धनको शुद्धि हुन्छ। वर्षमा एक महीना गङ्गा किनारामा बस्न पनि भनेको छ। उसलाई चाहिन्छ ऊ एकान्तवासमा नारायणको आराधना गरोस्। वर्षमध्ये एक महीना ठाकुरजीका निमित्त सुरक्षित राखोस्।

घरमा ठीकसँग भक्ति हुन सक्दैन, त्यसकारण तीर्थमा भक्ति गर। तीर्थमा गएर घरलाई र लौकिक कुरालाई कहिल्यै नसंझनु। त्यहाँ भक्तिमात्र गर्नुपर्छ।

भक्ति गर्नका निमित्त स्थानको शुद्धि पनि आवश्यक छ। स्थानको वातावरणले मनमा ठूलो असर पर्छ।

यस विषयमा मारकण्डेय पुराणमा एउटा कथा छ।

राम-लक्ष्मण वनमा प्रवास गरिरहेका थिए। बाटामा एक स्थानमा लक्ष्मणको मन कुभावले भरियो र मतिभ्रष्ट भयो। उनी सोच्न थाले—'कैकेयीले वनवास रामलाई दिएको हो, मलाई होइन। म रामको सेवाका निम्ति किन कष्ट गरौं ?'

रामले लक्ष्मणलाई भन्नुभयो—यस ठाउँको माटो राम्रो रहेछ अलिकति पोको पारेर साथै लेऊ। लक्ष्मणले एउटा पोको पारे। बाटामा जबसम्म यो पोको साथमा लिएर हिँड्थे तबसम्म उनको मनमा कुभाव मात्र बनिरहन्थ्यो। तर जसै उनी त्यो पोकोलाई तल राखेर टाढ़ा जान्थे तब उनको मन राम-सीताका निमित्त माया र भक्तिले भरिएर आउँथ्यो। लक्ष्मण यस कुराबाट आश्चर्यचकित भए। उनले रामसँग यसको कारण सोधे।

श्रीरामले कारण बताउँदै भन्नुभयो—'भाइ, तिम्रो मनको यस परिवर्तनका निमित्त तिमी दोषी छैनौ। त्यस माटोकै यो प्रभाव हो। जुन भूमिमा जस्तो काम गरिन्छ त्यसको असल-खराब परमाणु त्यस भूमिभागमा र वातावरणमा पनि रहेको हुन्छ। जुन स्थानको माटो यस पोकोमा छ त्यहाँ सुन्द र उपसुन्द नामक दुइ राक्षसहरूको निवास थियो। तिनीहरूले कठिन तपस्या गरेर ब्रह्मालाई प्रसन्न गरी अमरताको वर मागे। ब्रह्माले उनको माग पूरा गरिदिन खोज्नुभयो तर केही

बन्देजका साथ। ती दुवै भाइका बीच बड़ो प्रेम थियो। त्यसकारण उनले भने 'हाम्रो मृत्यु आपस्तको विग्रहबाटै होओस्।' ब्रह्माले वर दिनुभयो।

यी दुवैले सोचेका थिए हामी दुइ आपसमा झगड़ा गर्नेवाला होइनौं, त्यसकारण अब हामी मर्ने छैनौं।

आफ्नो यस अमरताको घमण्डमा तिनीहरूले देवताहरूलाई सताउन थाले। देवहरू ब्रह्माको शरण परे। अनि ब्रह्माजीले तिलोत्तमा नाउँकी अप्सराको सृष्टि गर्नुभयो र उसलाई असुरहरूकहाँ जान भनी आज्ञा दिनुभयो। सुन्द र उपसुन्दले त्यस सौन्दर्यवती अप्सरालाई देखे तब दुवै भाइ मोहान्ध भए। सुन्दले भन्यो 'यो मेरी हो। उपसुन्दले भन्यो तँ सोची संझीकन बोल्। यो तेरी भाउजू अर्थात् मेरी पत्नी हो।' दुवै भाइ झगड़ा गर्नथाले। तिलोत्तमाले भनी 'म तर विजेताका साथ विवाह गर्छु।' तब दुवै भाइले विजेता बन्नका निमित्त यस्तो घोर युद्ध गरे र दुवै मरे।

ती दुवै असुर जुन स्थानमा झगड़ा गर्दै मरेका थिए सोही स्थानको यो माटो हो। त्यसकारण यस माटोमा पनि द्वेष, तिरस्कार र वैरका संस्कारहरूको सिञ्चन भइसकेको छ।

जुन भूमिमा जस्तो कर्म गरिन्छ त्यस्तै संस्कार त्यस भूमिले प्राप्त गर्छिन्।

घरलाई गृहस्थले सदा पवित्र राखोस्।

मानिस माथेरान सफरका निमित्त निस्कन्छन् तर यो सोच्दैनन् टाउकामा कति ( रान ) ऋण बढ़ेको छ।

माथेरान जानुको साटो जहाँ परमात्माले लीला गरेको हो, त्यस्तो भगवद्धाममा बसेर सत्कर्म गरोस्।

गृहस्थले पितृ श्राद्ध पनि गर्नुपर्छ। दशरथको श्राद्धको प्रसङ्गमा सीता जब वशिष्ठलाई भोजन पस्किन थालेकी थिइन् तब उनलाई वशिष्ठमा दशरथको दर्शन भयो। पवित्र ब्राह्मणको माध्यमबाट पितृ घरमा आउँछन्। पवित्र ब्राह्मणका हातद्वारा श्राद्ध गराइयोस्।

कामको मूल सङ्कल्प हो। त्यसकारण सङ्कल्पलाई त्याग गरेर कामलाई जित्नुपर्छ। मनमा सुखको सङ्कल्प पनि आउनु हुँदैन। सङ्कल्प दुःखको कारण हो। कामको इच्छा अपूर्ण हुनाले क्रोध उत्पन्न हुन्छ। कामनाहरूको त्याग मात्र क्रोधलाई जित्ने उपाय हो। क्रोध दुःखदाता हो। क्रोधमाथि क्रोधित हुने निश्चय गर।

संसारी मानिस जसलाई अनर्थ मान्दछन्, त्यही अनर्थ हो भनी संझ र लोभलाई जित। तात्त्विक विचारबाट भयलाई जित्नुपर्छ। अध्यात्म विद्याले शोक र मोहमा, सन्तहरूको उपासनाले दम्भमा, मौनद्वारा योगका विघ्नहरूमा र शरीर प्राण आदिलाई निश्चेष्ट गरेर हिंसामा विजय प्राप्त गर्नुपर्छ।

गृहस्थले सद्‌गुरुको आश्रय लिएर उसका आज्ञाको पालन गर्नुपर्छ। सात्त्विक भोजन, स्थान र सत्सङ्गले निन्दालाई पराजित गर्नुपर्छ। सत्त्वगुणको वृद्धिबाट मनुष्यको देह विलीन हुन्छ। ज्ञानेश्वरले सोह्र वर्षमा र शङ्कराचार्यले बत्तीस वर्षमा प्रयाण गरेका थिए।

तमोगुणको वृद्धिबाट निद्रा बढ्दछ र सत्त्वगुणको वृद्धिबाट निद्रा हट्दछ। निद्रा तमोगुणको धर्म हो।

सदाचार, संयम, सात्विक आहार विहार, आचार आदिबाट सत्त्वगुण बढ्दछ। सत्त्वगुणको वृद्धिबाट प्रभुमिलनको आतुरता बढ्नेछ।

प्रत्येक दिन भगवान्‌को ध्यान गर। ध्यान गर्नाले ध्यान गर्नेमा ईश्वरको शक्ति आउँछ। गृहस्थले इन्द्रियरूपी घोड़ालाई नियन्त्रणमा राख्नुपर्छ।

विद्वान्‌हरू भन्दछन् यो शरीर रथ हो र इन्द्रियहरू घोड़ा। इन्द्रियहरूको नियन्ता मन चाहिँ यी घोड़ाहरूको लगाम हो। शब्दादि विषय विभिन्न मार्ग हुन्। बुद्धि यस रथलाई चलाउने सारथी हो। यस रथलाई बाँध्नका निमित्त ईश्वरले चित्तरूपी बन्धन बनाएको छ। दश प्राण यस रथको धुरा हो। धर्म र अधर्म पाङ्ग्रा हुन्। यस रथमा बस्दछ हाम्रो अहङ्कारी जीव। ॐकार धनुष हो र शुद्ध जीवन बाण। परब्रह्म लक्ष्य हो, निशाना हो। राग, द्वेष, लोभ, शोक, मोह, भय, मान, अपमान, असूया, माया, हिंसा, मत्सर, रजोगुण, प्रमाद, क्षुधा, निद्रा आदि शत्रु हुन्।

जबसम्म मनुष्य-देहरूपी रथ आफ्ना वशमा छ तथा इन्द्रियहरू आदि सशक्त छन्, त्यति समयमै मानिसले सद्‌गुरुका चरणको सेवा गरेर, तीक्ष्ण ज्ञानरूपी तरवार लिएर भगवान्‌को बल धारण गरी रागद्वेषादि शत्रुहरूलाई जितोस् र तत्पश्चात् शान्त भएर स्वानन्दरूपी स्वराज्यबाट सन्तुष्ट होस्। शरीररथलाई पनि छोड़िदिनुपर्छ।

यदि यस्तो गर्न सकिएन भने रथमा बसेको प्रमादि जीवलाई तथा दुष्ट इन्द्रियरूपी घोड़ाहरूलाई बुद्धिरूपी सारथीले अयोग्य मार्गमा लगेर विषयरूपी चोरको अधीन गरिन्छ। ती चोरहरूको घोड़ाहरू र सारथीका साथ जीवरूपी रथलाई अन्धकार व्याप्त र महामृत्युको भयले परिपूर्ण संसाररूपी इनारमा फ्याँकिदिनेछ।

वेदमा दुइ प्रकारका कर्म बताइएका छन् प्रवृत्ति र निवृत्ति। प्रवृत्तिकर्मबाट मनुष्य संसारमा फर्केर आउँछ, निवृत्तिकर्मबाट मोक्ष प्राप्त गर्दछ।

म कमाउँछु, यस्तो अभिमान गृहस्थले गर्नुहुन्न। द्रव्य मेरो हो, यस्तो अभिमान पनि नगर। द्रव्य सबैको हो।

गृहस्थले भावद्वैत सिद्ध गरोस्। पति-पत्नी सत्सङ्ग गरून्।

एकान्तमा बसेर हरिकीर्तन गर। कीर्तनबाट कलिका दोषहरूको विनाश हुन्छ। धर्मले अर्थको उपार्जन गर।

मोजमज्जामा सबै साथै हुन्छन् र दण्ड एक्लै जीवात्माले भोग्नुपर्छ।

कति गृहस्थ संसार पार भएर गएका छन्। बड़ा-बड़ा ऋषि जो ईश्वरको दर्शनलाई प्रयास गर्छन् ती तपाईंका घरमै बस्दछन्।

यसप्रकार नारदले धर्मराजलाई उपदेश दिए। अन्तमा यस प्रकरणको समाप्तिमा धर्मराजले नारदजीको पूजा गरे।

हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

हरि तुम हरो जन की भीर।
द्रौपदीकी लाज राखी तुम बढ़ायो चीर॥
भक्त कारन रूप नरहरि धर्यो आप शरीर।
हिरनकश्यप मार लीन्हों धर्यो नाहिन धीर॥
बूड़ते गजराज राख्यो कियो बाहर नीर।
दासि मीरा लाल गिरधर दुःख जहाँ तहँ पीर॥

प्रथम स्कन्धमा शिष्यहरूको अधिकारको वर्णन गरिएको छ। अधिकारका विना ज्ञान शोभा दिँदैन। अनधिकारी मानिस ज्ञानको दुरुपयोग गर्छ। दोस्रो स्कन्धमा ज्ञानको उपदेश दिइएको छ। त्यहाँ मनुष्यमात्रको के कर्त्तव्य हो, यो वर्णन गरिएको छ। मनुष्यजीवन भोग भोग्नका निमित्त दिइएको होइन। ईश्वरको आराधना गरेर ईश्वरलाई पाउनका निमित्त मानव शरीर दिइएको छ। तृतीय स्कन्धमा ज्ञानलाई जीवनमा कुन-कुन प्रकारले लागू गराउने हो सो कुरा सुनाइएको छ। यस ज्ञानलाई जीवनमा लागू गर्नेवालाका चारै पुरुषार्थ सिद्ध हुन्छन्। चौथो स्कन्धमा चार पुरुषार्थहरूको कथा सुनाइयो। पाँचौं स्कन्धमा ज्ञानी परमहंसहरूको र भागवत परमहंसहरूको लक्षण बताइएको छ। सबका स्वामी परमात्मा हुनुहुन्छ। यसका पछि छैटौं स्कन्धमा पुष्टिको कथा आएको छ। जीवमा परमात्माको अनुग्रह छ। जीवको पापबाट ईश्वर केही माग्दैनन्। ईश्वर निरपेक्ष हुनुहुन्छ तापनि ईश्वर जीवऊपर कृपा गर्नुहुन्छ। मनुष्यले जब आफूले गरेका पापहरूलाई संझला तब त्यसलाई थाहा हुनेछ जे-जति उसले पाएको छ त्यसका निमित्त त्यो योग्य भएन।

जब जन्म भयो त्यसवेला जीव शुद्ध थियो। तर जब त्यसमा बुझ्ने शक्ति आयो तब ऊ असत्य बोल्न लाग्यो। ईश्वरले जीवलाई अनेक अवसर दिनुहुन्छ र उहाँ आशा पनि गर्नुहुन्छ जीवले आफ्नो जीवन सुधार्ला भनी।

केवल कथा सुनेर मात्र फाइदा छैन। कथा सुनीकन मनन गरेर त्यसलाई जीवनमा लागू गराऊ।

प्रभुले हामीहरूलाई चिन्ता गर्नुपर्ने जस्तो केही बाँकी राखिदिएको छैन, ईश्वरको जीव-ऊपर अनन्त कृपा छ तर जीव त्यसको उपयोग गर्दैन। पवित्र विचार गर्नका निमित्त प्रभुले मन

दिएको छ। जसले मनशक्तिको दुरुपयोग गर्छ, त्यही दैत्य हो। मनमा शक्ति छ। जीव ईश्वरस्वरूपमा लीन हुन्छ, मनशक्तिको विकास हुन्छ।

तर जब मन विषयहरूमा अल्मलिन्छ, तब मनशक्तिको विनाश हुन्छ।

ईश्वर जीव मात्रमा कृपा गर्नुहुन्छ। त्यसलाई उसको पात्रताभन्दा बढ़ी दिनुहुन्छ।

सातौं स्कन्धमा वासनाको कथा सुनाइयो र भनियो प्रह्लादको सद्वासना हो, मनुष्यको मिश्रवासना र हिरण्यकशिपुको असद्वासना हो।

हिरण्यकशिपुले सम्पत्ति पायो, समय पनि पायो; तर यी सबको उपयोग उसले भोगविलासमा गऱ्यो। शक्तिको उपयोग अरूहरूलाई दुःख दिनमा गऱ्यो।

मर्यादाका विना भोगले मनुष्यलाई रोगी बनाउँदछ। इन्द्रियहरूलाई निरोग राख्नका निमित्त भोग हो। रोगी बनाउनका निम्ति होइन। अग्निमा दाउरा नहाल्नु अग्निलाई शान्त गर्ने उपाय हो। यस्तै किसिमबाट इन्द्रियहरूलाई भोग्न दिएमा इन्द्रियहरू शान्त हुन्छन्। भोग दिएपछि यस्तो लाग्छ इन्द्रियहरूलाई शान्ति मिलेको छ, तर यो कुरा सत्य होइन। त्यसले तर अशान्ति मात्र बढ्दछ।

मैले जे-जति पाएको छु, त्यो केवल मेरा निमित्त मात्र हो, यस्तो ठान्नु असद्वासना हो। परमात्माले मलाई जे-जति दिनुभएको छ त्यो सबैलाई हो, यस्तो सोच्नु सद्भावना हो। प्रह्लादमा सद्वासना थियो, त्यसकारण उनलाई देव मानियो। हिरण्यकशिपुलाई उसको असद्वासनाको कारण राक्षस मानियो। हिरण्यकशिपु भोगवृत्ति, अहङ्कार र लोभ हो। देव हुनु या दानव हुनु यो मनुष्यको हातमा छ। जगत्का सबै मानिस पुण्यका फलको इच्छा चाहिँ राख्छन् तर उनीहरू स्वयं पुण्य गर्दैनन्।

**पुण्यस्य फलं इच्छन्ति, पुण्यं न कुर्वन्ति मानवाः।**

सदा ध्यानमा राख यो तिम्रो कर्मको फल तिमी स्वयंले भोग्नुपरेको छ, यसमा दोष कसको ? यदि दाँतको तल्तिर आएर जिब्रो काटिन्छ भने दोष कसको ? त्यो सहनै पर्नेछ।

भक्तिमार्गमा अगाड़ि बढ्नका निमित्त पहिलो साधन हो संयम। संयमलाई बिस्तार-बिस्तार बढाऊ र भोगमार्गका तर्फ बगिरहेको इन्द्रियशक्तिलाई प्रभुको मार्गतर्फ घुमाइदेऊ। वासनाको विनाश भएपछि ब्रह्मभाव जाग्दछ। जबसम्म मनमा सूक्ष्म वासना हुन्छ, तबसम्म जीव र ईश्वरको मिलन हुँदैन। वासना ज्ञानानुभवमा विघ्नकर्ता हो।

वासनाका विनाशका निमित्त आठौं स्कन्धमा चार उपाय बताइएका छन्। भागवतको फल हो रासलीला। जीवलाई श्रीकृष्णसँग भेटिनु छ। एकपटक श्रीकृष्णसँग भेट भएपछि जीव उहाँबाट छुट्टिन सक्दैन। रासमा उसैलाई प्रवेश पाइएको छ जसले वासनाको विनाश गर्दछ। अनेक जन्महरूको वासना मनमा भरिएको छ। वासनाले अनेक प्रकारको दुःख दिन्छ र पनि मनुष्य त्यसलाई छोड्न

सक्दैन। ईश्वरको अनुभव नभैकन वासना जाँदैन। जबसम्म वासनामा आकर्षण हुन्छ तबसम्म वासना जाँदैन। कुम्भकलाई बढ़ायौ भने वासनाको विनाश हुन्छ। प्राणहरूलाई शरीरमा अड्याइराख्यौ भने वासनाको विनाश हुन्छ।

बारम्बार मनमा यस्तो सङ्कल्प गर मलाई परमात्मासँग मिल्नु छ। जब दुइ आत्माहरू मिल्दछन् तब उनको मिलनले पनि आनन्द पाइन्छ भने सबै प्राण सूक्ष्मरूपबाट जुन परमात्मामा बसेका छन् ती परमात्मासँग भेट हुँदा कत्तिको आनन्द होला। मलाई ईश्वरसँग भेट गर्नु छ, यस्तो कामना गर। वासनालाई अलौकिक बनाऊ।

जो दुष्ट संस्कारहरू मनले भेट्टाएको छ, ती हटून्। मनलाई राम्रो संस्कार फेला परोस्, त्यसकारण सत्सङ्ग जरूरी छ। सत्सङ्गबाट वासना उच्चतम बढ्ने छ। वासनालाई अलौकिक बनाऊ। मनुष्य बारंबार जस्तो बोल्दछ र जसको विचार गर्छ, स्वयं त्यस्तै बन्दछ।

आठौं स्कन्धमा वासनाको विनाशका निम्ति चार उपायहरू बताइएका छन्। वासनाको विनाश यी चार उपायहरूले हुन्छ। जब जीव ईश्वरसँग टाढ़ा हुन्छ तब वासना जाग्दछ। सततः हरिस्मरण गर्ने बानी बसालेमा वासना जाग्ने छैन। हृदयमा यदि सँधै रामको वास भयो भने त्यहाँ कामवासना आउन सक्ने छैन।

हरिस्मरणको बानी गर्नाले वासनाको विनाश हुनेछ। यो सबै ईश्वरको हो र सबैका निमित्त हो, यस्तो सम्झ्यौ भने वासनाको विनाश हुनेछ। सम्पत्ति मेरो हो, यस्तो सोच्नाले वासना बढ्नेछ। जीव लक्ष्मीको मालिक कहिल्यै हुन सक्तैन। जीव लक्ष्मीको पुत्र मात्र हो। बालक हुँदा जो आनन्द पाइन्छ त्यो मालिक हुँदा पाइँदैन। बालक बन्यौ भने सुखी हुनेछौ। सूतजी सावधान गराउनुहुन्छ— बलि राजाले सर्वस्व दान गरे। विपत्तिमा स्व-वचनको पालन गर। चौथो उपाय हो शरणागति।

यदि जीव भगवान्का शरणमा गएन र भगवान्को स्मरण गरेन भने त्यसले वासनाको विनाश गर्न सक्दैन। वासनाको नाश भएपछि रासलीलामा जाने हो। बिस्तार-बिस्तार राजा परीक्षित्का मनको शुद्धि गरेर शुकदेवजी उहाँलाई रासलीलामा लैजानुहुनेछ।

अष्टम स्कन्धमा मन्वन्तर-लीलाको वर्णन छ। शुकदेवजी वर्णन गर्नुहुन्छ—'हे राजन्, प्रत्येक मन्वन्तरमा प्रभुको जन्म हुन्छ। प्रत्येक मनुको राज्यमा प्रभुको एक विशिष्ट अवतार हुन्छ।'

यस कल्पमा छ मनु भए। प्रथम स्वायंभुव मनुको कथा मैले तिमीलाई सुनाएँ। स्वायंभुव मनुका पुत्रीहरू आकूति र देवहूतिको चरित्रको कथा मैले सुनाएँ।

दोस्रो मन्वन्तरमा स्वायंभुव मनु तपश्चर्या गर्नका निमित्त वन गए। त्यहाँ श्री यज्ञभगवान्ले राक्षसहरूबाट उनको रक्षा गर्नुभो।

स्वायम्भुव मनु भन्नुहुन्छ—'यो सारा जगत् र जगत्मा रहने सब चर-अचर प्राणी परमात्मामा ओत-प्रोत छन्, त्यसकारण संसारको कुनै पनि पदार्थसँग मोह नगरीकन यिनलाई त्यागेर जीवन-निर्वाहका निमित्त जति आवश्यक हुन्छ त्यति मात्र उपभोग गर्नुपर्छ। तृष्णालाई सर्वथा त्याग गर्नुपर्छ। यस जगत्को सम्पत्ति कसको हो र कहिले कसको भएको छ ?'

त्यसकारण हे मनुष्य ! त्याग गरेर तिमी यसको उपभोग गर अर्थात् सर्वस्व ईश्वरलाई अर्पण गर र अनासक्त भएर तिमी उपभोग गर। अरूको धन प्राप्त गर्ने इच्छा नराख।

यो सारा जगत् ईश्वरबाट व्याप्त छ अर्थात् प्रभु सर्वव्यापक हुनुहुन्छ, यस्तो जो मनुष्यले विचार गर्ला उसले कहिले पनि कसैसँग द्रोह गर्ने छैन।

विषयहरूमा मन नफँसोस्, यस कुराको ध्यान राख। यस जगत्‌को पदार्थ आजसम्म कसैको भएको छैन र हुने पनि छैन। तैपनि मनुष्य ती पदार्थहरूसँग मोह गर्छ र उसमा आफ्नो आसक्ति बढाउँछ।

माथि उल्लेख भएको अद्वैतवाद राम्रो छ। द्वैतवाद त्याग गर। ऋषि पनि मोक्ष पाउनुभन्दा अघि सत्कर्म गर्छन्। सत्कर्म गर्ने मनुष्य मात्र निष्काम भावमा प्राप्त हुन्छन्।

ईश्वरले पनि कर्म गर्नुपर्छ, तर ईश्वर कुनै पनि कर्ममा आसक्त हुँदैनन्। ती अनासक्त भएर कर्म गर्दछन्। राम, कृष्ण आदि अवतारहरूमा मनुष्यलाई श्रेष्ठ आचरणहरूको आदर्श देखाउनका निमित्त भगवान्‌ले सत्कर्म गर्नुभएको छ।

कर्म नगरी जीवन चल्दैन।

न हि कश्चित्क्षणमपि जातु तिष्ठत्य कर्मकृत्।

त्यसकारण अनाशक्त भएरै काम गर।

तेस्रा मनुष्य हुनुभएको छ उत्तम। प्रभुले सत्यसेनको रूपमा अवतार धारण गर्नुभएको थियो। चौथो मन्वन्तरमा प्रभुको हरिरूपमा जन्म भएको थियो। उहाँले गजेन्द्रलाई मकरग्राहबाट रक्षा गर्नुभएको थियो। दोस्रो अध्यायदेखि चौथो अध्यायसम्म गजेन्द्रमोक्षको कथा छ। परीक्षित् राजा भन्नुहुन्छ 'मलाई गजेन्द्रमोक्षको कथा सुनाउनुहोस्।'

शुकदेव राजालाई भन्नुहुन्छ—'राजन् ! चित्रकूट पर्वतमा एउटा बलवान् हात्ती बस्थ्यो। त्यो अनेक ढोइहरूको पति थियो। कड़ा गर्मीको दिन थियो। गजेन्द्र ढोइहरूका साथ सरोवरमा जलक्रीड़ा गर्न गयो। ढोइहरू र बच्चाहरूद्वारा घेरिएर ऊ आनन्द विहार गर्न थाल्यो। गजेन्द्र जलक्रीड़ामा तन्मय छ। यो थाहा पाएर एउटा ग्राहले उसको गोड़ा समात्यो, उसको पञ्जाबाट उम्कनलाई हात्तीले बहुतै कोशिश गर्‍यो। हात्ती स्थलचर र ग्राह जलचर हुन्, त्यसकारण हात्ती पानीमा कमजोर पर्न गयो। ग्राहले हात्तीलाई छोड्दैन। गजेन्द्रमोक्षको यो कथा प्रत्येक घरमा हुन्छ—'

संसार सरोवर हो।
जीव गजेन्द्र हो।
काल ग्राह हो।

संसारका विषयहरूमा आसक्त भएको जीवलाई कालको पनि भान हुँदैन। जीव मात्र गजेन्द्र हो। हात्तीको बुद्धि स्थूल हो। ब्रह्मचर्यको भङ्ग भएमा बुद्धि जड़ हुनेछ। हात्ती अति कामी छ। सिंह वर्षमा एकै पटक ब्रह्मचर्यलाई भङ्ग गर्छ। त्यसकारण उसको बल कम भए पनि उसले हात्तीलाई मार्न सक्छ। काम क्रीड़ा गर्ने वालाको बुद्धि जड़ हुन्छ।

यो जीवात्मा गजेन्द्र त्रिकुटाचल पर्वतमा बस्छ। त्रिकुटाचल शरीर हो। त्रिकुटाचलको दोस्रो अर्थ हुन्छ काम, क्रोध र लोभ। यो संसार सरोवर हो। संसारमा जीव कामक्रीड़ा गर्दछ। संसार-सरोवरमा जीवात्मा स्त्री र बालकहरूका साथ क्रीड़ा गर्दछ। जुन-जुन संसारमा जीव खेल्छ त्यही संसारमा त्यसको काल निश्चित गरिएको हुन्छ। संसारमा जो कामसुखको उपभोग गर्दछ त्यसलाई कालले समात्छ। जसलाई काम मार्दछ त्यसलाई कालले पनि मार्दछ। 'म कामसुखको उपभोग गर्दछु' भन्ने मानिस झूटो कुरा गर्छ। कामले मनुष्यलाई उपभोग गरेर उसलाई क्षीण गरिदिन्छ।

## भोगा न भुक्ता वयमेव भुक्ताः।

इन्द्रियहरूलाई जब भक्तिरस मिल्दछ तब ती शान्त हुन्छन्।

अनेक जन्मदेखि जीव काललाई मार्दै आइरहेछ। ग्राह र सर्पलाई कालको उपमा दिइएको छ।

जुन संसारमा मनुष्य कामक्रीड़ा गर्दछ त्यहाँ काल पनि बस्दछ। जब जन्म हुन्छ सोही समयमा मरणको समय पनि निश्चिन्त गरिन्छ। ग्राहले हात्तीको पाउ समातेको थियो। काल जब आउँछ सबभन्दा पहिले गोड़ै समात्दछ। गोड़ाको शक्ति क्षीण भयो भने अब काल नजिकै आइपुगेको छ भनी सावधान हुनुपर्छ। त्यसवेला आत्तिनु हुँदैन, भगवत्-शरणमा लाग्नु पर्छ। कालले आएर समातेको बखत तिमीलाई न पत्नीले छुटाउन सक्छिन् न पुत्रले। जब कालले समात्छ तब कुनै पनि प्रयत्न काम लाग्ने छैन। त्यो ग्राहले जब हात्तीलाई समात्यो तब न ढोइहरू र न बच्चाले उसलाई छुटाउन सके, न अरू हात्तीले। मानिसलाई कालले समातेपछि त्यसलाई कसैले बचाउन सक्तैन। पत्नी, पुत्र, कसैले पनि उसलाई सक्दैनन्। कालको मुखबाट त्यही छुट्छ जसलाई परमात्माको दर्शन हुन्छ। कालका पनि काल श्रीकृष्णको दर्शनबाट कालको नाश हुन्छ।

काल-ग्राहको मुखबाट तब श्रीहरिको सुदर्शनचक्रले मात्र छुटाउन सक्छ।

ग्राहको मुखबाट उम्कन हात्तीले बहुतै प्रयत्न गऱ्यो तर केही काम लागेन, कालले समातेपछि कुनै पनि प्रयत्न काम लाग्दैन।

एक महीनासम्म यस्तै प्रकारले दुवैका बीच युद्ध चल्दै रह्यो। ग्राहले हात्तीलाई गहिरो पानीमा तान्दै गइरहेछ। त्यसकारण अब हात्ती मरिहाल्नेछ भन्ने ठानी ढोइहरू उसलाई त्यागेर गइहाले। मनुष्यको जन्मभन्दा पहिले त्यसको कोही सम्बन्धी थिएन न मरेपछि कोही रहला। तैपनि जन्म र

मरण दुइका बीचमा जो समय छ, त्यस समयमा उसलाई एक-अर्काका विना चैन आउँदैन। तर अन्तकालमा कोही पनि काम लाग्दैन। मानिसले यस्तो इच्छा राख्नुपर्छ मेरो हालत यस्तो होस्, जसले मलाई प्रभु विना चैन नआवोस्।

गजेन्द्र अब मरिहाल्ने छ भनेर सबैले उसलाई छोड़ेर हिँड़े। गजेन्द्र एक्लै भयो। मानिस पनि जब एक्लै पर्छ अनि ज्ञान जागृत भएर आउँछ। एक्लै अर्थात् जब गोजीमा पैसा हुँदैन तब ज्ञान जागा भएर आउँछ र त्यो ईश्वरको शरणमा पर्छ। निर्बलको बल राम।

द्रौपदीले जबसम्म सारीको सप्को अँठ्याइराखेकी थिइन् तबसम्म श्रीकृष्ण भगवान् आउनुभएन। ईश्वर सम्पूर्ण प्रेम चाहनुहुन्छ। जीव ईश्वरलाई अलिकति मात्र प्रेम दिन्छ त्यसैले ईश्वरले मद्दत गर्नुहुन्न।

गजेन्द्र निराधार भयो उसलाई अब विश्वास भयो मेरो सहारा कोही छैन। जीव जब दुःखले व्याकुल हुन्छ अनि परमात्मालाई पुकारा गर्दछ।

प्रत्येक दिन 'गजेन्द्र मोक्ष'-को पाठ गर्नु जरूरी छ। बूढ़ो बिरामी पर्‍यो र बेथा अलि दिन लम्बिँदै गएपछि सबै यो इच्छा गर्न थाल्छन् अब यो बूढ़ो मरिदिए बेस हुन्थ्यो। छोरो छुट्टी लिएर आएको छ, बूढ़ोको बिमारी बढ्दो छ, सो अवस्थामा छोरो भन्छ मेरो छुट्टी सकियो, म जान्छु। बूढ़ालाई केही भयो भने खबर पठाउनू।

जीव जब मृत्यु शैय्यामा एक्लो हुन्छ, तब त्यसको अवस्था गजेन्द्रजस्तै हुन्छ। अन्तःकालमा जीवलाई ज्ञान आउँछ, तर त्यसबेलाको त्यो ज्ञान केही काम लाग्दैन। मानिस आत्तिन्छ, विचार गर्छ मैले मर्नका निमित्त तयारी गरेको छैन, अब मलाई के हुने होला ? जहाँ गएर फर्किन्छ यस्तो यात्रालाई मानिस कति धेरै तयारी गर्छ भने जहाँ गएर फर्कनु छैन यस्तो यात्राका निमित्त केही तयारी गर्दैन। परमात्मालाई खुशी गरायौ भने तिम्रो नाउ पार लाग्यो। यो गजेन्द्र पशु हो। पशु भएर पनि ऊ परमात्मालाई पुकार्दछ। तर मानिस मृत्युशैय्यामा लड़िरहेर पनि हाय! हाय! गर्दछ। हाय! हाय! गरेर अब के हात लाग्ने हो र ?

गजेन्द्र एब एक्लै पर्‍यो उसलाई विश्वास भयो ईश्वरका सिवाय मेरो कोही छैन। ईश्वरको आधारविना जीव निराधार छ, अन्तमा सबैले छोड़ेर जान्छन्। जसका निमित्त सारा जीवनको भोग चढ़ाइयो, ती सबैले छोड़ेर गइहाल्छन्। अन्तकालमा जीव पछुतो गर्छ। हाय ! हाय! गरेर उसको प्राण जान्छ। अन्तकालमा हाय! हाय! गरेर हृदय पोल्न चाहँदैनौ भने अहिल्यैदेखि हरिको नाउँ लिन थालिहाल। आजदेखि श्रीहरिको स्मरण गर्‍यौ भने अन्तकालमा पनि श्रीहरिको संझना हुनेछ।

पशु संग्रह गर्दैन, मनुष्य संग्रह गर्छ। मनुष्य भोलिको पीर गर्छ। कालले गोड़ा समातिरहेछ भन्ने कुरा बिर्सनु हुन्न। गोड़ाको शक्ति क्षीण भयो भने भन्ठान मर्ने समय आयो।

जब गजेन्द्र बहुतै व्याकुल भयो तब स्तुति गर्न थाल्यो। गजेन्द्रले श्रीहरिको स्तुति गऱ्यो, त्यसको ठूलो महिमा छ। संसारी मानिसहरूले गजेन्द्रको जस्तै नित्य श्रीहरिको स्तुति गर्नुपर्छ। यस प्रकार स्तुति गर्नाले अज्ञानको नाश हुन्छ र मरण सुध्रिन्छ।

काल जीवलाई जब समात्न आउँछ तब ऊ प्रभुलाई पुकारा गर्दै भन्छ—'हे नाथ ! हजूरको शरणमा आएको छु।' जीव जब चारैतर्फबाट निराधार हुन्छ, तब पूर्वजन्मको संस्कार र सत्कर्महरूबाट त्यो प्रभुको शरणमा जान्छ। गजेन्द्र स्तुति गर्दछ—'भिन्न-भिन्न रूपहरूमा नाटक गर्ने अभिनेताको वास्तविक स्वरूपलाई जस्ता प्रकारले साधारण दर्शक चिन्न सक्दैन, सोही प्रकार सत्त्वप्रधान देवता या ऋषि पनि तपाईंको स्वरूपलाई चिन्न सक्दैनन् भने फेरि अरू साधारण मानिसहरू तपाईंलाई चिन्न कसरी सक्लान् या तपाईंको स्वरूपको वर्णन कसरी गर्न सक्लान् ? यस्ता दुर्गम चरित्रवाला हे प्रभु ! मेरो रक्षा गर्नुहोस्।'

पशुतुल्य अविद्याग्रस्त जीवको अविद्यारूप पासोलाई सदाका निमित्त काट्ने अत्यन्त दयालु र दया गर्नमा पनि कहिल्यै अबेर नगर्ने नित्य मुक्त प्रभुको शरणमा आएर वन्दना गर्छु। आफ्नो अंशबाट सबै जीवहरूको मनमा तपाईं अन्तर्यामी रूपबाट प्रकट भइरहनु हुन्छ। सबैको नियन्ता र अनन्त—यस्ता तपाईंको वन्दना गर्छु।

### मादृक्प्रपन्नपशुपाशविमोक्षणाय।

म पशु हूँ। कालको पासोमा फँसेको छु। अलिकति विचार होस्। जीव मात्र पशु हो। सबै कालका मुखमा फँसेका छन्। मलाई कालबाट बचाउनुहोस्। जहाँ काल हुँदैन त्यहाँ मलाई लानुहोस्। जहाँ काल छ त्यहाँ दुःख छ। जसको शिरमा काल छ, त्यो सुखी हुँदैन। जहाँ काल नहोस्, यस्तो आफ्नो निजधाममा लानुहोस्।

जो मानिस शरीर, पुत्र, मित्र, घर, सम्पत्ति र स्वजनहरूमा आसक्त छन्, उनलाई तपाईं पाउन अति कठिन छ, किनभने तपाईं स्वयं गुणहरूको आसक्तिबाट रहित हुनुहुन्छ। जीवन्मुक्त पुरुष आफ्ना हृदयमा तपाईंको निरन्तर चिन्तन गर्दछन्। सर्वज्ञान-स्वरूप, सर्वसमर्थ परमात्मालाई म नमस्कार गर्दछु।

नाथ, यस ग्राहको पासबाट छुट्कारा पाएर मलाई बाँच्ने इच्छा छैन। हात्तीको शरीरभित्र र बाहिर दुवै तर्फबाट आवरणले ढाकिएको थियो। यस्तो शरीरलाई राखेर के फायदा ? म यो आत्मप्रकाशलाई ढाकिदिने त्यो अज्ञानरूप आवरणबाट छुट्न चाहन्छु, जो कालक्रमबाट आफैं नाश हुँदैन। त्यसो अज्ञान-आवरण केवल तपाईंको कृपाबाट या तत्त्वज्ञानबाट मात्र नाश हुन्छ।

हे नाथ ! ममाथि कृपा गर्नुहोस्। शरणागतलाई रक्षा गर्ने हे प्रभु ! मेरो रक्षा गर्नुहोस्। म तपाईंको शरणमा आएको छु।

गजेन्द्र यसप्रकार कल्पेर श्रीहरिको स्तुति गर्दछ। ठूलठूला महात्माहरू गजेन्द्रमोक्षपाठ गर्छन्। जब कालले अँठ्याउँछ, तब जीव भयद्वारा व्याकुल भएर कसरी आत्तिन्छ, यस्तो विचार गरेर

गजेन्द्रजस्तै आर्द्र बनेर गजेन्द्रमोक्ष पाठ गऱ्यौ भने जीवन सुध्रिने छ। स्तुतिको एक-एक श्लोकमा दिव्य तेज भरिएको छ। यस स्तुतिलाई नित्य पाठ गऱ्यौ भने अन्तकालमा परमात्मा लिन आउनुहुनेछ।

प्रातःकाल पवित्र भएर जो व्यक्ति भगवान्‌को 'गजेन्द्रस्तुति' पाठ गर्ला त्यसको बुद्धि अन्तकालमा निर्मल रहनेछ। त्यसलाई अन्तकालमा पनि श्रीहरिको स्मरण हुने छ।

यस स्तुतिको पाठले मनुष्यलाई सङ्कटबाट मुक्त गराउँछ। यो स्तुतिले दुष्ट स्वप्न फलको नाश गराउँछ। यो स्तुति पाठ गर्नेलाई नराम्रो स्वप्नले दुःख दिँदैन।

यो जीव अन्तकालमा आत्तिन्छ। जब ऊ चेतनहीन हुन्छ, तब यमदूत उसलाई बाहिर झिक्दछन्। अन्तकालमा जीव अतिशय दुःखी हुन्छ। यस्तो समयमा ईश्वरस्मरण हुन सक्नु बड़ो कठिन छ। ईश्वरको कृपा भएमा उहाँको स्मरण हुन सक्दछ। त्यसकारण प्रतिदिन गजेन्द्रस्तुतिको पाठ गर। 'मत्स्यावतार चरित्रको पनि पाठ गर। मध्य-रात्रिमा 'रासपञ्चाध्याची' को पाठ गर। यसो गर्नाले प्रभुकृपाबाट कामले सताउने छैन।

गजेन्द्र प्रार्थना गरिरहेछ—'अब मलाई अविनाशी दिव्य शरीर दिनुहोस्। यमुना महारानीको कृपाबाट अलौकिक शरीरको नूतन तत्त्वको दान पाइन्छ। नाथ, कृपा गरेर मलाई अव्यय, अविनाशी तेजोमय शरीर दिनुहोस्।'

नाथ ! हजुर चाँड़ै सवारी होस्। हे गोविन्द, हे नारायण, म दीन बनेको छु। कालको मुखबाट मलाई मुक्ति दिनुहोस्।

जब त्यस गजराजलाई बचाउन ब्रह्मा आदि कोही पनि आएनन् तब परमात्मालाई चिन्ता भयो र स्वयं दगुरेर आउनुभयो। द्वारिकानाथ निराधारको आधार हुनुहुन्छ। अन्तकालमा संझना गर्नाले उहाँ दगुर्दै आउनु हुन्छ।

गजेन्द्रले श्रीहरि आइरहेको देखेर सरोवरबाट एउटा कमलको फूल लिएर भगवान्‌लाई अर्पित गऱ्यो।

तुलसी र कमल भगवान्‌लाई अति प्रिय छ। कमल ब्रह्माको सिर्जना होइन।

भगवान्‌ले त्यस कमलको फूललाई स्वीकार गर्नुभयो र आफ्नो सुदर्शनचक्रले ग्राहको बध गर्नुभयो।

ज्ञानचक्रबाट मात्र कालको नाश हुन सक्छ। यस्तो ज्ञान हुनुपर्छ जसले सबैमा भगवान् देखापर्नुहोला। जसलाई ब्रह्मदृष्टि प्राप्त हुन्छ, त्यसले सबै स्थानमा र वस्तुमा प्रभुको मात्र दर्शन गर्दछ।

ब्रह्मज्ञानी संसारमा कहीं पाइएलान् पनि, तर शुकदेवजी जस्तो ब्रह्मदृष्टि भएको भेट्ने थोरै मात्र होलान्। यस्ता ज्ञानीलाई संसार बाधक छैन। अज्ञानीलाई संसार बाधक छ, ज्ञानीलाई होइन। ज्ञानीलाई जगत् जगतै छैन।

मनुष्यलाई ज्ञानको अँध्याइबाट उम्कनु छ। भगवान्‌ले सुदर्शन चक्रबाट ग्राहको हत्या गरेको थियो, अर्थात् सुदर्शन भगवान्‌को दर्शनबाट कालको हत्या हुन्छ। सबैमा भगवद्‌दर्शन हुनु सुदर्शन हो। जब कालले समात्छ तब त्यसबाट कालका पनि काल भगवान् मात्र उम्काउन सक्नुहुन्छ।

सुदर्शनबाट कालरूपी ग्राहको नाश भयो। यसको अर्थ यही हो तिम्रो दृष्टि जब सुदर्शन अर्थात् सबैमा प्रभुको दर्शन गर्नेवाला होला तब तिमी कालको मुखबाट मुक्त हुनेछौ। अनि तिमीले पनि काललाई जित्ने छौ। यस्तो ज्ञानी पुरुषको कालले के बिगार्न सक्छ ? जसका हृदयमा सबैका प्रति भगवद्‌भाव जागृत भएको छ त्यो कालको मुखबाट मुक्त हुनेछ।

सबैमा श्रीकृष्णको दर्शन गर्दै-गर्दै उसलाई आफूमा पनि श्रीकृष्णको मात्र दर्शन हुन थाल्छ। आफ्नो स्वरूपमा श्रीकृष्णको दर्शन गर्‍यौ भने कालले तिमीलाई मार्न सक्नेछैन।

शरणमा परेका गजेन्द्रको जस्ता प्रकारले उद्धार गर्नुभयो, सोही प्रकारबाट शरणमा जानाले सबै जीवको प्रभु उद्धार गर्नुहुन्छ।

त्यो गजेन्द्र आफ्नो पूर्वजन्ममा इन्द्रद्युम्न नाउँ गरेको राजा थियो। ऊ ध्यानमा बसेका बखत त्यहाँ अगस्त्य मुनि आइपुगे। राजाले उठेर उनको स्वागत नगर्दा मुनिलाई यो व्यवहार अपमानजनक लाग्यो।

भगवान्‌भन्दा पनि बढ़ी उनका भक्तको सम्मान हुनुपर्छ। पत्थरको मूर्तिप्रति सद्‌भाव राख्नाले त्यो चेतनमयी हुन्छ भने चेतनका प्रति सद्‌भाव राख्नाले ईश्वरको प्राप्ति किन नहुने ?

अगस्त्य मुनिलाई नराम्रो लाग्यो र उनले सराप दिइहाले—'म आएपछि पनि तँ जड़ जस्तो भएर बसिरहिस्, त्यसकारण अर्को जन्ममा तँलाई पशुको जड़ अवतार प्राप्त हुनेछ।'

पूर्वजन्ममा गजेन्द्रले धेरै भक्ति गरेको थियो, त्यसकारण गजेन्द्र योनिमा पनि अन्तकालमा उसलाई प्रभुको स्मरण भयो र फलतः उसको उद्धार भयो।

जुन संस्कार मनमा दृढ़ भएर जम्दछ त्यो अन्तकालमा र आगामी जन्ममा पनि काम लाग्छ।

भगवान्‌को पहिले स्वप्नमा अनुभव हुन्छ। गोपाल सहस्त्रनामावलीमा भगवान्‌को एउटा नाउँ छ 'भक्तानां स्वप्न वर्धनः।' भगवान्‌ले गजेन्द्रलाई सारूप्य मुक्ति दिनुभयो, आफ्नो जस्तै रूप दिनुभयो। गजेन्द्रको जस्तै तिमीले पनि दीन र व्याकुल भएर गजेन्द्र स्तुतिको पाठ गर। अन्तकालमा श्रीहरि गजेन्द्रको जस्तै तिमीलाई पनि लिन आउनुहुनेछ।

छैटौं अर्थात् चाक्षुष मन्वन्तरमा समुद्रबाट जुन अमृत पाइयो, त्यसलाई भगवान्‌ले देवहरूलाई ख्वाइदिनुभयो। यस मन्वन्तरमा भगवान्‌ले अजीत नाउँबाट अवतार लिनुभएको थियो। समुद्र मन्थन गरेर अमृत निकाले। स्वयं विष्णुले कछुवाको रूप धारण गरेर मन्दराचललाई आफ्नो पिठ्यूँमा धारण गर्नुभो।

परीक्षित राजा सोध्नुहुन्छ—'भगवान्‌ले समुद्र मन्थन कसरी गर्नुभयो ? कछुवारूप लिएर मन्दराचललाई आफ्नो पिठ्यूँमा किन धारण गर्नुभयो ? उहाँले देवताहरूलाई कसरी अमृत ख्वाउनुभयो ? यस समुद्र मन्थनको कथा कृपया मलाई पनि सुनाउनुहोस्।'

शुकदेवजी वर्णन गर्नुहुन्छ—

'राजन् ! एक पटक इन्द्र यताउति घुमिरहेका थिए उनले बाटामा ऋषि दुर्वासालाई भेटे। दुर्वासाले इन्द्रलाई पुष्पमाला अर्पण गरे।'

साधु ऋषिले केही दिए भने सद्‌भावपूर्ण हुन्छ। त्यसलाई अस्वीकार नगरेर आदरसाथ ग्रहण गर्नुपर्छ।

इन्द्र सम्पत्तिको मदले विवेक भ्रष्ट भएका थिए, उनले मालालाई हात्तीको सूँड़मा फ्याँकिदिए र हात्तीले त्यसलाई गोड़ाले कुल्चिन लाग्यो। दुर्वासाले सोचे 'इन्द्रले मेरो र पुष्पवासी लक्ष्मीको अपमान गरिरहेछ।' तब उनले इन्द्रलाई सराप दिए—'तँ दरिद्र हुनेछस्।'

सम्पत्तिको मदबाट विवेक भ्रष्ट भएको व्यक्ति दरिद्र नभैकन फेरि विवेकी हुन सक्दैन।

इन्द्र दरिद्र भएर स्वर्गको राज्य दैत्यहरूले पाए, देवगणले भगवान्‌को भर गरेर उहाँसँग प्रार्थना गरे 'कुनै उपाय गर्नुहोस् जसबाट हामीलाई स्वर्गको राज्य फिर्ता आओस्। भगवान्‌ले समुद्रमन्थन गर्ने आदेश दिएर भन्नुभो—यसबाट प्राप्त हुने अमृत तिमीहरूलाई ख्वाएर अमर बनाउने छु। यो काम कुनै सजिलो छैन। यस काममा शत्रुहरूलाई पनि साथ लिनु अन्यथा तिनीहरूले बाधा उपस्थित गरिरहनेछन्। दैत्यहरूका साथ मैत्री गरेर उनको प्रशंसा गर्नु, उनीहरू अभिमानी हुन्छन्, त्यसकारण आफ्नो प्रशंसा सुनेर ती मित्र बनिहाल्नेछन्।'

जसलाई ज्ञानरूपी भक्तिरूपी अमृत पाइन्छ त्यो अमर भइहाल्छ। देव र दैत्य अमृत प्राप्तिका निमित्त समुद्र मन्थन गर्न थाले। मन्दराचल पर्वतलाई मदानी र वासुकी नागलाई डोरी बनाइयो।

संसारै समुद्र हो। आफ्नो जीवनलाई मथ। समुद्रमन्थन जीवनकै मन्थन हो। संसाररूपी समुद्रको मन्थन गरेर ज्ञान र भक्तिरूपी अमृतको पान गर्ने अमर हुन्छ।

मनलाई मन्दराचल पर्वतजस्तो स्थिर गर। मन मन्दराचल पर्वत हो र प्रेम-डोरी वासुकी नाग हो।

सोह्रौं वर्षमा मनोमन्थन शुरू हुन्छ।

शिवपुराणमा एउटा प्रसङ्ग छ। शिवजीले कामदेवलाई आज्ञा दिनुभयो 'बाल्यावस्था र वृद्धावस्थालाई छोड़ेर मनुष्यलाई तिमी दुःख दिँदै गर।'

युवावस्थामा पूर्वजन्मको संस्कार बिस्तार-बिस्तार जागेर आउँछ। त्यस समयमा आफ्नो मनलाई मन्दराचल पर्वतको जस्तै स्थिर राख्नुपर्छ। मनलाई चञ्चल हुन दिनु हुन्न। त्यसका निमित्त कमसे कम तीन घण्टा भगवान्‌को प्रतिदिन सेवा गर।